# पं० बालकृष्णाचार्यस्य कनिष्ठ पुत्र

# नारायण प्रसाद आचार्य

पूर्व ४ नं० भोजपुरको खोटाङ्गको छुलवार गाउँघर भैहाल
के० २२/५६ दुर्गाघाट, (काशी) वाराणसी पां० नं० १

## राजिनामाको नक्कल तलछ

लिखित का० ई० डिल्ली ब्लाक नं० २१/४३२ बस्ने धर्म प्रचारक पं० कोमलनाथ उपाध्याय आगे तपाई पूर्व ४ नम्बर भोजपुर को खोटाङ्गको छुलवार गाँऊ घरभै हाल काशी के० २२/५६ दुर्गाघाट वाराणसी मा डेरा गरी बस्ने बेदाचार्य पं० बालकृष्णाचार्य जीबाट मेरो सर्वाधिकारमा रहेको मैले अनुवाद गरेको कोमलगीता मलाई छाप्ने सर्वाधिकार दिनु होस म भा० रु० २०००/- भारतीय दुई हजार रुपया पुरस्कार रुपमा तपाई लाई दिन्छु भन्नु भएको हुनाले भा रु० २०००/- भारतीय दुई हजार रुपया ली सो मैले अनुवाद गरेको कोमलगीता छाप्ने विषयमा सर्वाधिकारको स्वीकृत को अधिकार पत्र स्व हस्ताक्षर ले लेखी सही छाप गरी मैले पं० बालकृष्णाचार्य जी लाई सर्वाधिकार दिएँ । मैले मेरो मनोमानी खुसी राजीसित प्रकाशन गर्ने सर्वाधिकार दिएँ । इति श्री सम्वत् २०१८ साल मार्ग २०गते रोज २ शुभम् ।

सही कोमलनाथ उपाध्याय अधिकारी
काठमाण्डौ इलाका डिल्ली बजार ब्लाक
नं० २१/४३२ काठमाण्डौ (नेपाल) बस्ने

सहि-पं० कोमलनाथ उपाध्याय अधिकारी-का०उ० डिल्ली बाजार ब्लाक-नं० २१/४२३ काठमाण्डू (नेपाल)

श्री

# पञ्चरत्नगीता कोमलगीताको

## भूमिका

मेरा भाई-बहिनीहरूहो! यसअनन्तसंसारकोविशाल जनसमुदायमा 'श्रीमद्भगवद्गीता' को महिमा सुन्न न पाउने जन कत्ती न हुनन् , भूमिका लेखेर सर्वज्ञानप्रदायिनी अनन्तशक्तिशालीनी, ज्योति:स्वरूपिणी, भगवान् श्रीकृष्णालेगान गरियेकी, 'गीता' को परिचय गराउँन खोज्नु दीयाकोसानुज्योति हातमालियेर श्रीसूर्यलाईदेखाई चिन्हाउँन उमेद गर्ने बालककोकामजस्तै केवल हास्यास्पद र निष्फलकोचेष्टामात्र हुनआउँदछ, 'गीता' स्वयमेव प्रकाशमान् हुनाले आफ्नू परिचय आँफै दिई-रहेकी छन्, तथापि भूमिकाउपर अर्कोभूमिका लेख्नुपनि लेखकहरूको चलनसरह नै भयेको टाइम हुनाले पुस्तकहातमापर्नासाथ पाठकहरू पुस्तकका अरूकुनै विषयपनी न हेरी धमाधमपत्र पल्टायेरपहिलेभूमिका खोज्नलाग्दछन् यो चालचलनको बचावट र पाठकहरूको मनोविनोदकानिमित्त पनी यस शीर्षक हेड्इङ का तलतिर 'गीता' का विषयमा शब्द लेख्नु आवश्यक संझी बालचञ्चलताप्रकट गर्दछु ।

प्राचीन-अर्वाचीन ऋषि-मुनि-पण्डितहरुले संस्कृत आदि गरियेकाभाषाहरुमा 'गीता' का सारगर्भित, अमृतमय, मूलमन्त्रहरूकोस्पष्टीकरण आफ्नुबुद्धिको योग्यतानुसार टीका-टिप्पणी-व्याख्या-लेख-नोट इत्यादिबाटगरीसकेका र गर्दैपनी छन् , योसबदेख्नुसुन्नुबाट 'गीता'लाई हामी गुणातीतपरब्रह्मको एकाकारआदित्य-स्वरूपिणी कान्ति, अनन्तशक्तिमा् विश्व-सञ्चालकसगुणपरमात्माकी सृष्टि-स्थित प्रलयादिकर्ममा सँगिनी, विश्वलीलामा प्रवृत्त भयेका परमात्माले स्वलीलानिर्मित असंख्य प्राणीहरूमा रहेको किंकर्तव्य-विमूढ़ आत्मालाई असल बाटोको सूचना निमित्त बजाइएका बाँसुरीको सुरीलो दिव्य मनोहर आवाज, चराचर सबै भावहरूमा परमात्माकाअखण्डसत्ताको दिव्यमूर्तिदर्शन गरनाउँने

अलौकिक आँखा इत्यादि ज्ञानेनिद्रय जे पनी भन्नसकिन्छ।

हुन पनी भूमण्डलका धर्म-साहित्य भण्डारमा गीता नै एक अमूल्य अनुपम अद्वितीय रत्न छ यस्मा सनातन धर्मका मुख्य-मुख्य दार्शनिक विचार, वैज्ञानिक सिन्द्धान्त, धार्मिक तत्व नैतिक, उपदेश, ज्ञानयोगभक्तिकासाधन इत्यादि सबकोप्रतिपादन राम्ररी गरियेकोछ, भगवान्ले कुरुक्षेत्रको रणभूमिमा व्यामोह भयका अर्जुनलाई लडाईमा प्रबृत्त गराउँनाका निमित्त मात्र होइन कि दार्शनिक, नैतिक, सामजिक आर्थिक इत्यदि जटिल समस्याहरू पर्न आयेमा स्वकर्मबाट च्युत हुन् लागेमा संसारका मानवजातिका निमित्त पनी मार्ग देखाउने उपदेश गर्नुभयोको हो जस्तो अद्भुत चमतकारी, अनौठो, गीता-उपदेश छ यो उपदेश गर्ने भगवान् श्रीकृष्ण पनी उस्तै विचित्र-प्रभावशाली, कलाकुशल, महायोगी, कर्मपथदर्शक, राजनीतिज्ञ, शाशक-विजयी, योद्धा र सर्वकला-संपन्न इत्यादि सर्वज्ञ सब कुछ हुनुहुन्थ्यो,

दर्शनशास्त्रका अथवा ज्ञान अति उच्च आदर्श रहेकाले सबलाई जीवनमा सर्वोत्कृष्टकोटिका आध्यात्मिक भावपूर्ण विचार र सुकर्म तर्फ अग्रसर गराउँने, संसारलाई ईश्वरमय संझदै वैराग्यपूर्ण रहेर कर्म गर्नेलाई नै बन्धन नहुनाको एकमात्र साधन बताउँने, संसारभरका भाषाहरूमा सब भन्दामनोहर, अद्वितीव, दार्शनिक, परमात्माको गीत हुनाले भारतवर्षको धार्मिकसाहित्यमा अथवा समस्त भूमण्डलको मानवी-साहित्यमा पनी आफ्नू नीतिपूर्ण धार्मिक उपदेश द्वारा प्रामाणिक उत्कृष्ट सार्वभौम धर्मग्रन्थ नै हो भनी चिन्हाउने, मानव जीवनको सर्वस्व असार संसारको सार,वेद, उपनिषदादि शास्त्रसागरको मत्छ उती उती मनोहर दिव्य रत अधिकारी अनुसार उसको हातमा राखीदिने धर्मरत्नाकार, आँफु भित्र रहेका महाशब्दहरूको कालानुसार अर्थ बदलियेमा पनि मूलमन्त्र जो हो तेस्लाई कहिल्यै बदलिन न दिने, सनातन, धर्मका गूढ रहस्यहरूलाई सरल भाषाका थोरै शब्दहरूमा प्रकट गर्ने शक्तिरूप पनी हुनाले सृष्टिको प्रारंभदेखि आजतक गीता जस्तो अन्य अन्धकारमा उज्यालो गर्ने झल्झलाउँदो निर्मल हीरासमान उज्वल ग्रन्थ प्रकाशित भयोको र

हुने पनी छैन्, किन् भने दुःखी आत्मालाईशान्तिदिलाउनेआध्यात्मिक पूर्णावस्थालाई चिह्नाउँने, चराचरजगत्का गूढतत्त्वहरूलाईराम्ररी संझाउने, वर्णआश्रम-जातिदेश-स्त्री-शूद्रदि कसैमापनी भेद न राखेर सबका निमित्त योटै सद्गतिको बोध गराउँने, ज्ञान-भक्ति-कर्म-युक्त गीताशास्त्र नै सनातन वैदिक-धर्मरूपी विशाल कल्पवृक्षको बहुतै रसिलो र अमृत पदमा पुऱ्याउँने अमर फल हो,

हेर्नुहोस् प्राचीनयुग सबै स्मरणीय पदार्थहरूका गीता भन्दा सर्वश्रेष्ठ पदार्थ अरू कुनै पनी पाउँन सक्दैनौ, चाहे सार्वजनिक लाभदृष्टिले हेरौं, चाहे व्यावहारिक प्रभावको दृष्टिले, यस्मा यस्तो उत्तमर सर्वव्यापी ज्ञान छ कि, संसार-भरका भिन्न-भिन्न धर्म-कर्म-मतमतान्तरहरू पनी तछाँड् मछाड् सँग योटैमा गाँथिन आउँछन् अर्थात् मनुष्यजातिको उज्वल भविष्य वनाउनमा उपदेश गर्ने यो भन्दा बडेर मानव धर्मग्रन्थ अरू कुनै छँदैछैन, किनभने-अद्वैतवादी श्रीशंङ्कराचार्य, विशिष्टाद्वैतवादी रामानुजाचार्य, शुद्धाद्वैतवादी बल्लभाचार्य, द्वैताद्वैतवादी निम्बार्काचार्य द्वैतवादी मध्वाचार्य, आदिसब आचार्यहरूले परस्पर विरोधी सिद्धान्त राखेर पनी यस ग्रन्थलाई एक समान प्रामाणिक मानेर आफ्ना आफ्ना मतको तरीकाबाट संझाउँने चेष्टा गरेका छन् यत्ति मात्र होइन किं आस्तिक (भक्तिवादी) नास्तिक (अनिश्वरवादी) धर्मिष्ठ कर्मवादी वेदान्ती (ज्ञानवादी योगी) ध्यानवादी) इत्यादि सबले यस्मा समान आनन्दको अनुभव गर्दै आफ्नू आफ्नू रूचिका कुरा पाउँदछन् जुनसुकै जातिलाई पनी कल्याण मार्गको शिखरमा पुऱ्याउँनाका निमित्त गीताको उपदेश अद्वितीय नै हुनाले यस ग्रन्थको दिनपरदिन यस्तो महिमा बढ्दै-गयेको छ यस्मा कर्म भक्ति-ज्ञान इतिनोटै योगको न्याययुक्त व्याख्या छ कि यस्तो अपूर्व सार्वभौम धर्मकेवल गीतामामात्र देखापड़न्छ, यस्तो धर्मव्याख्या कहिल्यै अरु कुनै देशमा कसैले गरेकै छैन यो साधारण गाना होइन, भगवान् श्रीकृष्णले आफ्नू आत्मा प्रबुद्ध भयेको बखतमा इतिकर्तव्यताविमूढ भयेका अर्जुनलाई मानसिक विकास गराउँनाका निमित्त उपदेश गर्नुभयोको हो,

गीता को मनन गर्न चाहे त्यो जुनसुकै देश, भाषा, संप्रदाय, र मतमतान्तरलाई मात्रै व्यक्ति होस्, चाहे नास्तिकमा पनी नास्तिक व्यक्ति नै पो किन न होस् , गीता पढ्दैमा उस्को अन्तरात्मामा पनी यो भावना हुन लाग्दछ कि यो पुस्तकका रचयिता साक्षात् भगवान् नै हुन्; अर्को होइन, अर्थात् उसका आत्मामा अनिर्वचनीय, अलौकिक, दिव्यशक्तिको ज्योति वा ज्ञान जगमगाई छोड्दैन-गीताले उस्का हृदयमा रहेको सन्देहरुपी राक्षसलाई अवश्यमेव मारिदिन्छे।

गीता आफ्नै तेजले प्रकाशमान छ। यस्को प्रकाश र ज्योतिलाई मलिन गर्न सक्के अरूकुनै तेस्तो चीज संसारमा उत्पन्न भयेको छँदैछैनयस्को हरएक मन्त्ररूप सूत्र पवित्र-विचारहरूले सुन्दर, प्रत्येत्म्वाक्य विचार-परस्परलाई वृद्धिगराउँने र हरएक अध्ध्ययमापनी क्रमवद्धहुनाले आध्यात्मिकभाव पनीएक छेउबाट अर्को छेउ सम्पलगातार पुगेको छ यस्तादिव्यज्ञानको खानिस्वरूप गीताको तत्व जानेर यस्का दार्शनिक विचारहरूलाई आफ्ना जीवनको एक अंग बनाउँन चाहने पुरुषले एकाग्रचित्त भयेर शुद्ध हृदयले बारम्बार गीताको पाठ गर्नु पर्दछ गीताको ज्ञानरूपी अगाधसमुद्रमा डुवेर तेस्को गहराई थाहा पाउँने यस्का उपदेश हरूलाई कार्यहरूमा परिणत्त गर्ने र यस्मा कहियेका कर्मयोग अनुसार आचरण गर्ने पुरुश साँच्ची नै धर्मात्म र धन्यवादको पात्र मात्र होईन किन्तु परम पुरुषार्थी पनि हो।

मनुष्यहरूको आयुमा जीवन-नाटकको कष्टमय प्रसंग एकदिन न आई छोड्दै-छोड्दैन त्यो दृश्य नगीच आई पुगे पछी भित्र कुवृत्ति र वासनाहरूको अधिक्य हुनाले बुद्धि चक्कर खान लाग्छ र मनुष्य किंकर्तब्यमनुष्यविमूढ भयेर ईश्वर का अस्तित्वको ऊपर पनी मन हटाई अकर्मण्य हुन लाग्छ, तेस्तो बखतमा ज्ञानबाट शान्त्वना पाऊँनलाई असल कुराको खोजी जरूरै हुन्छ ता पनी असल गुरुआयेर शान्त्वना पाउँनलाई सबै अर्जुन जतिकै सौभाग्यशाली छैनन्,उनीहरूका निमित्त 'गीता' परम गुरु नै हो श्रद्धा-भक्तिले युक्त भयेर गीताका अमूल्य उपदेशहरूको उपयोग गर्नाले कर्म गर्दा प्रतिदिन निष्फलता नै होस् ता पनि यस्मा सफलताका किरणहरू झुल्केकै देखेर फेरी त्यो पुरुष

कर्मण्य हुन सक्दछ पतित मनोवृत्तिले पनी फेरी पवित्ररूप धारण गर्न सक्दछ। अर्थात् आध्यात्मिक पूर्णतालाई प्राप्त गरी सकेकाहरूको कुरा परै जान दिउँ बाकी सब मनुष्य संसारका वशमाहुन्छन् मानिसले इच्छा पूर्वक अथवा केही उद्देश्यलाई लियेर कुनै कर्म गरोस् ता पनि संस्कारहरूकावसमा अवश्य नै फस्दछ शुभकर्म हरूबाट असल संस्कार र अशुभकर्महरूकाखराबसंस्कार उत्पन्न हुन्छन् तर संस्कार चाहे जति सुकै असलपो किन नहुन् ? कहां सम्म तिनीहरूको पूर्णरूपले नाश हुँदैन अथवा तिनको भोग भोगियोइन त्यहाँ सम्म तिनीहरू जुनसुकै जीवात्माको आध्यात्मिक उन्नतिमा बाधक नै बनी रहन्छन् हेर्न होस् नेल चाहे, सुनका हुन् चाहे फलामका वास्तविक तिनीहरू नेलै त हुन् सुनका नेलहरूको पनी बन्धनसुख हुँदैन यस निमित्त जसलाई बन्धन बाट मुक्त हुन् को इच्छा छ, तेस्लाई सुनकानेल पनि उत्तिकै भारी हुन्छन् जतिको फलामका अनि तिनिहरूलाई तोडनाको निमित्त तेस्ले तेत्तिकै व्याकुल हुनुपर्नेछ यसबाट यो परिणाम निस्कन्छ कि कर्म गर्दा आफ्नू मनोवृत्तिलाई यस्तो बनाईलिनू कि जसबाट चित्तमा जस्को संस्कार उत्पन्न हुनै नपाओस् र नयाँ बन्धनहरूकोफन्दामा फस्नुन परोस् ।

पहिलेसबैले संसारलाईसुखमय नै ठहऱ्याइयेकोहुन्छ, तर त्यो बखत पनि आउँदैछ कि सांसारिक जीवन बन्धनमात्र रहेछ यस्मा बाँधिये पंछि दुःख शिवाय अक्षय सुख को प्रेम कहिल्यै छैन यसरी सांसारिक बखेडाहरूले अधिक कष्ट भयेको बखत आफूमा ज्ञानको अभाव हुँदा कुन रीतिले कर्म गर्दा आनन्दको अनुभव होला भनेर जात्रा को इच्छा हुन्छ, तेसै बखत गीताबाट ज्ञान र कर्म गर्नाको नियम जानिन्छन [illegible] सारा कर्मको उत्पत्ति भयेकोछ,

अब यो प्रश्न हुन सक्दछ कि काम गर्न यस मनोवृत्तिको स्वरूप के हो? कसरी काम गर्नाले संसारको बन्धनमा फस्नु पर्दैन? लागी परेन भने पारमार्थिक वा लौकिक कुनै कार्य पनी सिद्ध हुनु सम्भव छैन मनुष्य होस् वा पशु-पक्षी कीरो जो सुकै होस मनमा फलाशा अंकुरित नभई केही पनिकाममा प्रवृत्तहुँदैनन्, बिबेकबुद्धिसम्पन्न हुनाले सबै जीव

हरुमा मनुष्य प्राणी उच्चतर छ, मनुष्यहरूमा श्रेष्ट सुक्ष्मबुद्धि भयेको पुरुष पनी यो कर्ममय संसारमा कर्म न गरी एकक्षण पनी खाली रहन सक्दैन् (गी३/४/५) बाट स्पष्ट थाह हुन्छ कि मनुष्यले आफ्नू जीवनकालमा कर्मको स्वरूपैबाट सर्वथा परित्याग कहिल्यै गर्न सक्दैन कर्ममात्रलाई त्याग गर्देमा मनुष्य निष्कर्मा पनि हुँदैन न त कर्महरुको त्याग पनि हुन सक्दछ। मनुष्य चाहे सत्कर्ममा लागोस चाहे दुष्कर्ममा चाहै दुबैलाई छोडेर केही कालका निमित्त मौनधारण गरोस त पनि त्यो मौनधारणरूप कर्मको कर्ता नै हुन आउँदछ जहाँ सम्म देह रहन्छ त्यहाँ सम्म कर्मत साथमा छदैछन् परन्तु यावत कर्ममा केही न केही दोष अवश्यमेव रहन्छ, मुक्ति भने को चीज निर्दोषीलाई मात्र मिल्दछ भने अब कर्मबन्धन (संस्कार) अर्थात् दोषस्पर्श बाट कसरी छुटकारा पाउने? शारीरिक वा मानसिक जुनसुकै चेष्टा पनि कर्म हो, कर्म गरेरपनी मनुष्य कसरी बन्धनमुक्त हुन सक्दछ? इत्यादि, कर्मयोगको अभ्यास गर्नु अर्थात् यस्तो निःस्वार्थ भावले तथा निरपेक्ष भयेर कर्म गर्नु कि जसबाट कर्मका फलमा आसक्ति न रहोस् "निष्काम कर्म गर, यज्ञार्थकर्म गर, कर्मफललाई त्याग गर फलासक्तिलाई छोड र गर कर्म निराशी बनेर कर्म गर, निष्काम कर्म गर" इत्यादि गीताले दियेको-कर्म-स्वरूप र प्रत्युत्तरको मधुर ध्वनि हो यसलाई कहिल्यै बिर्सन हुँदैन बिर्सेमा आत्मद्वेषि भनेमा अत्युक्ति हुदैन ।

अब यदि कर्मको फल तिर दृष्टि राखियेन भने मानिस, निरूत्साहिहोला र कर्म गरिएन भन्ने आक्षेपको समाधान यही छ कि तेही कर्तव्यकर्म जब मानिस म ईश्वरका आज्ञाले गर्दछु उनैलाई अर्पण गर्दछु भनने यस्तो भावानाले गर्न लाग्यो भने तेस्को उत्साह र धैर्य कदापि घटने छैन अर्थात् सन्देह छैन कि कर्मत्यागको कोटिमा न पुगी कर्म छोड्ने फुरुषको अधो पतन र ईश्वराज्ञानुसार कर्म गर्दै फलत्याग गर्नेपुरुषको अवश्यमेव उत्तरोत्तर वृद्धि हुँन हुनेछ सन्देह छैन ।

गीताको आशय आत्मार्थीलाई आत्मदर्शन को अद्धितीय उपाय प्रकट गर्नु नै हो, अनेकरूपमा यताउती छरिये का धर्मरूपी रत्नलाई गीता ले स्वयमेव सुवर्णरूपी धागो बनेर कति राम्रो तवर संग उनीदिये

को छ? हेनुहोस् हामीलाई यो संसार दु:खमय जस्तो लाग्छ त पनि वास्तवक यो दु:खमग्न छैन यस्को यो स्वरूप केवल बाहिरो हो, यस्का भित्र परमात्मा को जो आनन्दलीला चलीरहेको छ, तेही लीलाको आधारमा जगतको साराबाटो काम चलीरहेछ यो आनन्द खोज्नलाई ऋषिमुनिहरूले बताये माफिकको चलेर यो मानवजीवनलाई दिव्य जीवनमा परिणत गर्दैभगवानका यस लीला का रसानुमय संसारमा रहेर पनी उन्का लीलाको संपूर्णरूपले साथी हुँदा बने आँफूभित्र रहेको उनको सत्तालाई कर्ममय जीवन द्वारा प्रकाशित गर्दै गर्नु-पर्दछ, अर्थात् यो कर्ममय जीवनबाट पृथक रहेर हामीले जगत्पतिका निगूढतम आनन्दलीलाको रसास्वादन गर्न सक्दैनौ, यस निमित्त हामीले चराचरसृष्टिका अणुअणुमा ईश्वरका सत्ताको अनुभव गरी सके पछी मात्र सच्चिदानन्दरूपी परमात्मालाई पाउँन सक्दछौ, अर्थात् प्रवृत्तिमार्गबाट जाँदाजांदे अन्त:करण शुद्ध भयेर तेसैको रूपान्तर निवृत्ति ।(विश्रान्ति) मा पुग्दछौं, तेसैलाई ज्ञान, आत्मसाक्षात्कार परमात्मदर्शन, मुक्ति, मोक्ष, निर्वाण इत्यादि सब कुरा भन्न सकिन्छ ।

कर्म गर्नु त भन्दछौ वास्तविक कर्म भनेको के हो? त्यो कस्तो के रूपको छ? भन्ने शंक्षा जरूरै उठ्न सक्दक्ष भगवानको आज्ञानुसार (गी.४/१७) बाट कर्मका पनी कर्म विकर्म अकर्म ई ३ नाम हुन्छन् ईश्वर को आशय के हो: यो निर्णय गर्नलाई बुद्धिले चक्कर खान्छ त पनि विचार गर्दा जो संझछु सोही लेख्दछु-

मन बोली र शरीरबाट हुने, यस लोक परलोकमा सुख, दिने असल कामको नाम 'कर्म' दुवै लोक र परलोकमा खराब फल दिने काम 'विकर्म', दुवै लोकमा कुनै पनी फलउत्पन्न नगर्ने काम वा कामको अभाव अकर्म हो भनी विद्वानहरू बताउँछन् , तर यत्तिकै कुरा हो भने सर्वधारणका समझमा न आउने रहस्य परी त के भयो र? (गी.४/१६) मा कर्म र अकर्म के हुन् ? इनका विषयमा बुद्धिमान पुरुष पनि मोहित हुन्छन् भनी किन इनलाई भगवानले त्यसरी गहन छन् भनेर आज्ञा गर्नु भयेको? यसबाट सिद्ध हुन्छ कि मन बोली-शरीरको को स्थूलक्रिया वा अक्रिच्याको नाम नै कर्म, विकर्म र अकर्म होइन

काम गर्ने पुरुषका भावहरूको अनुसार जुनसुकै पनी कर्म विकर्म अकर्म को रूपमा परिणत हुन सक्दछ साधारण तबरबाट तिनोटैको भेद यो तल दिये-बमोजीम संझन सकिन्छ (कर्म विकर्म स्वरूप)।

(१) फलको इच्छाले शुद्ध भावनापूर्वक (गी.१६/२४) बाटजो विधिसंगत बढ़िया कर्म गरिन्छ तेस्को नाम कर्म हुन्छ ।

(२) फलको इच्छा लिई खराब नीयतले जो यज्ञ तप दान सेवा आदि गरिन्छ विधेय कर्म हो त पनी तमोगुण प्रधान (गी.१७/१९) बाट बिकर्म (पाप-कर्म) नै हुन्छ ।

(३) फलमा इच्छा न राखी ईश्वरार्पणबुद्धिले आफ्नू कर्तव्य संझेर (गी.९/२९,२८,१२,१०,५५) बाट जो कर्म हुन्छ तेस्ले र परमात्माको अभिन्नाभावले रही कर्तापनको अभिमानले रहित पुरुषबाट हुने (गी.३/२८, ५/८-९,१४/४९) यस्ले पनी मुक्ति बाहैक अरु फल उत्पन्न न गर्न हुनाले कर्म हो त पनी अकर्म नै हुन आउँदछ।

## विकर्मको

## (कर्म-विकर्म-अकर्म-स्वरूप)

(१) ऐहलौकिक वा पारलौकिक फलेच्छापूर्वक शुद्ध नीयतले गरिने हिंसादि कर्म जो कि देखदा विकर्म जस्तै लाग्दछ त पनी बास्तविक (गी.२/३७) बाट 'कर्म' नै हुन्छ।

(२) असक्ति र अहंकारले रहित भयेर कर्तव्य प्राप्त भयेमा शुद्ध नीयतले गरिने हिंसादि कर्म विकर्म जस्तै देखिन्छ त पनी फलोत्पादक नहुनाले (गी.२/३८,१८/१७) बाट 'अकर्म' भन्नु पर्दछ।

## अकर्मको

## (कर्म-विकर्म-अकर्म-स्वरूप)

(१) मन बोली शरीरका सब क्रियालाई त्यागेर एकान्तमा बसेको क्रियारहित साधक-पुरुष जस्ले आँफुलाई सारा कर्महरूको त्यागी

संझन्छ, तेस द्वारा स्वरूपबाट कुनै कर्म भयेको देखिदैन तापनी त्यागको अभिमान रहेको हुनाले तेस्को त्यो त्यागानुरुप 'कर्म' हुन्छ अर्थात् तेस्को त्यो त्यागानुरुप अक्रिया (अकर्म) हो त पनी कर्म नै हुन आउदछ ।

(२) कर्तव्य प्राप्त भयेमा पनी डर वा स्वार्थवशले कर्तव्य कर्मबाट हट्नु, निहित कर्महरू गर्नु र जनहरूलाई ठग्नाका निमित्त खराब नीयतले कर्महरू त्यागनु आदिमा स्वरूपबाट कर्म हुँदैन ता पनी यो अकर्मले दुखरुप फल उत्पन्न गर्ने हुँदा यस्लाई (गी.६/६, १८/७) बाट 'बिकर्म' भन्नुपर्दछ।

(३) परमात्मा का साथ अभिन्न-भावमा प्राप्त भएको, कर्तृत्वाभिभान सर्वथा नष्ट भयेको, यस्तो स्थितप्रज्ञ पुरुषको अन्तःकरण समाधिकालमा जो क्रियाको आत्यन्तिक अभाव छ त्यो अकर्म नै (गी. २/ २५, ५८)-बाट वास्तविक 'अकर्म' नै संझनु पर्दछ।

(कर्ताका भावहरूको अनुसार कर्म विकर्म-अकर्म यो रहस्य तत्व) जान्ने पुरुष नै (गी.४/१८) को भगवान् का मतले मनुष्यहरूका बुद्धिमान् योगी र संपूर्ण कर्म गर्ने पनी ठहर्दछ, यस कारण हामीले सांसारिक जीवनमा पर्व आउने देवसेवा, प्रभुभक्ति, पितृभक्तिःसबका ऊपर गर्नुपर्ने कर्म र जीवननिर्वाह आदि गरियेगा कर्महरू पनि छल, दम्भ ठगी परपीडा चोरी, हिंसा मर्मभेदन इत्यादि न गरी शुद्ध नीयत लिई गर्नाले पाप भागी बन्नुपर्दैन ।

गीतालाई निवृत्ति (संन्यासयोग) वा प्रवृत्ति (भक्तियोग र कर्मयोग) मार्गको उपदेशक हो भनी अनेक आचार्यहरूले वादविवाद गरेर आफ्नु मतको पुष्ट्याईलाई अनेक प्रमाण दियेका देखिन्छन् त पनी मेरो सानु समझमा त ई मार्ग अलग-अलग होईनन् , निवृत्ति पनि प्रवृत्तिको एक रूपान्तर मात्र हो शुन्द्ध नीयतलें प्रवृत्तिबाट चल्दा-चल्दै निवृत्ति रुप देखा परी हाल्दछ यसो हुनाले निवृत्ति भन्ने अर्को देखी मार्ग छँदैछैन जस्तो लाग्दछ, किन भने पहिले यो चराचर जगत् नै प्रवृत्तिमय (कर्ममय) छ, नत्र अव्यक्तमा लीन भयेको यस्को प्रवृत्ति (आदिर्भाव) र किन भयो? तेत्ति मात्र होइन कि परमात्मले राम-कृष्णादि जो-जो

अवतार लिनुभयो लोकलाई सुमार्गमा चलाउँनाका निमित्त न हो न भनी सुख पाइँदेन ती सबबाट पनी प्रवृत्तिकै प्रधानता देखिन्छ, तेस्तो होइन भनी भने पाप, कर्म-अकर्म, ज्ञान-अज्ञान, साधु दुष्ट इत्यादि शास्त्रले वर्णन गरियेका कुनै कुराको पनी व्यवस्था के हुन गयो/ तेस्रो सर्वशक्तिमान जगन्नियन्ताले सबैको एकबुद्धि किनगर्न सकेन र साधु-दुष्ट, (असल खराब), धर्म अधर्म देख्नु परेको हो? यसबाट यो सिद्ध हुन आऊँदछ कि ब्रह्माण्डमा रहेका भिन्न यावत् पदार्थहरू को मध्यशास्त्रहरूले वर्णन गरियेको असल काम धर्म र निषेध गरिएको काम अधर्म रहेछ भन्ने र तत् कर्म गर्नहरुले तत्- तन् टाइटिल पाउँदा रहेछन् भन्ने और जतनलाई पारस्परिक ज्ञानदिई सुमार्गमा प्रवृत्त गराउन पुरुषोत्तम ईश्वरको हरेक युगमा प्रवृत्ति हुँदोरहेछ भन्ने पनी सरासरै भन्न सकिन्छ।

अब यही गीताको उदय र पर्यवसान तर्फ हेरौं 'लड़ाई' गर्दिन, संन्यास लिई भिक्षान्नले निर्वाह गर्दछु भनी हटन लागेकाका अर्जुनले भगवान् बाट उपदेश पाँउने बित्तकै काममा प्रवृत्ति भयेको देखँदा प्रवृत्तिप्रधानहोइन भनी कसरी भन्न सकिन्छ।

फेरीउता हेरौं- जगत् - रचनाका प्रधानाङ्ग महानुभाव वशिष्ठ, व्यास, बाल्मीकि, नारद, भृगु, देवतादि देवर्षि ब्रह्मर्षिहरूलाई र वैवस्वत, मनु ईक्ष्वाकु, जनकादि राजर्षिहरूलाई पनी निवृत्ति मार्गमा प्रमुख हुन् भनी हामीहरू बताउँछौं तर वास्तवमा तेस्तै भये आजतक हामीहरूले तिनीहरूको नाम-निसान र तिनीहरले हाम्रा ऊपरकरूणाले गरियेका उपदेशहरू पनी कसरी पाऊँदा हौं? अर्थात् तिनीहरू पनी जगत-बाहेकका थियेनन् यही कर्ममय जगत्मा रही जगत्को भलाईका निमित्त अनेक प्रवृत्तिमार्गको अनुसरण गँर्दै गराउँदै तेही प्रवृत्तिको रूपान्तर निवृत्तिमा पुगेका देखिन्छन् ।

श्रीकृष्ण भगवान को पनी सबै भन्दा अपूर्व र महत्वपूर्ण सिद्धान्त प्रवृत्तिमय (कर्मयोग) सिद्धान्त नै हो कि जसतो लाग्दछ किनभने ईश्वर का अवतारहरू अथवा धर्मसंस्थापकहरूमा वहाँले नै सब भन्दा पहिले कर्म गर्नु र आर्कालाई सेवा गर्नाको वास्तविक विधि

पनी (गी. ३/१९-२५) इत्यादिबाट देखाउँनु भयेको छ, नत्र स्वकर्तव्य कर्ममा विमुख भयेर संन्यासी बन्नलाई ठीकठाक परेका अर्जुनलाई अर्जुन? तिम्रो बिचार ठीक छ, म पनी तेस्तै ठह्ऱ्याउँछु यत्तिकै आज्ञा गर्नुभयेको भये एक-आधा श्लोकले गीता सकिने थियो भने तेसो नभनेर तेस्त्रो १८ अध्यायको गीता-उपदेश किन् गर्नु भयेको? यो सबबाट भगवान् को पनी, आसक्ति न लिई निष्काम बनेर असिद्धि-सिद्धि आदि द्वन्दहरूमा समभाव राखी स्वाभाविक कर्म गर्नैपर्दछ भन्ने राय रहेछ भनी मुक्तकण्ठले सरासरै भन्न सकिन्छ, अर्थात् गीताबाट संसारमा जस्लाई जे कुराको आवश्यकता पर्दछ, तेस कुरामा तेस्ले के गर्नु योग्य रहेछ ? भन्ने सबैका विषयका कर्तव्य ज्ञान पाउँन सक्दछौं।

वास्तवमा गीताको माहात्म्य बोली द्वारा वर्णन गरेर पार पाउँन सकिंदैन किनभने यो एक परम रहस्यमय ग्रंथछ यस्मा सम्पूर्ण वेदहरूको सारासार खिची राखियेको छ, यस्को संस्कृत अली-अली अभ्यास गर्दैमा मानिसले संझन सकिने सुन्दर र सरल छत पनी यस्को आशय शक्तिको गहिरो छ कि जिन्दगी भर निरन्तर अभ्यास गरी रहँदा पनी अन्ते पाउँन सकिंदैन, जत्ती जत्ती अभ्यास गर्दै गयो उती-उती नयाँ भावहरू उत्पन्न हुने हुँदा यो सर्वदा नयां नै बनी रहन्छ श्रद्धा-भक्ति सहित एकाग्र चित्तले बिचार गर्दा यस्का हरएक शब्दहरूमा परम रहस्य भरिएको नै प्रत्यक्ष हुन आउँछ, भगवानका गुण, प्रभाव र मर्मको वर्णन जुन तरीकाबाट यो गीताशास्त्रमा गरियेको छ तेस्तै अरु कुनै शास्त्रमा पाउँन कठिनै छ; यो अनुपमेय शास्त्रमा यौटा शब्दमात्र पनी सदुपदेशबाट खाली रहेको छैन ।

साक्षात् भगवान् श्रीकृष्णले गीता को महात्म्य गी, (१६/६८-७१) मा र महाभारतमा महर्षि श्रीवेदव्यास जीले पनी-

गीता सुगीता कर्तव्या किमन्यैः शस्त्रविस्तरैः

या स्वयं पद्मनांभस्य मुखपद्माद्विनिसृता ।

साक्षात् भगवन्को मुखारबिन्दबाट निस्केकोगीताको राम्ररी मनन गरे पुग्दछ अरु धेरै शास्त्रहरुको प्रयोजन पनि उत्तिकै हो इत्यादि

आज्ञा गर्नु भयेको छ।

जुनसुकैवर्णाश्रमधर्म पालन गर्ने व्यक्ति होस् त पनी परमेश्वरमा श्रद्धा-भक्तियुक्त हुनलाई भगवानले गी.९/३२ मा र स्वाभाविक कर्म हरु जात माफिकमा काम द्वारा ईश्वरमा पूजा गर्नाले मानिसले सिद्धि पाउँदछ, भनी गी.१५/४६ मा पनी आज्ञा गर्नभयेको हुँदा परमात्माको प्राप्तिमा सबैको अधिकार रहेछ भन्ने ज्ञात हुन्छ ।

परन्तु यो मर्म नजानीं हो वा किन हो? गीताको नाम मात्र सुन्ने अपठित व्यक्तिको कुरालाई परै जान दिऊँ पठित समाजमा पनीं गीता केवल सन्यासी जोगीहरुले मात्र पढने ग्रंथ हो यस्तो परम्परागत धारणा भई रहेको हुँदा केही गरी गीता पाठ गर्‍यौं भने तेस्को ज्ञानले घरवार छोडी झोली तुम्बा भिरेर छोरो जोगी बनी हिंडला भन्ने डरले हामीहरु आफ्ना बालबच्चाहरूलाई गीताको अभ्यासबाट वञ्चित गर्दछौं, तरयो विचार गर्न योग्य कुरा छ कि कर्तव्य-कर्तव्य मोह हुँन्दा (अल्मलिंदा) क्षत्रिधर्मबाट पराङमुख भयेर शिक्षाको अन्नले जीवन निर्वाह गरी सन्यास लिनलाई कटिबद्ध भयेका अर्जुनले जुन परमरहस्यमय गीताको उपदेशबाट आजीवन गृहस्थमा रहेर आफ्नु कर्तव्यको पालन गरे, तेस्तो गीताशास्त्रको यस्तो उल्टो जोगी बनाउँने परिणाम कसरी हुन सक्ला?

तात्पर्य यो हो कि गीता यो एक परम रहस्यको विषय छ यसवाट परम दयालु भगवान् श्रीकृष्णले अर्जुनलाई निमित्त गरेर सब प्राणीहरुका उपरको दयाले स्वकर्तव्यको बोध गराउँनु भयेको हो, श्रद्धाभक्तिले युक्त भई गीताको श्रवण-पठन-मनन द्वारा भगवान् को भक्ति गर्न अज्ञान निद्राबाट बिउँझेर शुद्धान्त:करण भई चाडै नै परमात्मालाई देख्न पाउँनेछौं ।

अब कोमलगीताको उत्पत्ति र प्रकाशमा केही संक्षिप्त कुरा दिनु पनी अनुचित होइन भन्ने संझी यो लेख्दछु-आज केही लगभग २७ वर्ष अगो मेरो उमेर १३ वर्ष को थियो, सम्वत् १९६३ सालदेखी संस्कृत पढनमा मलाई मेरा परम पूजनीय पिताजी मु० देवीदास उपाध्यायले आज्ञा गर्नु भयेको हुँदा त्यो विद्यार्थी-जीवनमा पनी श्रीमद्भगवद्गीता को

के ही नकेही अभ्यास गर्दथें, हाम्रा नेपाल सरकार को रानीपोखरी पाठशालामा व्याकरण पढ़ी १९७० मा काशी क्वीन्सकालेजबाट मध्यमा परीक्षामा उत्तीर्ण भयेर ७१-७२ मा साहित्याचार्यको खण्ड खण्ड परीक्षा पनी दिये, तेही मेरो विद्यार्थी-जीवनमा संस्कृत हिन्दी मराठी, गुजराती बंगाली-अंग्रेजी भाषाहरुको पनी केही अभ्यास गरेकोले तिनीबाट थोर, बहुत सार लिन सक्ने भयेको थियें, यस्तैमा हृद-रोगले ग्रस्त हुँदा आफ्नु घर पर्वत लंजुराज्य दुराडांडा गयेर ७२ फाल्गुनदेखी ७४ वैशाख ५ गतेतक बसें, यही अवसरमा पिताजीबाट गीताको अर्थ सुन्न मनसुबा गर्नु हुँदा मेरो बुद्धिअनुसार बिन्ती चढाई सके पछी वहाँले भन्नुभयो-बाबु! तैलेसंस्कृत पडेको छस् गीताको प्रतिश्लोकबद्ध गरी हाम्रो भाषामा लेख, मलाई श्लोक पाठ गर्नमा आनन्द लाग्द छ, मलाई मात्र होइन कि संस्कृत नजान्ने सबैले अर्थ जानी पाठ गर्न पाउँनेछन, उनीहरको समेत कल्याण हुनेछ'' यस्तो प्रेरणा ७३ आषाढमा भयेकोले चातुर्मास्य भर प्रतिश्लोक छन्दौबद्ध गरी गीता ११ अध्यायतक समाप्त गरेको थियें, तथापि दैशवश त्यो मेरो काम पूर्ण हुन पायेन, तेही ११ तकको १ प्रति पिताजीलाई टक्रयाई ७४ वैशाखमा राजधानीमा आयें, परन्तु राजधानीमा मेरो घरवार र जग्गा जमीन आयस्ता केही पनी नभयेको र पहाडको घरबाट मद्दत समेत हुन नसकेकाले जीवन निर्वाहका निमित्त अनेक रूपमा अर्थात् कहिले कसैको छोरा-छोरीहरूलाई पढाउँने गुरु, कहिले पुराण इतिहास हरुको अर्थ सुनाउँने पण्डित, कहिले सरकारको कर्मचारी फौजदारी मामिलाको न्यायकर्ता विचारी, कहिले यजमानबाट गरिनेदानको प्रतिग्राही सुपात्र दानेबाहुन, कहिले संस्कृत अंग्रेजी नेपाली आदि भाषाहरूको परस्पर ट्रांसलेशन गरी पढाउँने जानिफकार मास्टर कहिले बड़ो मूर्ख केही पनी नजान्ने योग्य पामर, इत्यादि बहुरुपी नामहरु पाउँदै-यो पूर्वोक्त जीवनका बीच-बीचमा परी आयेका सुखदुःखलाई समभावले सहन गर्दै (भोग गर्दै) राजा प्रजा कसैको अनिष्ट नचिताई ईमान धर्म नछोड़ी जस्ले जुन काममा लगायो, उसलाई तेस कामबाट खुशी नै गरायेर प्राणयात्रा चलाई गीताको पनी थोर बहुत

अनुशीलन गर्दै थियें ।

भगवद्गीताको नेपाली समश्लोक छायानुवाद, टीका टिप्पणी हेडिंग, भूमिका र माहात्म्यादि समेत लेखी सकेर कोमलगीता पूर्णहुन आयेकोले ८९ अश्विन २४/१ विजया दशमीको दिन परमात्मा श्रीकृष्णका चरणकमलमा समर्पण गर्न सकें, तेस्को ५ दिन पछी सम्वत् १९८९ साल आश्विन २९ गते रोज ६ को दिनमा ।

## श्री ३ महाराज जुद्धसंशेर जंगबहादुर राणाको राज्योदयको अवसरमा सिन्दूरयात्रामा

कोमलगीता श्री ३ महाराजका हजूरमा टक्र्याउँदा नजर भैंसकेपछी कार्तिक ४ गते ५ का दिन बोलाबट् भै हाजिर भएका बखतमा श्रीकम्यान्डर इन चीफ साहेब लगायत छोरा नाती जनरल कर्णेल साहेवहरू र श्री गुरुज्यू, पुरोहित, काजी सर्दारहरूस हितको सभामा राज भै सारा प्रजावर्ग ले दर्शन गर्न हाजीर भैरहेको अवस्था हाजीर भै आशीर्वाद चढाई दर्शनगर्नासाथ टेबिल माथीं रहेको कोमलगीता को पुस्तक बाहुलीबाट उठाई श्री ३ महाराजवाट निम्नलिखित प्रशंसा र पुस्तकहरू पनि बक्सियो!

(१) हेर! पंडितजीले १५/१६ वर्ष सम्म मेहनत गरी गीता कठोर विषय ग्रंथ आफ्नु मातृभाषा-उसमा पनी गीताका श्लोकको जुन छन्द छ उसैमा छाया श्लोक र गद्यमा टीका-टिप्पणीहेडिंग समेत तैयारगरी अपूर्व काम गर्नु भएछ आज सम्म हाम्रो नेपाली प्रजाले गर्न न सकेको यस्तो ठूलो काम गरेको हुनाले तपाई देखि म बहुतै प्रसन्न छु तपाईलाई धन्यवाद छ यस्तो अपूर्व काम गरेकोले दोसल्ला ओढाईदिन्छु भन्ने भै दोसल्ला ओढाई बक्सियो।

(२) त्यसपछी-तपाईलाई रु ५०० बक्सिस भयो, यस्तालाई न दिये कस्तालाई दिनु? यो देखेर अरूको पनी सुयोग्य काम गर्नामा उत्साह बढ्न जानेछ भन्ने भै मोहरू५०० पुरस्कार बक्सियो।

(३) तेस्को ४/५ मिनेट पछी-यो गीता पुस्तक१०००प्रति छाप्रा जो

खर्च लाग्दछ सरकारको खर्च लगाई छापेर हज्जारै किताब तपाईलाई बक्सिस बिक्री पर्ना तपाईले आफु खुशीबाट गर्नु यो गीता पुस्तक तपाईको नै रिजर्व भयो तपाई संग अधिकार न लिई कसैले प्रकाशन गर्न पाउने छैनन् भन्ने हुकुम बक्सियो।

(४) त्यसपछि- धर्मका विषयमा पनी ठूलो काम गरेको हुनाले अबदेखी तपाईले ह्माम्रो पल्टन र स्कूल-कालेजका छात्र-वर्गहरुलाई हफ्ता हफ्ता १/२ घण्टा धर्मविषयको उपदेश गरी धर्म भनेको चीज यो रहेछ भन्ने संझाई दिनुहोस् तपाई धर्मप्रचारक-पण्डित'' हुनुभयो भन्ने हुकुम भै त्यही दर्जाबाट मासिकवेतन (मैह्नावारी) १०१ पाउँने जागीर बक्सियो ।

त्यस्को केही बेर वाद-सरकारहरूबाट कार्य गरी बक्सिदा मोरु ३. दक्षिणा पाउने नम्बरी-पण्डित हुनु भयो भन्ने हुकुम बक्सियो।

यो सब कुरा मेरो योग्यताले होइन कि परमात्माको भक्तका ऊपर ठूलो अनुग्रहले मात्र प्राप्त भयेको हो किन भने गीतारूपी महासागरमा डूबेर अपूर्व रत्न नजर गराउँन सक्ने तेती ठूलो ताकत म जस्तो अल्पज्ञ व्यक्तिमा केही पनी छैन, न मैले ठूला दर्शनशास्त्रहरु पढेकोछु न वेदवेदान्त निरुक्त योगहरुमा मेरो प्रगति छ, न त ठूला-ठूला ऋषिमुनिहरुले वारम्बार अनुशीलन गरीरहँदा पनी अन्त्य पाउँन नसको चक्कर खानुपर्ने गीताका मन्त्रस्वरूप महावाक्यहरूको अर्थ संझाउँन सक्ने लेखनशैलीमाम छ, न त व्यावहारिक कर्ममा र कविता लेखनमा पनी प्रवीण छु तथापि गोरखपुर गीता प्रेसका गीतालीष्टमा हेर्दा एसिया यूरोप-अमेरिका-आस्ट्रेलिया इत्यादि महाद्वीपका ठूला-ठूला साम्राज्य (भारतवर्ष चीन जापान इंग्लैंड यूनाइटेड फ्रांस जर्मनी रुस इटली, आसट्रिया-आस्ट्रेलिया-तुर्की-अरब-फारस) इत्यादि मुख्य-मुख्य देशका संस्कृतादि अनेक भाषार लिपिहरुमा भिन्न-भिन्न १ प्रतिमात्र २००० गीता छापिएका र कुनै भाषाको संस्करण (एडिशन) १०/२० सम्म पुगेको और १ संस्करणमा ३०/४० हजार सम्म छापिएकाले मामूली तवरबाट अन्दाजी हिसाब गर्दा पनी ४०-५० करोड जती गीता प्रकाश भै सकेका टाइममा आफ्नु मातृभाषामा

अभाव हुँदा तुच्छातितुच्छ अल्पज्ञ व्यक्तिको यो सानु अनन्य भक्तिको पत्रपुष्परूप सेवा हो त पनी हाम्रो नेपाली राष्ट्रभाषामा पनि धर्मविषयको पाठ्यपुस्तक गीताको १ पुस्तक रहेमा आफ्नु आफ्नु-वर्ण-धर्म-धार्मिक परमेश्वरमा भक्ति गर्ने जान्नाले प्रजावर्ग को केही न केही कल्याणै हुनेछ'' भन्ने **प्रजावत्सल** श्री ३ महाराजका अन्तःकरणमा करूणा उत्पन्न भई पूर्वोक्त गीता प्रकाश गर्ने विषयमा हुकुम बक्सियेकोले कोमलगीता पढन देखन सुन्न पाउने सबै भाई बहिनी हरुबाट खुसियाली नै प्रकट गर्नु भएको हुनाले पनि मेरा पूजनीय, स्वर्गवासी पिताको भाषामा गीताश्लोक लेख' भन्ने आज्ञा साक्षात् परमात्माको नै प्रेरणा रहेछ र ईश्वरका उपर भक्तिको प्रभावले नै त जस्तो अल्पज्ञले गीता जस्तो परमरहस्यमय उपनिषद् ग्रंथको संसार भरमा देखिएका भिन्न-भिन्न भाषाहरूका २००० प्रतिमा आजतक देख्न नपाइयेका समश्लोकी छायानुवाद समेतको, कोमलगीता रचनागरी लेख्न सकेको रहेछु भने पनी संझेको छु।

यो कोमलगीता को पुस्तकमा पहिलो-प्रत्येक अध्यायको श्लोकहरुको विषय-विभाग (हेडिंग दोस्रो श्रीमद्भगवद्गीता संस्कृतमूल तेस्रो-उस छन्दमा संस्कृतश्लोकर्थबोधक समश्लोकी छायानुवाद नेपाली कोमलगीता चौथो संस्कृतगीताको सरल अर्थ भयेको नेपाली कोमलगीता पांचौ-कोमलगीतामा रहेका क्लिस्ट पदहरुको उपर अङ्कदिई सजिलै संग अर्थ संझियोस् भन्नाका निमित्त सब भन्दा तल कोमलटिप्पणी गनी राखेर तैयार गरेको छु, भाषाशब्दहरूनपाईयेको ठाउँमा कहीं पाइयेको ठाउँमा पनि छन्द अर्थ र विषयको अनुरोधले गर्दा विवश भई श्लोक टीका-टिप्पणी हरुको संस्कृतशब्दहरुको उपयोग र ठाएँ-ठाउँमा संबोधनादिको प्रयोग गरेकोछु ता पनी मर्मज्ञ विचारवान्हरुबाट क्षमा नै रहुँला भन्ने सझन्छु।

यो कोमलगीता लेखदा संस्कृतगीतामूल, शांकरभाष्यदेखी लियेर उपलब्ध जतीसब संस्कृतटीका र हिन्दी-मराठी-गुजराती बंगाली अंगरेजी समेतका भाषा टीका व्याख्याहरू हेरी मनन गरी बुद्धिले जो लिनसकेको सार आफ्नू विचारानुसार मैले लेखेको हुनाले

ती सब ग्रन्थकारहरुको र ती ग्रन्थ हेरी मनन गर्न शक्ने शक्ति जुन-जुन गुरुका अनुग्रहबाट मलाई प्राप्त भयेकोछ ती सब भाषाका महामान्य गुरुहरूको पनी म आजन्म अत्यन्त नै ऋणी छु,

भगवान परमात्माका मुखारविन्दबाट जुन अमृत निस्क्यो, खास तेही अमृतको बिन्दु यो कोमलगीता मैंले जस्तोको तस्ताको नै टुपुक्क पारेर राखी दियेको छु, जहाँ जे कुराको आवश्यकता हो, त्यो सब यस्मा परिपूर्ण छ कुनै कुरामा पनी त्रुटि छैन भन्ने अभिमान मैले लियेको पनी छैन लिन सक्ने कुरा पनी होइन; किन भने स्वभावैले मानिस हरेक विषयमा चुक्दछ, विशेष गरेर गहन भयेको अध्यात्म विषयमा चुक्रूता असंभव छैन। तथापि अहिले सम्म यौ कोमलगीता देख्न सुन्न पाउने जनौ अपाईहरू मध्यका पण्डित-अपण्डित, सर्व सज्जनकामुख कमलहरुबाट धन्यवादकै आवाज सुन्न पायेको हुनाले र पहिले गीता छाप्नु पर्ने भएको उस्मा संशोधनादि कर्म गर्नु पर्दा म नेत्ररोगले ब्याकुल र सुरदास समान भएको बखत मेरा पहिलेदेखिका मित्रवर, नेपाली भाषा का मर्मज्ञ सुयोग्य कवि शिरोमणि पण्डित लेखनाथ पोड्याललाई एक पटक यो हैरी दिनुहोस् भनी मैले आग्रहगर्दा बहाँले यो कोमलगीता को श्लोकनुवादमा विशेषध्यान राखी मेरो साथ साथैमा रही आद्योपान्त नै हेरे मलाई शतशः धन्यवाद दिनु भएको हुँनाले पनी भाषाको सौन्दर्य लेखनशैली रोचकता आदि गुण यस्मा नष्ट रहने छ कि? भन्ने पनी ठानेको छु।

गीताशास्त्र विषयज्यादा नै गहिरो हुनाले हरेक श्लोकहरूका-विषयविभाग, संस्कृतश्लोक, भाषाश्लोक भाषाटीका, टिप्पणी र तेस भन्दा पहिले भूमिका माहात्म्यादि समेत दिई पत्रानुसार वोध र रूचि हुन सकने प्रयत्न गरेको छुत पनि १।२ पटक आबृत्ति गर्दैमा यस्का विषयको पत्ता केही लाग्दैन-जती-जती अभ्यास गर्दै गयो, उती उती उत्तरोत्तर यस्का विषयहरू हृदयमा स्फुरण हुन न आउँदैमा छौः भनेर घृणा न गरी, छापदा संशोधनादि कर्ममा दृष्टि प्रमादले केही उच्चावच पर्न गए का अक्षरहरू रहेका भये पनी सच्चाई 'बालादपि सुभाषितम्' यस न्यायले सावधान पूर्वक आद्योपान्त नै तपाईहरूले पठन-पाठन-

मनन गरेर, तीतोलाई थूकने र मीठोलाई स्वीकार गर्ने गरी, आँफुलाई र मलाई समेत कृत्यकृत्य गराई, केही कुरा असंबन्ध ठहऱ्याउनुभयो र संयुक्तिक योग्य सप्रमाण दिई यस विनीत अल्पज्ञ व्यक्तिलाई सूचना गर्नुभयो भने पुनराबृत्तिको सौभाग्य भयेमा श्लोकविषय प्रमाण र वहाँहरूको नाम समेत राखी सच्चायेर छपाउँन पाउँला भन्ने ठूलो आशा राख्दछु भनी आग्रह गरेकोमा यो तृतीयाबृत्ति प्रकाशन हुँदा सम्म पनि कसैबाट केही सूचना न आएकोले त्रुटि रहेनछ कि ? भन्ने संझेको छुं

यो 'कोमलगीता' धर्म मूर्ति श्री ३ राजर्षि महाराजयुद्धसंशेरका अनुग्रहबाट प्रथमा बृत्तिमा ४०००, द्वितीयाबृत्तिमा ५००० प्रकाशित भएको थियो। त्यो २।३ वर्ष अधिदेखी समाप्त भै अत्यन्ताभाव भएको न धरै सज्जनहरूबाट हामीहरूले कोमलगीता पाएनौ भनी आग्रह गरि रहेकोले मेरो पनि प्रकाशन गर्ने आंतरिक इच्छा भै रहेको अवसरमा अकस्मात् काशीबाट बेदाचार्य, श्रीमान् पं० बालकृष्णाचार्यजी मेरो घरमा पाल्नु भै कोमलगीताका प्रेमीहरूले अत्यन्त आग्रह गरेका छन् उहाँहरूको अभिलाषालाई पूर्ण गराउनुपर्छ, तृतीयावृत्ति प्रकाशन गर्छु भनी इच्छा प्रकट गर्नु भएकाले वहाँलाई प्रकाशन गर्ने अधिकार २०१८ साल मार्ग २० गतेमा दी तृतीयाबृत्ति मा २००० प्रकाशन गरी कोमलगीता प्रेमी सज्जनहरूका करकमलमा उपस्थित गर्न पाउदा प्रकाशकको सहायता र हार्दिक सौजन्यताका ऊपर शतशः धन्यवाद अर्पण गर्दै आफुलाई कृत-कृत्य संझेको थियें पुनः संवत् २०१८ मार्ग २० गतेरोज ३ मा भा०रु०२००० लियेर सर्वाधिकार राजिनामा पं० बालकृष्णचार्य ज्यूलाई लेखेर दिये। २००० छापियो।

असारविरसः कायः सापायोऽयं क्षणक्षयो,

परोपकारेलेशेन याति संसारसारताम् ।(क्षे,)

विनीत-

पं० कोमलनाथ

श्रीः

# पद्मपुराणको-

# गीतामाहात्म्य सारः।

१८ अध्याय गीताको अट्ठार अध्यायले माहात्म्य वर्णन गर्ने पद्मपुराण उत्तर खण्ड १७५ देखि १९२ अध्याय सम्मका (८९१ संस्कृत श्लोकहरूको कोमलसार)

नमः परमात्मने.

पार्वतीले 'संसारमा पापको नाश गर्ने सबै भन्दा सार चीज के छ ? सुन्न पाउँ' भनी श्रीमहादेव सँग प्रार्थना गर्नु हुदा- 'अर्थी, यसै गरी लक्ष्मीबाट सोध्नी भयेमा भगवान् विष्णुबाट क्रमै सँग ५ अध्याय मुख १० अध्याय हात, १अध्याय पेट, २अध्याय पाऊँ भयेकी. १८अध्यायकी गीता नै भगवानकी अक्षररूपिणी, 'वाङ्मयी मूर्ति' हुन, इन्को सेबाले सारा पाप नाशिन्छन् , चीज इनै हुन् भनी इन्का १८अध्यायको पठन-पाठन श्रवणादि-सेवा द्वारा मानिसले के कस्तो फल पाथे थे? तेसको इतिहास कथा समेत दिखाई 'सार, पदार्थ' वर्णन गर्नु भयेको हुनाले 'गीता' भन्दा उत्तम सार र अंजमरी चीज कुनै छैन् '' भनी श्रीमहादेवबाट गीताका १८ अध्यायको अपूर्ण माहात्म्य सुनेर पार्वतीले पनी श्रद्धाभक्तिका साथ गीताजीको जपपाठ-मनन गर्नुभयेको थियो यो उनै परमात्माबाट वर्णन गरिएका 'गीता माहात्म्यको सार' हो हामीले पनी यो सब जानेर श्रद्धाभक्तिपूर्वक गीताको एकाग्रचित्तले श्रवण पठन-पाठन र मनन गर्नु योग्य छ.

## गीता प्रथमाध्यायको माहात्म्य-फल

महादेव आज्ञा गर्नुहुन्छ-हे पार्वती! पहिले यौटा जप ध्यान-पूजा-पाठ केही न गर्ने, मासु-मदिरा इत्यादि अभक्ष चीज खाने,

बडो विषयी, सुशर्मा नाम गरेको कुकर्मी ब्राह्मण थियो त्यो बाहुन सर्पले डसेर मर्‍यो र हजारन् नरकका भोग गर्दै गोरू भयेर जन्म्यो साह्रै दुःख पाई मर्न लागेका तेस गोरूलाई देखेर दया आऊँदा यौटी वेश्याले आफ्नू पुण्य दिई तेसैका प्रभावले यमराजबाट छुट्कारा पायेर पृथ्वीमा फेरी त्योपूर्वजन्मको कुरा संझने सज्जन ब्राह्मण भयेर जन्म्यो, तेस्ले 'मलाई दियेको कुन पुण्य हो?' भनी वेश्यालाई सोध्दा 'मलाई त्यो पिंजराको सुधाले जो सुनाउछ त्यही पुण्य दिएकी हूँ यस्तो त्यस्ले भनी, सुधासँग सोद्धा त्यो भन्दछ- म पूर्वजन्ममा विद्वान् भएर, पनी रीस-रागले गुणीको द्वेष गर्ने, मान्य गुरुजनलाई निन्दा गर्ने, बड़ो दुराचारी; ब्राह्मण थिये धेरै नारकीय भोग गरेर अहिले सुधा भै जन्मेको छु, कोही ऋषिकुमारबाट बारंबार पाठ गर्दा सुनेको थियें, व्याधाले चोरेर यहाँ बेचियेको हुनाले तेही सुनेको प्रथमाध्याय इनीलाई सुनायेकी हूँ, सुधाको यो कुरा सुनेपछी त्यो सुधा, ब्राह्मण र वेश्यालेपनी तेही पाठ गरी परमपद प्राप्ति गरेको 'पहिलो अध्याय गीता' को पठन-पाठन-श्रवण-मनन गर्नेलाई संसाररूपी महासागर तर्न केही मुश्किल पर्दैन. (श्लोक ५४)

## गीता द्वितीयाध्यायको माहात्म्य

पुरन्दरपुरमा देवशर्मा नामक कर्मिष्ठ एक ब्राह्मण थिये, तिन्लाई केही गर्दा पनी शान्ति मिलेको थियेन, सिद्धहरूको संगत गर्दा ब्रह्मज्ञान प्राप्त गर्नलाई कोही महात्माको उपदेशबाट तिन्लेसौपुरसहरका बाखा पाल्ने आत्मज्ञानी, मित्रबान्को आश्रममा गएर ती त्यस्तो ब्रह्म ज्ञानी भएको कुरो नम्रतापूर्वक सोद्धामित्रवान्ले भने कि-'हे देवशर्मा! सुन गोदावरीका तीरको प्रतिष्ठान पुरमा विक्रमनामक राजाको चाकरी गरी अनेक किसीमका दानहरू लिएर पेट पाल्नको मात्र उद्योग गरी बसेको,

दुर्दम नाम गरेको बाहुन थियो, त्यो मरेपछि धेरै नरक भोग गरेर भ्रष्ठाचारी बाहुनको कुलमा जन्म्यो र तेस्को विवाह पनी त्यस्तै भ्रष्टकुलकी कन्या सँग भयो त्यो स्वास्नी लोग्नेको आँखा छली नीच चाण्डाल जात सँग पनी व्यभिचार गर्ने गर्दथी, त्यो राक्षसी बृत्तीको पनी थी बुढी भए पछि एक्दिन तेस डाकिनीले काँचो ताजा रगत खाने मनसुबा हुँदा बनमा यौटा भोको ब्याधालाई मारेर खायेकी हुनाले मरेपछी धेरै नरकका यातना भोग गर्दै मेरा घरमा बाखी भएर जन्मी व्याधा बाघ भएर जन्म्यो. पूर्वजन्ममा त्यस्तो बैरको कारणले बाघले हमला गर्दा त्यो बाखी भाग्दै नदी का किनारामापुगी. बाघ पनी उहीं पुग्यो-त्यहाँ पुगनासाथ बाघ र बाखी दुबै शान्त भएर म बसेका ठाउँमा आये, तेस्को कारण मैले सोध्दा यौटा बानरले भन्यो अघी यहाँ बसेका सुशर्मा ऋषिलाई यौटा महात्माले गीताको द्वितीयाध्याय शिलामा लेखीदिएका थिए, तेस्को अभ्यास गरेर ती ऋषिले बसिएको ठाउँ हुनाले यो स्थान शान्त छ, यहाँ आयेपछि कसैको डर, भोक पियास, बेरभाव समेत केही हुँदैन यो कुरा सुनी, बाघ बाखीलाई सँगै लिएर, तहाँ गै, त्यो लेख हेरी उच्चारण गर्दा ती दुबै (बाघ र बाखी) मुक्त भये, मैले त्यही बारबार पाठ गरेकी हुनाले यस्तो तपस्याको सिद्धि (ज्ञान) पायेको हूँ गीताको दोश्रो अध्याय पाठ गर्नेलाई मुक्ति टाढा हुँदैन, तिमी पनी यही पाठ गर' भनी मित्रवान्ले भन्दा देवशर्माले पनी येही द्वितीयाध्यायको पाठ गरी शान्ति र कैवल्यपद प्राप्त गरेथे. (श्लो ६२).

## गीतातृतीयाध्यायको माहात्म्य

दण्डकारण्यमा यौटा सधैं रण्डीबाजी गर्ने जुबामा मस्त रहने, रक्सी खाने, सीकार खेल्ने र ब्यापारी काम गर्ने यस्तो दुराचारी ब्राह्मण थियो, खराब, आदतले धन जतीं सबै सक्यो र

चोरी गर्न लाग्यो, एक दिन ब्राह्मणहरूले यज्ञायाग गर्न भनी ठीक पारी राखेको धेरै धन चोरी गरेर जङ्गलमा पस्यो; तर चोरमाथि चकार लाग्यो के के त भने-डाकूहरुले तेस्लाई मारेर धन सम्पत्ति लिये कुकर्मले गर्दा त्यो ब्रह्मपिसाच भयेर धेरै संकट भोग गरी रहेको थियो, धेरै कालपछी तेस्को छोराले यो खबर सुनी उस्को उद्धार गर्न काशी जान लाग्दा बाटामा तेही मरेका ठाउँमा बास बसी तृतीयाध्यायको पाठ गऱ्यो तेस्का प्रभावले-बैकुण्ठबाट उत्तिखेरै विमान आयो र त्यो पिशाच मुक्त भई छोरालाई-'नरकमा परेका हाम्रा तृतीयाध्यायपाठको पुण्य दियेर उद्धार गर' भनी विमानमा चडेर गयो त्यहाँ उपदेश बमोजिम तृतीयाध्यायपाठको पुण्य दियेर ती नरकवासीहरू पापबाट मुक्त भएका देखदा आश्चर्य मानी यमराजले श्रीविष्णुकहाँ गयेर स्तुति गर्दै भने कि 'पापी पनी छुट्न लागे-अब म अर्कै काम पाउँ' यो सुनी भगवान्‌ले भन्नुभयो-'असल कामले गर्दा लोक उद्धार हुन सक्छ, मैले उद्धार गर्नुपर्दछ, फिक्री न मान, तिम्रो तेही काम छँदैछ, जाउँ यती सुनेर यमराज फर्के त्यो छोराले तृतयाध्यायको पाठगरेका प्रभावले ती सब कुलको उद्धार गरेर आँफु पनी विष्णुलोकमा गयेथे (श्लो ६०)

## गीता चतुर्थाध्यायको माहात्म्य

काशीमा परमज्ञानी भरत नामका ब्राह्मण थिये. तिनले एकदिन सहर बाहिर गयेका बखतमा रूख मनी खसेका दुईटा बयेरलाई खाली लत्त्याउँदा ती रूख ५।६ दिनैमा सुकेर ब्राह्मणका कन्या भै जन्मे सात वर्षका भएका थिए, तैस्तैमा एकदिन ती २ कन्याहरूले स्वेच्छानुसार बाटोमा हिंडन लागेका तिनै भरतलाई देखेर पाउ परी भन्न लागे-'हे महात्मन् ! हामी सबै अप्सरा हौं, इन्द्रका आज्ञाले सत्यतपा ऋषिको तपस्या भङ्गगर्न भनी

गोदावरीको तीर छिन्नपाप नाम गरेको तीर्थमा जाँदा हामीलाई ऋषिले श्राप गरे. नम्र भई प्रार्थना गर्दा उनै ऋषिका दयाले पूर्वजन्मको कुरा थाहा पाउने भयेर भएका थियौं तपाई का पाउको स्पर्शले मुक्त पनी भयौं किनभने तपाई गीताको चतुर्थाध्याय पाठ गर्नुहुन्छ, यो कुरा सुनी आश्चर्य भई भरत पनी तेही अध्याय जप गरेर मुक्त भयेथे, ती कन्याहरू पनी तेसै अध्यायका पाठले शापमुक्त भै स्वर्गमा जान पाएथे (श्लो ३८)

## गीता पञ्चमाध्यायको माहात्म्य

पुरूकुत्सदेशमा वेद जान्ने ब्राह्मणका कुलमा जन्मेको पिङ्गल नामको ब्राह्मण थियो आफ्नु धर्मकर्म छोडी नाच-गान-वादनको काममा लागी परेर गवैया उस्तादमा नाम कमाई राजाका दरबारमा समेत घुस्न पायो र एकान्तमा राजालाई सबैका विषयमा भए नभएका कुरा (चुक्ली लाउँने काम गर्दथ्यो फेरी आफ्नू भने परस्त्री भोग मानै नित्यै गर्नुपर्ने धर्मकर्म जस्तै थियो तेस्की बाहुनी पनी तेस्तै थिई त्यो बाहुन रातमा आफ्नै व्यभिचारिणी (बेसुल्ली) स्त्री द्वारा मारियो. चुक्ली र परस्त्री गमन गरेका पापले घोर घोर नरकहरूको भोग गरी बनमा गिद्ध भयेर जन्म्यो आखीर तेस्की स्वास्नी भगंदरादि अनेक रोग भएर साह्रै दुःख पाई मरी र नरक यातनाहरू भोगेर यही बनमा सुथी भएर जन्मी पूर्वजन्मको बैरभावले गर्दा गिद्धले त्यो सुथीलाई बेसरी चुच्चोले ठूङ्ने र नङ्ग्राले चिथोर्ने गर्दा खसेर पानीले भरीएको मरेको मानिसको खप्परमा परी र मरी तैपनी रीस नमरेर त्यो गिद्ध पनी त्यै खप्परमा आईपुगेको बेलामा ब्याधाबाट मारियो ती दुबै कुकर्मीलाई यमदुतले यमपुरीमा पुर्‍याये यमराजबाट दुबैलाई छोडी दिनुभयो र भन्नुभयो पनी कि पञ्चमाध्याय गीतापाठ गर्ने वटुनाम गरेका ज्ञानी ब्राह्मणका खप्परमा ठक्कर खाई मरेका हुनाले। तिमि दुबै विमानमा चढी बैकुण्ठमा जाओ, यती सुनेर आश्चर्य मान्दै तिनीहरु

हुन्नै मुक्त भयेर परंपदमा जान पायेथे, (श्लो. २४)

## गीता षष्ठाध्यायको माहात्म्य

प्रतीष्ठानपुरमा प्रजालाई छोराछोरी झैं संझी पालन तालन गर्ने, अनेकन, यज्ञयागहरु गरेर देवताहरूलाई सन्तुष्ट गराउँने धर्मात्मा र परमतेजस्वी ज्ञानश्रुति नाम गरेका राजा थिये तिन्लाई वरदान दिन भनी हाँसहरूको स्वरूपलिई आकाशबाट उँडेरआउँन लागेका देवताहरूको आपसमा बादविवादमा पर्दा ब्रह्मज्ञानी रैक्वमुनिको अगाड़ी यी राजाको जत्रोसुकै तेज ऐश्वर्य भए पनी सबै कुरा फिका नै हुन्छ' भन्ने कुनै हाँसहरूबाट माथिल्ला बुर्जामा बसेका राजाले यस्तो रैक्वको बयान सुनेर तिन्लाई खोज्न भनी मह नाम गरेको सारथीलाई खटाएर पठाये, त्यो सारथी तिन्लाई खोज्नाको निंति काशी गया प्रयाग द्वारकामथुरा-कुरूक्षेत्र रामेश्वर-बद्री-केदार इत्यादि तीर्थस्थानहरू घुँदै काश्मीरमा पुग्यो, माणिकेश्वर महादेवको सेवा गरेर, राजाको ढोकावाहिर पडी रहेको, गाडामुनीबसी, आङ्कन्याइ लडीरहेका, रैक्वमुनीलाई देख्यो उनी परमानन्दमा निमग्न भएका हुँदा परिपूर्ण थिये प्रश्नोत्तर गर्दा लक्षणबाट चिह्नी दर्शन गरेर फिऱ्यो, त्यो सब बृत्तान्त आयेर महाराजलाई बिन्ती गऱ्यो, त्यो सुनेपछी महाराजको सवारी भै, दर्शन गरी, 'तपाईंको यस्तो प्रभाव केले भयो?' भनी नम्रतापूर्वक सोद्धा-गीताको षष्ठाध्याय पाठले म यस्ता प्रभावशाली भएको हुँ, तिमी पनी त्यही पाठ गर्ने गर' भन्ने उपदेश पाई गीताको षष्ठाध्याय पाठ गरी ती राजा पनी मुक्त भयेथे, यो अध्याय जस्ले पाठगर्दछ, तेस्ले, विष्णुपदप्राप्त गर्दछ (श्लो. १८०)

## गीता-सप्तमाध्यायको माहात्म्य

पट्नामा शंकुकर्न नाम गरेको बनियाँ ब्राह्मण थियो, तेस्ले व्यापारबाट धेरै धन कमायो तै

केहीका निमित्तमा १ कौड़ी खर्च गरेन, त्यो धन छोराहरूल उछिट्याउनन् भनी जमीनमा गाड़ेको थियो, यस्तैमा चारों विवाह गर्न भनी कुल कुटुम्ब सहित भयेर गयेको ता त्यै रातमा सर्पले डसेर मऱ्यो त्यै धनको सझना भै रहेको हुनाले आँफैले गाडेर राखेका त्यै धनमा सर्पको जन्म भयेर बस्यो, एकदिन स्वप्नाबाट तेस्को माहिलो छोराले त्यो कुरा थाह पाई त्यहाँ खन्दा सर्प त्यहाँबाट निस्क्यो र 'श्रांद्धमा गीताको सप्तमाध्याय पाठ गराई मेरो उद्धार गर, अरू कुनै जप-पाठ-दान पुण्य-तीर्थ व्रत इत्यादिले हुन सक्तैन' भनी पुवालमा पस्यो, छोराले पनि श्राद्धमा त्यही पाठ लगाउँदा त्यो सर्प मुक्त भै कडोरौं धन छोराहरूलाई बांडोरपरंपदमा गयो, छोराहरुलेपनी त्योधनबाट देवालयधर्मशाला पाठशाला तलाउ पोखरी धारा बनाउने काम र यज्ञयागदानधर्मादि गरी आखीरमा मुक्ति पायेथे । (श्लो. ३४).

## गीता-अष्टमाध्यायको माहात्म्य

आमर्दकपुरमा मदिरा मांसु खाने, साधुसन्तको धन चोर्ने, वेश्याहरूमा लंपट भावशर्मा नाम गरेको ब्राम्हण थियो, गुण्डाहरूका संगतले ताडको मदिरा धेरै पियेको अजीर्णले मऱ्यो ताडको रूख भयो. पूर्वजन्मा हरेक वर्ष भैंसी-कलिपुरूष-घोड़ा इत्यादि प्रतिग्रह (दान) लियेर मोजमजा गर्ने. त्यत्रो धनलियेर १ कौडी दान नदिने, कुशीबल नाम गरेको ब्राम्हण र तेस्को कुमति नाम भएकी ब्राम्हणी पनि ब्रम्हराक्षस भयेर त्यही ताडको रूखमा आएर बसेको थिये एकदिन-हाम्रो उद्धार कसरी होला? भनी ब्राम्हणीले सोद्धा ब्राम्हणले अध्यात्मब्रम्हको कर्म न गरी हाम्रो उद्धार हुन सक्तैन' यती भने फेरी ब्राम्हणीले 'कि तद्ब्रम्ह किमध्यात्मं किं कर्म पुरूषोत्तम !, हे उत्तमपुरूष! त्यो ब्रम्ह भनेकोके हो? अध्यात्म भनेको के हो? 'कर्म भनेको के हो?' भनी सोद्धा यस प्रश्नमा गीताका अष्टमाध्यायको आधा श्लोका

उचारण गरिनाले ती दुबै दम्पती) मुक्त भएर गये. भावशमा पनी ताडको जुनीबाट मुक्त भई, आफ्नू स्वरूप धारण गरी, ती आधा श्लोक लेखेर, काशीमा गई, अष्टमाध्याय पाठ गरेर मुक्तभयेथे तिन्को कुकर्मले गर्दा नरकमा पर्न गएका आफ्ना सबै कुललाई त्यै कर्मबाट तिन्ले मुक्ति पनी दिलायेथे.(श्लो. ३२).

## गीता-नवमध्यायको माहात्म्य

माहिष्मती शहरमा वेदवेदान्त जानेका, बनि यज्ञयागादि कर्म गर्ने, आस्तिक ब्राम्हण थिए, तिन्ले ठूलो यज्ञमा बलि दिन् भनी ल्यायेका बोकोले हाँस्दै तिन्लाई भन्यो कि 'यस्ता नाशिने र जन्ममरणादि फल गराउँने भएका यज्ञले के गर्नु? म पनी पूर्वजन्ममा सज्जन ब्राम्हण थियें, यस्तै यज्ञयागादि कर्म गर्थे तै पनी मेरो यो दुर्दशा देखी हाल्यौ. हेर! मेरो छोरो बिरामी भयो र रोगशान्तिका निमित्त मेरी स्त्रीले चंडिकाई बोकाको बलि दिने भाकल गरेर बोको किनी ल्याउँनाका निमित्त म सँग प्रार्थना गरिन् किनेर ल्याई चंडिकाको मंदिरमा लगे जगदंबालाई खुसी गराउँन भनी यौटा बोको बलिदान गरे (काँटे) बोकाकी आमा (बाख्रा) ले मलाई श्राप गरीं. अरेरे अधम, बाहुन! शास्त्रमा हुँदै नभएको मार्गले मेरो छोरालाई काटिस् तँ पनी बोकै हुनेछस्' भनेर म तेस पापले गर्दा क्रमै सँग बाँदर-कुक्कुर-घोड़ा भई ती जन्ममा पनी तिनै छोरा स्वास्नीहरूकै पिटाईबाट मरेर नारकीय भोगहरू गर्दै अहिले बोको भएकोछु पूर्वजन्मको कुरा पनी संझन्छु! फेरी अर्को कुरा पनी सुन कुरूक्षेत्रका चन्द्रशर्मा नामक राजाले सूर्यग्रहणमा दान गरेका कालपुरूषदानका जोडीले दान लिने ब्राम्हण उपर हमला गर्न खोज्दा तिन्ले गीताको नवमाध्याय पाठ गरेका प्रभावले दबावले दबाउँन सकेन, त्यो देखेर आश्चर्य मानी ती राजाले, सोद्धा ब्राम्हणबाट त्यही पाठको उपदेश पाई ती दुबैले त्यही जपेर मुक्ति पायेथे तिमी पनी यो कर्म छोड़ 'त्यही जप, भन्ने

यस्ती वोकाकोउपदेश सुनेर माधव पनी बलियज्ञादि कर्म छोडी नवमाध्याय गीताको पाठ गरेर मुक्त भयेथे (श्लो.६०).

## गीता-दशमाध्यायको माहात्म्य

सुतपा नामक ऋषि निद्रावस्थामा आफ्ना खुट्टाले गुरूको बिछ्याउना छोयेका पापले ब्रम्हाको वाहन हाँस भये तिनी सौराष्ट्रदेशका तलाउका किनारमा आकाशबाट खस्दा आँफुलाई बहुतै काल्नो स्वरूप भएको फेरी साठी हजार भ्रमराहरू शंखचक्र गदा-पद्म ४ बाहुमा लिई, नीलो वर्ण भई, किरीट कुण्डल लगाई, मुक्त भएर गएका देखी आश्चर्य मानी टोलाएको बखत पहिलो जन्ममा सरोवदना नामकी ब्राम्हणी भएको मैना पाली पढाई रहँदा पतिका श्रापले दोस्रो जन्ममा मैना भएकी त्यो मैनालाई ऋषिकी कन्याले पालेको हुनाले ऋषिका मुखबाट गीताको दशमाध्याय सुनेका प्रभावबाट तेस्रो जन्मना पद्मवती नामकी अप्सरा भएकी, अप्सराको जुनीमा दुर्वासा ऋषिको श्रापले तेसै तलाउँमा पंचमुखी भयेर रहेकी, दशमअध्याय गीता सुनेको प्रभावले बोल्नसक्ने शक्ति भयेको, कमलिनीले भनिन् हे हाँस! हे हाँस! दिक्क न होऊ, न टोलाऊ, सुन-'यी अहिले उद्धार भै जाने ६०हजार देवताहरू अगाडी यहीं तपस्या गर्दा यौटी सुन्दरीको मोहले परस्परमा लडन्त गरेर मरी अनेकन जन्म र घोर नरकरू भोग गर्दै अहिले भ्रमरा भएका ऋषिकुमारहरू हुन्, तिनी आकाशबाट खसेको देखी दयाले 'हरे!' भनी मैले मुख बाउँदा निस्केका मेरो मुखका सूवासले तिनीहरू मुक्त भएर गये: तिमी पनि मलाई नाघेका पापले आकाशबाट खस्यौ र यसरी कालो भयौ अब गीताको दशमाध्याय पाठ गर, तिमी पनि मुक्त हुनेछौ' यती भन्दै त्यो अध्याय हाँसलाई सुनाई कमलिनी मुक्त भइन्-सुतपा ऋषि पनी तेही अध्यायकोपाठले हाँसको देह छोडी काशीमा शिवजीका अत्यन्त प्यारा भक्त धीरधी भन्ने ब्राह्मण भई

मुक्त भयेथे, मुनिहरू यो दशमाध्यायलाई प्रधान अध्याय हो भनी बताउँदछन (श्लो. ९९).

## गीता-एकादशाध्यायको माहात्म्य

मेवङ्करपुरमा गीताको एकादशाध्याय पाठ गर्ने सुनन्द नामका ब्राह्मण थिये, ती धेरै साथीहरू समेत भै गोदावरी तीर्थयात्रा गर्न जाँदा विवाहमण्डपपुर भन्ने सहरमा बास नपाईयेकोले तेही सहरको बाहीर धर्मशाला (पाटी) मा बसे, सहर बाहीरका पाटीमा जोजो वास बस्दछन् तिन्लाई मात्र यौटा ब्रह्मराक्षसले खाने कबोल गरेको थियो, सहरवासीहरूलाई खाँदैनथ्यो, रातमा तिन्का सवै साथीलाई तेसैले खायो त्यो राक्षस तेही शहरको ब्राह्मण हो, यौटा परदेशीलाई गिद्धले मार्न लाग्दा हेरी रहेका पापले ब्रह्मराक्षस भयेको थियो ती ब्राह्मण बिहान सबेरे उठी स्नानादि गर्न जाँदा त्यहीं आउँन लागेका ग्रामपालले तिन्लाई भेट्यो र भन्यो-'हे मुनि! मेरो छोराको प्यारो साथी परदेशी वस्ने सहरबाहीरका पाटीमा बास बस्न गयेछ, तेस्लाई ल्याउन भनी मेरो छोरो तेस पाटीमा जाँदा उसलाई पनी ब्रह्मराक्षसले खायेछ त्यो कुरा थाह पाई तेस राक्षस सँग रोई छोरो बचाउने उपाय सोध्दा तेस्ले भन्यो-मैले निल्न नसकी उकेलियेका एधारौं उध्याय गीता पाठ गर्ने ब्राह्मण यहीं छन् तिन्लाई ल्यायेर तिम्रा छोराको, अरूमैले खाइयेका सबैको र मेरो पनि उद्धार गर! अधी यौटा एधारौ अध्याय पाठ गर्ने मौनव्रती ब्राह्मणलाई चोरले मार्‍यो र गिद्धले तिन्को हाढ खसाल्दा एक साधारण पानी जमेको खाडल पनी सबैलाई मुक्त गराउने ठूलो तीर्थ हुन गयेको छ, पवित्र हुनाले त्यहाँ ऋषिमुनीमहात्माहरु पनी स्नान-सन्ध्यातर्पणादि गरी अफुलाई कृत कृत्य संझछन्' तेस्को यस्तो कूरा सुनेर म हजूरका शरण 'आयेको छु' यस्तो प्रार्थना सूनी सुनन्द ताँहा गयेर एधारौं अध्यायले ७ पल्ट पानी मन्त्री छ्यापदा ब्रह्मराक्षस र तेस्ले

खायेका सबै मानिस बिमान मा चढी मुक्त भयेर गये सुनन्द र ग्रामपाल पनी तेसैका पाठले परंपदमा पुगेथे एघारौं अध्याय सुन्नाले मात्र पनी महापातक नाँश भयेर जान्छ (श्लो. ११).

## गीता-द्वादशाध्यायको माहात्म्य

कोई धर्मात्मा साहसी राजकुमारले कोलापुरमा गई, महालक्ष्मीको भक्तिपूर्वक स्तुति गर्दै 'हे माता! मेरा अश्वमेघ यज्ञ शुरू गरेर समाप्ति न हुँदैमा रोग लागी स्वर्ग हुनुभयो, वहाँको शरीर तेलमा डुवाई मैले यज्ञको आरम्भ गर्दा सारा पृथ्वीमण्डल घुमेर आयेको मेरो यज्ञको घोड़ा रातमा कस्ले फुकाई, चोरी, लगेछ, खोजी गरेमा कहीं पत्ता लागेन, म शरणमा आयेको छु' भनी प्रार्थना गरे, लक्ष्मीका आज्ञाबाट ती राजकुमाले समाधिसिद्ध नाम गरेका मुनि संग गयेर यो सब कुरा विस्तार गरे, मुनिले द्वादशाध्याय गीता पाठका प्रभावले सबै देवताहरूलाई ताहीं आकर्षण गरी इन्द्रबाट त्यो घोड़ा तिन्लाई दिलाये यज्ञ गरेका स्थानमा गै राजकुमारको भक्ति र प्रार्थनाले गर्दा तेही अध्यायले जप मन्त्रेर लाशमा छ्यापी मरे का राजालाई जीवित गराई यज्ञपनी पूर्ण गराये त्यो अद्भुतशक्ति देखी आश्चर्य मानेका राजाले प्रश्न गर्दा-'द्वादशाध्याय गीताको निरन्तर पाठ गरेको प्रभाव हो' भन्ने कुरा ऋषिबाट सुनेर राजा राजकुमार र यज्ञ गराउने ब्राह्मणहरू पनी द्वादशाध्यायको जप पाठ गरी मुक्त भयेथे,(श्लो. ६२).

## गीता-त्रयोदशाध्यायको माहात्म्य

तुंगभद्रानदीको किनार हरिपुरमा हरिदीक्षित नाम गरेका सदाचारी ब्राह्मण' थिये तिन्की काम र नामले पनी दुराचारी ...की अत्यन्तै व्यभिचारिणी स्त्री थिइन् कोही गुण्डा संग ज्यादै ...क भएर सहर भन्दा बाहिर संकेत गरिएको बनमा राती

उस्लाई खोजी गर्दै हिंड्दा बाघ फेला पऱ्यो, जार पोई आई पुग्यो भनी खुशी भयेर अंकमाल गर्न जाँदा बाघका मुखमा परिन् र मरिन् तिनी परपुरूष संग भोग गरेको पापले यमराजका हुकुमबाट धेरै वर्ष संम विष्टा-मूत्र पीप रगतले भरीभराऊँ भयेको नरककुण्डमा डुबायेर राखिइन्, त्यहाँबाट निकालिएर रौरब नामका नरकमा र फेरी तैत्तिकै तिहाँ थिलो थिलो पारी आगोमा भुटिइन् अलाप बिलाप गर्दै यस्तै अनेक नरकहरूको भोग गरेर आखिर कुकुरको मासु खाने चाण्डालकी छोरी भयेर जन्मी, तेस जन्ममा पनी पूर्वजन्मका वासनाले जारपति संग नै भोग गर्न गर्दथी, तथापि एक दिन जार पोइलाई खोज्दै हिंड्दा जृभिकादेवीका मन्दिरमा वासुदेव नामका कुनै ब्राह्मणले गीता त्रयोदशाध्याय पाठ गरेको सुन्न पायेका प्रधावले चाण्डालको स्वरूपबाट मुक्त भयेर स्वर्गमा जान पाईथी. (श्लो. ६१).

## गीता-चतुर्दशाध्यायको माहात्म्य

सिंहलद्वीपमा बिक्रमबेताल नाम गरेका बड़ा पराक्रमी राजाथिये, ती एकदिन काश्मीरका शौरवर्मा नामक मित्र राजाले नजरानामा पठाईये को कुकुर्नीलाई लियेर सिकारमा गये, त्यो कुकुर्नीले लगार्दै लगेको यौटा खरायो हिलामा पऱ्यो, कूकुर्नीले ताहीं पुगेर झट्टै मारी वत्स ऋषिका चेला मेधावीले पाऊ धोये का तेस हिलामा पर्ना-साथ ती दुबै मुक्त भये, खरायो पनी देवतारूप लिएर विमानमा चढी गयो, कुकुर्नी पनी देवरूप लिएर विमानैमा बसेर गई, यस्तो देखेर आश्चर्य मान्नी सोध्ने भएका ती राजाले पूर्वजन्मको वैरभाव संझी मुसुमुसु हाँस्ने तिनै मेधावी ऋषिबाट 'यो खरायो अघी महाराष्ट्र भन्ने सहरमा केशवनामको जूवाडे बाहुन थियो यी कुकुर्नी तेसैको विलोभना नाम कीबेसुल्ली स्त्री थिई लोग्नेले रीसले कुट्ता कुट्दै स्त्रीलाई मारेको हुनाले र स्वास्नी पनी व्यभिचारिणी हुनाले ती दुबै ई जुनिमा प्राप्त भएका हुन् गीता

चतुर्दशाध्यायका प्रभावले मुक्त भए भन्ने यो इतिहास सुनेर श्रद्धापूर्वक ती राजाले पनी यही चतुर्दशाऽध्याय पाठ गरी निर्वाणपदवी लियेथे (श्लो. ४५).

## गीता पञ्चदशाध्यायको माहात्म्य

गौडदेशमा नरसिंहनामका राजा थिये, तिन्को सरभभेरुदण्ड नाम गरेको सेनापति, राजालाई मार्ने उद्योगको पापमय विचार गर्दागर्दै हैजा लागी मऱ्यो र सिन्धुदेशमा बहुतै लक्षणको, तेजी घोड़ा भयेर जन्म्यो, यौटा, व्यापारी बेच्न ल्यायको त्यो घोड़ालाई इनै राजाले किनेर एकदिन तेसैमा चढी सिकार खेल्न भनी वन तर्फ गए मृगको पींछा गर्दा सारा फौज छुटियो राजालाई पियास लाग्यो र बनमा घोड़ाबाट ओर्ली जलपान गरी यौटा ढुंगो माथी बसे. तेस मौकामा हावाले गीता पञ्चदशाध्यायको आधा श्लोक लैखेका यौटा पाता उँडाएर ल्यायो राजाले तेस पातमा लेखैको अक्षर बाँच्नाका साथ त्यो घोड़ा मुक्त भयेर दिव्य विमानमा चढी म जाऊँ है?'' भन्दै स्वर्ग तर्फ गयो राजाले आश्चर्य भै सोद्धा त्यही वनमा तपस्या गरी बसेका ऋषीका पुखबाट यो सब कुरा जानो सिंहबले नाम भएका छोरालाई राज्यको भार सौंपे र आँफुले तिनै ऋषिको उपदेशबाट पञ्चदशाध्याय गीताको पाठ गर्दै मोक्षपद प्राप्त गरेथे (श्लो. ४६)

## गीता - षोडशाध्यायको महात्म्य

गुजरातको सौराष्ट्र भन्ने सहरमा खड्गबाहु नाम गरेका राजा थिये एक दिन तिन्को अरिमर्दन नाम को हात्ती बहुलायेर माहुतेहरूले अनेक कोसिस गर्दा पनीं रोकिएन साङ्ला चुंडाली मानिसहरूलाई निमोठ् नामोठ पार्दै जथाभावी चाल संग चल्यो, जताततै हाहाकार फैलियेको र डरले सारा मानिस भागाभाग गरी रोका थिये यस्तैमा गीताको षोडशाध्याय पाठ गर्ने यौटा ब्राह्मण

सबले कराउँदा कराउँदै पनी त्यै हात्ती आउँन लागेको बाटो तिर सरासरै गयो तिन्लाई हात्ती ले केही पनी गरेन देख्नाका साथ शान्त भयो यो देखेर राजाले आश्चर्य मानी ती ब्राह्मणलाई-"तिमी कुन देवताको पूजा गर्दछौं? कुन मन्त्र जप्दछौ? केबाट यस्तो सिद्धि पायौ ?" भनी सोध्दा सबै कुरा गीताका षोडषाध्यायको पाठबाट भयेको हो' भन्ने कुरा ब्राह्मणबाट सुनेर तिन्लाई १ लाख असर्फी गुरूभेटी राखी शुभ मुहूर्तमा ब्राह्मणसित गीतामन्त्र लियेर जप गर्नलागे केही दिन पछी त्यो हात्ती फेरी तेसै गरी फुस्के र मानिस मार्दै हिड्यो राजा हात्तीका अगाडि तिनै ब्राह्मण गये झैं गरी जाँदा तेसै गर्दा शान्त भो, तेस पछी राज्यमा छोरालाई राज्याभिषेक गरायेर ती राजाले षोडशाध्याय पाठको प्रभावबाट अक्षयपद प्राप्ति गरेथें (श्लोक ४७)

## गीता-सप्तदशाध्यायको महात्म्य

उनै खड्गबाहु राजाका छोराका दुःशासन नाम गरेको नोकर त्यै बहुला हात्ती चढेर फुर्ति देखाउँदा खस्यो र हात्तीले दाह्रा कुल्ची मारी दियेको हुनाले त्यो हात्ती नै भई सिंहलका राजाकहाँ जन्म्यो, राजाले श्लोक बनाये को रीझाये वापतमा कविलाई त्यों हात्ती बक्सिस दिये, कबिले मालबदेशका राजाबाट मोल लिई बेची दिये त्यहां हात्ती रोगायो, केही पनी खांदैनथ्यो, आखिर मर्न लागेको बेलामा राजाको तेस ठाउँमा सवारी हुँदा हात्तीले के भन्यो भने-महाराज ! अब औषधी मूलो, दान, जप-पाठले केहीं पनि हुँदैंन, गीताको सप्तदशाध्याय सुनाई मेरो उद्धार गरी दिनुहोस' यो कुरा सुनेर राजाले पनी त्यो अध्याय ब्राह्मण द्वारा तेस्लाई सुनाई दिये त्यो सुन्नाका साथ हात्ती दिव्य शरीर धारण गरी, आश्चर्य मानेका राजा लाई आफ्नू पूर्ववृत्तान्त सुनायेर, विमानमा चढी स्वर्ग तर्फ गयो राजा पनी त्यही सप्तदशाध्याय गीताजप गरी थोरै कालमा मुक्त भयेथे (श्लो. २७)

# गीता अष्टादशाध्यायको महात्म्य

सुमेरूको शिखरमा रहेको अमरावती सहरमा शतक्रतु नामका इन्द्र सिंहासनमा रहेंका थिये, आफ्ना अगाडि विष्णुका दूतहरूले सहित भयेर विमानमा चढी आयेको यौटा पुरूषलाई देख्ना साथ तेस सिंहासन बाट उत्रे त्यो आयेका पुरूषलाई सबैले इन्द्र बनाये त्यो देखेर शतक्रतु आश्चर्य हुँदै विष्णु सँग गयेर-'तेस्ले तीर्थ-व्रत-जप-देवदर्शन-जप-ध्यान दान इत्यादि कुनै धर्म कर्म न गरीकन पनि कसरी-इन्द्र पदवी पायो?' भनी सोधे विष्णुबाट-'गीताको अष्टादशाध्याय पाठका प्रभावलेतेस्लाई इन्द्रपदवी मिलेको हो, 'भन्नु हुँदा शतक्रतुले पनी गोदावरी तीरमा रहेको कालिका ग्राममा बसेव्का कोही ब्राह्मणबाट तेही अध्याय सुनी; तेसैको जप-पाठ गरी, तुच्छ भयेकी इन्द्र पदवीलाई छोड़ी विष्णुको सायुज्य पदवी प्राप्त, गरेथे यो अट्ठारौं अध्याय पुण्य-पवित्र आयु बढाउने स्वर्गादि दिलाउँने' ठुलो कल्याण गर्ने यस्तो छः यसबाट दान-तीर्थ-व्रत-यज्ञ-याग-देवसेवा इत्यादि कुनैबाट पनी नपाइने फल पाइन्छ, यसलाई सारा शास्त्रको सार; अज्ञान नाश गर्ने; विष्णुको चैतन्यरूप, कामक्रोधादि रोगहरूलाई नाश गर्ने विवेकबुद्धिरूपी औषधीको जरो, सारा उपताप, १०८ व्याधि, र महापातकहरुलाई नाश गर्न समर्थ भएको, सनकादि महात्म्पहरूका चित्तलाई सदा शान्ति सुख दिलाउने भएको, अमृतरूप हो भनी ज्ञानी मुनिहरूले भनेका छन् श्रद्धापूर्वक जस्ले यो अट्ठारौं अध्याय पाठ अथवा श्रवण गर्ला, तेस्लेसारा यज्ञ गरेको फल पाएर विष्णुको सायुज्य पदवी प्राप्त गर्नेछ छ (श्लोक ६३).

पद्मपुराणका उत्तर खण्डको गीतामाहात्म्य-सार बाट

संक्षिप्त भाषानुवाद (कोमलसार) समाप्तः

गीतामाहात्म्यसार समाप्तः

।।ॐ।।

वाराहपुराणको-

# गीतामाहात्म्य

(कोमलटीका सहित)

ॐ नमो भगवते वासुदेवाय।

ऋषिरुवाच-

गीतायाश्चैव माहात्म्यं यथावत्सूत! मे वद ।
राम नारायणक्षेत्रे व्यासेन मुनिनोदितम् ।।१।।

शौनक ऋषिले सूत पौराणिक सँग सोधनी गरे-सूत! पहिले नारायणक्षेत्र (वदरिकाश्रम) श्रीवेदव्यासजीले कहनु भएको गीताको गीताकोमाहाम्त्य यथार्थ गरी (जस्ताकोतस्तो) मलाई बताउनुहोस् ।

सूत उवाच-

भद्रं भगवता पृष्टं यद्धि गुप्ततमं परम् ।
शक्यते केन,तद्वक्तुं गीतामाहात्म्यमुत्तमम् ।।२।।

सूत पौराणिकले भने-ऋषिजी! तपाईले सोऽध्नुभएको बढिया कुरा हो; तरअत्यन्तै गोप्य र सर्वोत्तम भएको गीतामाहात्म्य कसैले ठीक ठीक सँग बताउँन सकिंदैन ।।

कृष्णो जानाति बै सम्यक् किञ्चित्कुन्तीसुतः फलम् ।
व्यासो वा व्यासपुत्रोवा याज्ञवल्क्योऽथः मैथिलः ।।३।।

किनभने-यो गीताको माहात्म्य फल साक्षात् भगवान

कृष्णले मात्र राम्ररी जान्नु भएको छ थोर बहुत अर्जुनले पनी जानेका छन्, तेस्तै व्यास, शुकदेव, याज्ञवल्क्य र महाराज जनकले पनी जानेकै छन् ।

अन्ये श्रवणतः श्रुत्वा लेशं संकीर्तयन्ति च ।
तस्मात्किञ्चिद्वदाम्यत्र व्यासस्याऽऽस्यान्मयाश्रुतम् ।।४।।

यी पहिले कहियेका पुरूषहरू बाहेक अरू मानिसहरू केवल सुनेको भरलें अलिअलि बताउछन्, तेस कारण यस विषयमा मैले श्रीवेदव्यासका मुखारबिन्दबाट जे जस्तो सुनेको छु त्यो थोर बहुत बताउँदछु ।

सर्वोपनिषदो गावो दोग्धा गोपालनन्दनः ।
पार्थो वत्सः सुधीर्भोक्ता दुग्धं गीतामृतं महत् ।।५।।

श्री वेदव्यासजीले निश्चय गर्नु भएको छ कि सारा वेद-उपनिषद्-हरू गाई हुन्, ती गाईरूपी उपनिषदहरूलाई दुहुने (गोठालो) गोपाल नन्दन श्रीकृष्ण हुन्, गाईलाई पघार्ने बाच्छो अर्जुन हुन्, सर्वश्रेष्ठ भएको गीतारूप अमृत दुध हो, तेस दुधको स्वाद लिने पुरूष साँच्ची नै बुद्धिमान् हो ।

सारथ्यमर्जुनस्याऽऽदौ कुर्वन्गीतामृतं ददौ ।
लोकत्रयोपकारस्य तस्मै कृष्णात्मने नमः ।।६।।

पहिले महाभारत संगाममा अर्जुनको सारथी भएर तिनै लोकको उपकारका निमित्त जस्ले गीतारूपी अमृत दिये, ती कृष्णरुप परमात्मालाई मेरो नमस्कार छ ।

संसारसागरं घोरं तर्त्तुमिच्छति यो नरः ।
गीतानावं समासाद्य पारं याति सुखेन सः ।।७।।

जुन पुरूष बड़ो भयंकर संसाररूपी यो महासागरलाई पार गर्न चाहन्छ, तेस्तो मानिस गीतारूपी डुंङ्गाको सहारा लिनाले मात्र (त्यो महासागर) सहजै संग पार गर्न सक्दछ ।

गीतानावं श्रुतं नैव सदैवाऽभ्यासयोगतः ।
मोक्षमिच्छति मूढात्मा याति बालकहास्यताम् ।।८।।

जस्ले गीतारूपी डुङ्गीको नामै सुनेको छैन्, अथवा नाम सम्म सुनेको भए पनी हरतरहले तेस्मा चढने अभ्यासयोग (प्राक्टिश) गरेको छैन, फेरी मोक्ष (कर्मबन्धनबाट छुट्कारा) हुन भने चाहन्छ तेस्ता मूढ पुरूषको विचार बालकको काम जस्तै हस्सी गर्नलाई योग्य हुन्छ ।

ये शृन्वन्ति पठन्त्येव गीताशास्त्रमहर्निशम् ।
न ते वै मानुषा ज्ञेया देवरूपा न संशयः ।।९।।

जस्ले सदासर्वदा गीताशास्त्रको श्रवण गर्दछन्, जो पाठगरी मनन पनी गर्दछन्, ती पुरूष मनुष्यको रूप लिएका देवता ठहर्दछन्, साधारण मनुष्य ती मनुष्य ती होईनन् यस्मा सन्देहै छैन ।

गीताज्ञानेन संबोध्य कृष्ण प्राहाऽर्जुनाय वै ।
अष्टादशपदस्थानं गीताध्याये प्रतिष्ठितम् ।।१०।।

श्री कृष्ण भगवान अर्जुनलाई गीताको ज्ञानले बोध गराउँदै गीता का अध्यायहरूमा रहेको अष्टादशपद स्थान (मोक्षका अट्ठार सिढी) बताउनुभयो ।

मोक्षस्थानं परं पार्थ! सगुणं वाऽथ निर्गुणम् ।
सोपानाष्टादशैरेव परंब्रह्माऽधिगच्छति ।।११।।

हे अर्जुन! सगुण (साकार) अथवा निर्गुण निराकार परब्रह्म

रूप सर्वोत्तम मोक्षस्थानमा गीताका यिनै अट्ठार अध्यायरूपी सिढीकै द्वारा पुग्न सकिन्छ ।

साधोगीतांभसि स्नानं संसारमलनाशनम् ।
श्रद्धाहीनस्य तत्कार्य हस्तिस्नानं वृथैव तत् ।।१२।।

सज्जनपुरूषको यो गीतारूप जलमा स्नान गर्नाले संसारका मलीन जन्म कर्मलाई धोयेर सफा गराई दिन्छ, परन्तु श्रद्धा न भएका मानिसका निमित्त यही पवित्रजलमा स्नान गर्नु पनी हात्तीको स्नान जस्तै हुन्छ अर्थात् हात्तीले न्वायेर बाहिर आये पछी धुलोछरी आफुलाई पहिले भन्दा पनी झन् हिलो मैलो (फोहर) गराउँदछ ठीक तेस्तै । तेसो हुनाले श्रद्धा बेगरको गीतापाठ व्यर्थ हुन्छ।

गीतायाश्च न जानाति पठनं नैव पाठनम् ।
परस्मान्न श्रुतं ज्ञानं नैव श्रद्धा न भावना ।।
स एव मानुषे लोके पुरूषो विड्वराहकः ।।१३।।

जुन मानिस गीताको पठन-पाठन गर्दैन, गीताको ज्ञान अर्कोबाट पनी सुन्दैन, अथवा गीतामा श्रद्धा र भावना पनी राख्दैन, तेस मानिसको यह लोकमा जन्म सुँघुरको जन्म समान छ।

यो हि गीतां न जानाति नाऽधमस्तत्परो जनः ।
धिक्तस्य मानुषं देहं धिग्ज्ञानं धिक्कुलीनताम् ।।१४।।

जो गीता जान्दैन, त्यो भन्दा अधम (नालायक) जन अर्को कुन होला? तेस्को मनुष्यचोलालाई, तेस्कौ ज्ञानलाई र तेस्को कुलीनतालाई पनी धिक्कार छ ।

गीतार्थं नैव जानाति नाऽधमस्तत्परो जनः।
धिक् रुपं श्रुतं शीलं विभवस्तद्गृहाश्रमम् ।।१५।।

जुन व्यक्तिलाई गीता को अर्थ थाह छैन, त्यो भन्दा नराधम अरूकुन होला? तेस्को सुन्दर रूप, तेस्को शास्त्र पडाई, सुभशील, तेस्को ऐश्वर्य, तेस्को गृहाश्रम यो सबैलाई धिक्कार छ।

गीताशास्त्रं न जानाति नाऽधमस्तत्परो जनः ।
धिक्प्रारब्धं प्रतिष्ठां च पूजां मानं महात्मताम् ।।१६।।

जो गीताशास्त्र जान्दैन, त्यो भन्दा पामर अरू कोही ठहर्दैन तेस्को अदृष्ट (भाग्य) लाई, प्रतिष्ठालाई, सम्मानलाई, ईज्जत आबरूक्लाई र बड़प्पनलाई पनि धिक्कारै छ।

गीताशास्त्रे मतिर्नाऽस्ति सर्वतन्निष्फलं जगुः ।
धिक्तस्य ज्ञानमाचारं व्रतचेष्टां तनो यशः।।१७।।

जस्को गीताशास्त्रमा बुद्धि लागि पर्दैन, तेस्का संपूर्ण कुरा विफल छन्, तेस्को ज्ञानलाई आचारलाई; व्रतमा चेष्टालाई निष्ठा-काष्ठालाई, तपस्यालाई र कीर्ति (नाम) लाई पनी धिक्कार छ ।

गीतार्थपठनं नाऽस्ति नाऽधमस्तत्परो जनः ।
गीतागीतं न यज्ज्ञानं तद्विद्यासुरसंमतम् ।
तन्मोधं धर्मरहितंवेदवेदान्तगर्हितम् ।।१८।।

जुन मानिस गीताको अर्थ पाठ गर्दैन; त्यो भन्दा बढ़ी नीच अरू कुनै पनि हुँदैनः जुन ज्ञान गीताले कहियेको छैन, त्यो ज्ञान आसुरीज्ञान राक्षसी ज्ञान हो भनेर संझना राख, तेस्तो ज्ञान निष्फल, धर्मरहित र वेदवेदान्त हरूको तुच्छ मानियेको छ ।

यस्माद्धर्ममयी गीता सर्वज्ञानप्रयोजिका ।
सर्वशास्त्रसारभूताविशुद्धा स्वा विशिष्यते ।।१९।।

यसो हुनाले सबै शास्त्रहरूको सारस्वरूप, सबै किसिमको ज्ञान, गराउँने परम पवित्र र धर्ममयस्वरूप गीता सब शास्त्रहरूमा श्रेष्ट (उच्च दर्जाको) छन ।

योऽधीते सततं गीतां दिवारात्रं यथार्थतः ।
स्वपन्गाच्छन्वदंस्तिष्ठन् शाश्वतं मोक्षमाप्नुयात् ।।२०।।

जस्ले अहोरात्र भरको जुनसुकै टाइममा अर्थात् सुतन्, हिंड्नू, बोल्नू बस्नू इत्यादि जे गर्दामा पनी अर्थपूर्वक गीतापाठ गर्दछ (गीताको अर्थ संझीरहन्छ) तेष पुरूषले अविनाशी मोक्ष पाउँदछ ।

शालिग्रामशिलाग्रे वा देवागारे शिवालये ।
तीर्थे नद्यां पठेद्गीतां सौभाग्यं लभते ध्रुवम् ।।२१।।

जस्ले शालिग्रामशिलाका नगीच, देवताका मन्दिरमा, तीर्थमा अथवा नदीका किनारमा पनी गीतापाठ गर्ने गर्दछ; तेस्लाई अवश्यमेव ठूलो सौभाग्य प्राप्त हुनेछ ।

देवकीनन्दनः कृष्णो गीतापाठेन तुष्यति ।
यथा न वेदैंर्दानेन यज्ञतीर्थव्रतादिभिः ।।२२।।

गीतापाठ गर्नाले तेस्का ऊपर देवकीका पुत्र भगवान् श्रीकृष्ण तेती साह्रै खुशी हुनुहुन्छ, जत्तिको खुशी वेदपाठः यज्ञ तीर्थ ब्रतादिहरू अनेकन् गर्नाले पनी हुनुहुँदैन ।

गीताऽधीता च येनाऽपि भक्ति भावेन चेतसा ।
बेदशास्त्रपुराणानि तेनाऽधीतानि सर्वसः ।।२३।।

जुन मानिसले भक्तिभावना पूर्वक एकाग्रचित्तले

(नडुलायेको एकाग्रमनले) गीता पढ्यो; तेसले सारा वेद-शास्त्र पुराणहरू पनी पाठ गरी सक्यो भन्ने संझनु योग्य छ ।

**योगस्थाने सिद्धपीठे शिलाग्रे प्रत्समासु च ।**
**यज्ञे च विष्णु भक्ताग्रे पठन्सिद्धिं परां लभेत् ।।२४।।**

जस्ले योगाभ्यास हुने ठाउँमा, सिद्धहरूका पीठमा, शिला-स्वरूप देव देवीका समीपमा, सज्जनहरूका, सभाहरुमा यज्ञमा, विष्णुभक्तहरूका नगीचमा पनी गीता पाठ गर्ला तेस्लाई ठूलो सिद्धि मिल्नेछ ।

**गीतापाठं च श्रवणं यः करोति दिने-दिने ।**
**क्रतवो वाजिमेधाद्याः कृतास्तेन सदक्षिणा।।२५।।**

जस्ले दिनदिनै गीतापाठ गर्दछ अथवा श्रवण गर्दछ; तेस्ले दक्षिणासहितका अश्वमेध आदि गरियेका सारा यज्ञहरू गरी सक्यों भने हुन्छ, अर्थात् तेसले तेही फल पाउँदछ ।।

**यः शृणोति च गीतार्थं कीर्तयत्येव यः पुमान् ।**
**श्रावयेच्च परार्थं वै स प्रयाति परं पदम् ।।२६।।**

जुनपुरूष गीताको अर्थ सुन्दछ, तथा आफै कीर्तन गर्दछ, अथवा आर्काको कल्याणका निमित्त सुनाउँदछ, तेस्लाई परम पद (निर्वाणपद) प्राप्त हुन्छ ।

**गीताया पुस्तकं शुद्धं योऽर्पयत्येव सादरम् ।**
**विधिना भक्तिभावेन तस्य पुण्यफलं शृणु ।।२७।।**

जस्ले गीताको शुद्ध पुस्तक विधिविधान र भक्तिपूर्वक आदर गरेर समर्पण (दिन्छ) तेस पुरूषका पुण्यको फल सुन ।

सकला चोर्वरा तेन दत्ता यज्ञे भवेत्किल ।
व्रतानि सर्वतीर्थानि दानानि सुबहून्यपि! ।।२८।।

जस्ले गीता दान गर्‍यो तेस पुरूषले सारा धनधान्यादिले पुर्ण भयेकी पृथिवी दान, सारा ब्रतहरु, सारा तीर्थहरू, असंख्यात दानहरू पनी गरी सक्यो, यो कुरा निश्चय छ ।

यशः सौभाग्यमारोग्यं लभते नाऽत्र संशयः ।
दयितानां प्रियो भूत्वा परम सुखमश्नुते ।।२९।।

यस लोकमा तेस पुरूषले कीर्ति सोभाग्य आरोग्य इत्यादि पायेर तेस्तै भार्या आदि आत्मीय जनहरूको बहुतै प्यारो भई ठुलो सूख समेत भोग गर्न पाउँनेछ, यस्मा अलीकति पनि सन्देह छैन ।

भूतप्रेतपिशाचाद्यास्तत्र नो प्रविशन्ति वै ।
अभिचारोद्भवं दुःखं वरशापागतं च यत् ।
नोपसर्पति तत्रैव यत्र गीतार्चना गृहे ।।३०।।

जुन घरमा गीताको पूजा (सम्मान) हुन्छ तेस घरमा भूत प्रेतपिशाच डाकिनी-शाकिनी इत्यादि कुनै पनी पस्न सक्तैनन्, औ तान्त्रिकक्रियाबाट आई पर्ने र वरदान श्रापबाट आई पर्ने दुखले पनी छुनै सक्तैन अर्थात् कसैले अनिष्ट चितायेे उस्का उपर कुनै काम गरेको भये पनि त्यहाँ त्यो अनिष्ट आउँन सक्दैन ।

तापत्रयोद्भवा पीडा नैव व्याधिर्भवेत्क्वचित् ।
न शापो नैव पापश्च दुर्गतिनरकं न च ।।३१।।

गीता पाठ गर्नेलाई आधिभौतिक, आधिदैविक, आध्यात्मिक ई तिन तापको, रोगको, श्रापको, पापको,

अगतिकोर नरककोअलिकति पनि डररहदैन ।

देहेऽस्य. षडेते वै न बाध्यन्ते कदाचन ।
लभेत्कृष्णपदेदास्यं भक्तिं चाऽव्यभिचारिणीम् ।।३२।।

गीता पाठ गर्नेका शरीरमा रहेको ई शत्रुहरूले काम-क्रोध लोभमोह-मद मात्सर्य अथवा चक्षु-श्रो त्र-घ्राण-रसनात्वक् ई ५ ज्ञानेन्द्रिय र एक मन समेत ६ बैरीहरूले-उस्लाई कहिल्यै दबाउँन सख्दैनन् तेस्ले भगवान श्रीकृष्णाका पाउँमा अटूट सेवार निश्चल भक्ति । एकाग्र भक्ति पनी पाउँनेछ ।

जायते सततं सख्यं सर्वजीवगणैः सह ।
प्रारब्धं भुञ्जतो वाऽपि गीताभ्यासरतस्य च ।
स मुक्तः स सुखी लोके कर्मणा नोपबध्यते ।।३३।।

प्रारब्ध बशलेसंसारको भोग गर्दछत्तपनी सधैं गीताको अभ्यास मा रत रहने मानिसको सबैं प्राणीहरू संग सदा सवैदा मित्रभाव नै रही रहन्छ यो लोकमा यो तेस्तो मानिस मुक्त र सुखी पनी हो जन्म-मरण र धर्म पापरूप कर्मका बन्धनले उस्लाइबाँध्न सक्तैनन् ।

महापापादिपापानि गीताध्यायी करोति चेत् ।
न किञ्चित्स्पृश्यते तस्य नलिनीदल भसा ।।३४।।

गीताको श्रवण पठन मनन गर्ने मानिसले जानीजानी होइन कि दैवसंयोगवशात् कुनै ब्राह्मण गोहत्या आदि गरियेका पापहरू गरोस ता पनी त्यो दोष तेस्लाई तेसै गरी टाँसिन सक्तैन, जस्तै कमलका पातमा पानी टासिदैन ।

स्नातो वा यदि वाऽस्नातः शुचिर्वा यदि वाऽशुचिः ।
विभूति विश्वरूपं च संस्मरन्सर्वदा शुचिः ।।३५।।

स्नान गरेको अथवा न गरेको पवित्र अथवा अपवित्र जे होस् त पनी भगवानको विभूति र विश्वरूपको संझना गरी रहने मानिस सदा काल पवित्र नै ठहर्दछ अर्थात् जुन सुकै कालमा पनी भगवान्लाई संझना गर्न अधिकारै छ ।

अनाचारोद्भवं पापमवाच्यादिकृतं च यत् ।
अभक्ष्यभक्षणं दोषमस्पर्शस्पर्शजं तथा ।।३६।।
ज्ञानाज्ञानकृतं नीत्यमिन्द्रियैर्जनितं च यत् ।
तत्सर्वं नाशमायाति गीतापाठेन तत्क्षणात् ।।३७।।

अनाचारले (धर्म नपुग्ने काम गर्नाले; अवाच्य कुराहरु बोल्नाले; अभक्ष्यचीज खानाले, छुन नहुने चीज छुनाले जुन पाप (दोष) उत्पन्न भयेको छ, तेस्तै जानी होस् वा अनजानमा होस् सारा इन्द्रियहरुले जो कुछ पाप गरियेको-छ त्यो सब पाप गीता पाउने तत्क्षणैमा नाश हुन्छ ।

सर्वत्र प्रतिभोक्ता च प्रतिग्राही च सर्वशः ।
गीतापाठं प्रकुर्वाणो न लिप्येत कदाचनः ।।३८।।

सबै ठाउँमा खानपीन गर्ने (जहाँ जे पायो उहीं खाने गर्ने) अथवा सबै किसिसको दान लिने होस्त पनी गीतापाठ गर्दछ भने तेस । पुरुषलाई त्यो पापकसै गरी लाग्दैन अर्थात् गीतापाठ गर्नाले तेस्को प्रायश्चित हुन्छ ।

रत्नपूर्णां महीं सर्वां प्रतिगृह्याऽविधानतः ।
गीतापाठेन चैकेन शुद्धःस्फटिकवत्सदा ।।३९।।

जो शास्त्र मर्यादालाई छोडेर विधिपूर्वक बिना विधि संग) रत्नाहरुले भरिभराऊ भएकी पृथिवीको दान लेओस त पनि एकपटक मात्र समस्त गीताको पाठ गर्दछ भने त्यो पुरुष सदा स्फटिक झैं निर्मलै रहन्छ तेस्लाई त्यो पाप लान्दैन ।

यस्याऽन्तः करणं नित्यं गीतायां रमते सदा ।
सः साग्निकः सदा जापी क्रियावान्स च पण्डितः ।।४०।।
दर्शनीय स धनवान् स योगी ज्ञानवानपि ।
स एष याज्ञिको ध्यानी सर्ववेदार्थदर्शकः ।।४१।।

जस्को अन्त करण हरवखत गीतामा नै रमाउँदछ तेही पुरुष अग्निहोतृ हो, तेही जाप गर्ने हो तेहा निष्काम कर्म गर्ने हो, तेही पण्डित हो, दर्शन गर्ने योग्य हो, तेही धनी हो, कर्मयोगी हो तेही ज्ञानी हो, तेही यज्ञ गर्ने हो तेही ध्यानी हो, तेस्तै तेही सारा वेदहरुको अर्थ देख्ने (जान्ने) पनी हो।

गीतायाः पुस्तकं यत्र नित्य पाठश्च बर्तते ।
तत्र सर्वाणि तीर्थानि प्रयागादीनि भूतले ।।४२।।

जुन गीताको पुस्तक रहेको छ, जहाँ गीता को नित्यपाठ भै रहेको छ, तहाँ पृथिवी भरमा भएका प्रयाग आदि गरिएका सारा तीर्थहरू आएर रहेका हुन्छन् ।

निवसन्ति सदा देहे देहशेषेऽपि सर्वदा ।
सर्वे देवाश्च ऋषयो योगिनो देहरक्षकाः ।।४३।।

गीतापाठ गर्ने पुरुष सबै कालमा अथवा अन्त्यकालमा पनी सारा देवताहरू कृषिहरूयोगीहरू देहरक्षक भएर उस्का शरीरै-भिन्न रहेका हुन्छन् ।

गोपालबालः कृष्णोऽपि नारदध्रुवपार्षदैः ।
सहायो जायते शीघ्रं यत्र गीता प्रवर्तते ।।४४।।

जहाँ गीताको प्रवृत्ति भै रहेको छः तहाँ नारद ध्रुव र अरू सेवक भक्तहरूले सहित भएका गोपालबाल श्रीकृष्ण पनि सबै कुरामा तुरुन्तै सहायता गर्ने हुनुहुन्छ ।

यत्र गीताविचारश्च पठने पाठनं तथा ।
तत्राऽहं निश्चितं पार्थ!निवसामि सदैव हि ।।४५।।

हे पार्थ! (अर्जुन) जहाँ गीताको पठन पाठन हुन्छ जहाँ गीताको विचार (मनन र कदर) हुन्छ, तेस ठाउँमा म (कृष्ण) सदाकाल अवश्य नै रहेको हुन्छु ।

गीता मे हृदयंपार्थ! गीता मे सारमुत्तमम् ।
गीता मे ज्ञानमग्न्यं हि गीता म ज्ञानमक्षयम् ।।४६।।

किन् भने-हे अर्जुन! मेरो गीता नै हृदय (मुटु) हो, गीता नै सारा पदार्थ हो, गीता नै अग्रज्ञान (विज्ञान) हो, गीता नै अक्षय ज्ञान (कहिल्यै ननाशिने ज्ञान पनी हो) ।

गीता मे चोत्तमं स्थानं गीता मे परमं पदम् ।
गीता मे परमं गुह्यं गीता मे परमो गुरुः ।।४७।।

गीता नै मेरो सब भन्दा उच्चो (ठूलो) स्थान हो, गीता नै सब भन्दा उत्तम पद (परंधाम) हो गीता नै सब कुरामा रहस्य कुरा हों, गीता नै सब कुरा सिकाउने गुरु पनी हो।

गीताश्रयेऽहं तिष्ठामि गीता मे परमं गृहम् ।
गीता ज्ञानं समाश्रित्य त्रिलोकी पालयाम्यहम् ।।४८।।

म गीता कै आधारमा रहेको छु, गीता नै मेरो मन भन्दा असल घर हो, मैले गीताज्ञान कै आश्रय गरेर स्वर्ग - मर्त्य पाताल ई तीनैलोकलाई पालन गरेको छु।

गीता मे परमा विद्या ब्रह्म रूपा न शंशयः ।
अर्धमात्राक्षरा नित्या स्वनिर्वाच्यपदात्मिका ।।४९।।

दूरब्रह्मारूप भएको गीता नै मेरी परम विद्या हो, यस्मा केही सन्देह छैन पद-रूप यस्तो हो भनी वर्णन गर्न नसकिने अविनाशी, नित्यस्वरूप र सबिन्दु अर्धचन्द्रबाट प्रतिपाद्य ब्रह्मकी अभिव्यक्तिस्वरूप बनी येही मेरी गीता नै हो ।

गीतानामानि वक्ष्यामि गुह्यामि शृणु पाण्डव ।
कीर्तनात्सर्वपापानि विलयं यान्ति तत्क्षणात् ।।५०।।

हे पाण्डव! (अर्जुन) म तिमिलाई गीताका गुप्तगुप्य नामहरु बताउँदछू, सुन जुन नामहरूको, कीर्तन गर्नाले सारा पाप? हरुतत्क्षणैमा बिलाँछन् ।

गीतानामानि-

गीता गंगा च गायत्री सीता सत्या सरस्वती ।
ब्रह्मवलिर्ब्रह्मविद्या त्रिसंध्या मुक्तिगेहिनी।।५१।।
अर्धमात्रा चिदानन्दा भवध्नी भ्रान्तिनाशिनी ।
वेदत्रयी पराऽनन्ता तत्वार्थज्ञानमञ्जरी ।।५२।।

(गीता)-साक्षात् भगवान् श्रीकृष्णको मुखारबिन्दबाट गान गरिएको। १
(गंगा) पवित्र लिएर लोकलाई उद्धार गर्न पृथ्वीमा आएकी । २
(गायत्री) पठन पाठन-गर्नेहरूलाई सबै किसमबाट रक्षा गर्ने। ३
(सीता) सत्वगुण स्वरूप भयेकी । ४
(सत्या) सत्य-पदार्थ (ब्रह्म) की शक्तिरूप भएकी। ५
(सरस्वती) परावाणीरुप भई ब्रह्मविद्याको बोध गराउने । ६
(ब्रह्मावलि) हरेक वाक्यका लहरबाट परब्रह्मको प्रतिपादन गर्ने ७
(ब्रह्मविद्या) ब्रह्मसाक्षात्कार गराउने विद्या । ८
(त्रिसन्ध्या) सबै काल सबै अवस्थामा ध्यान गर्न लायक भएकी। ९
(मुक्तिगेहिनी) मुक्त पुरुषहरूले पुगेर रहने वासस्थानरूप । १०
(अर्धमात्रा) प्रणवको बिन्दुस्वरूपले बुझाइने परब्रह्मकी शक्ति स्वरूप। ११
(चिदानन्दा) ब्रह्मकी शक्ति हुनाले चैतन्य र आनन्दरूपिणी। १२
सुख दुःखादि प्रपंचलाई विद्यास्वरूप भै नाश गर्ने । १३
(भ्रान्तिनाशिनी) हरेक किसमको भ्रम नाश गरेर परमात्मामा मिलाई दिने । १४
(वेदत्रयी) सबै वेद उपनिषद्हरूको स्वरूप। १५
(परा) ब्रह्मसाक्षात्कार गराउँनामा सर्वोपरि भएकी परावाणीस्वरूप । १६
(अनन्ता) अतिशय गंभीर बुद्धि भएकाहरुले पनी सितिमिति अन्त्य न पाइने र कहिल्यै न नाशिने । १७
(तत्वार्थ ज्ञान मञ्जरी) यथार्थवस्तु ब्रह्मको प्राप्ति गराउँनामा मञ्जरी स्वरुप भयेकी।। १८

इत्येतानि जपेन्नित्यं नरो निश्चलमानसः।
ज्ञानसिद्धिं लभेच्छीघ्रं तथाऽन्ते परमं पदम् ।।५३।।

मानिसले एकाग्रचित्त गरेर गीतालाई पूर्वोक्त १८ नामहरूमा कुनकुन शक्ति भरिएको रहेछ? त्यो सम्झेर अर्थ विचार गरी सधैं गीताको जप-पाठ गर्दछ भने तेस्लाई चाँडै नै ज्ञानसिद्ध भयेर अन्त्यमा परमपद (मोक्षपद) समेत मिल्दछ ।।

पाठेऽसमर्थः संपूर्णे तदर्धं पाठमाचरेत् ।

तदा गोदानजं पुण्यं लभते नाऽत्र संशयः ।।५४।।

संपूर्ण गीताको पाठ गर्न नसकेमा तेस्को आधा भाग (नवमाध्यायपर्यन्त) पाठ गरोस् तेतीपाठ गर्नाले पनी गोदान (विधिपूर्वक) गाईको दान गरेको पुण्य पाउँदछ, यस्मा अलिकति पनी सन्देह छैन।

त्रिभागं पठमानस्तु सोमयागफलं लभेत् ।

षडंशं जपमानस्तु गंगास्नानफलं लभेत् ।।५५।।

तिन भागको १ भाग अर्थात् ६ अध्याय सम्म पाठ गर्नाले सोमयोग (श्रोतयज्ञको प्रारंभमा गरिने यज्ञ गरेको फल (पुण्य) (पाउँदछ० ६ भाग को १ भाग (३ अध्याय) पाठ गर्नाले गंगा-स्नान गरेको फल पाउँदछ ।।

तथाऽध्यायद्वयं नित्यं पठमानो निरन्तरम् ।

इन्द्र लोकमवाप्नोति कल्पमेकं वसेद् ध्रुवम् ।।५६।।

नित्य अटूट गरेर २ अध्याय गीता पाठगरेको छ भने देहान्त भये पछी इन्द्रलोक (स्वर्गलोक) मा पुगेर आवश्यमेव १ कल्प सम्म रहन पाउँदछ।

एकमध्यायकं नित्यं पठते भक्तिसंयुतः।

रूद्रलोकमवाप्नोति गणो भूत्वा वसेच्चिरम् ।।५७।।

जुन मानिस प्रतिदिन भक्तिभावले गीताको १ अध्याय मात्र पाठ गर्दछ, तेस्ले रूद्रलोक पाउँदछ र वहाँ महादेव को गण भयेर धेरै काल सम्म बस्न पाउँदछ ।

**अध्यायार्धञ्च पादं वा नित्यं पठति यो जनः ।**
**प्राप्नोति रविलोकं स मन्वन्तरसमाः शतम् ।।५८।।**

जस्ले गीताको जुनसुकै अध्यायको होस् आधा अथवा अध्याय को ४ भागको १ भाग मात्र नित्य नियमले पाठ गर्दछ, तेस्ले मनुहरूको शय वर्ष सम्म सूर्यलोकमा वास गर्न पाउँदछ ।

**गीतायाः श्लोकदशकं सप्त पञ्च चतुष्टयम् ।।**
**त्रिद्वयेकमेकमर्धं वा श्लोकानां यः पठेन्नरः ।**
**चन्द्रलोकमवाप्नोति वर्षाणामयुतं तथा ।।५९।।**

जस्ले दश, सात, पाँच तिन दुई, एक अथवा एकको आधा मात्र पनी गीताका श्लोकहरुको पाठ गर्दछ, तेस्ले दश हजार वर्ष संम चन्द्र लोकको भोग गर्न पाउँदछ ।

**गीतार्थमेकपादं च श्लोकमध्यायमेव च ।**
**स्मरन् त्यक्त्वा जनो देहं प्रयाति परमं पदम् ।।६०।।**

जुन मानिस गीताका १अध्यायको, १श्लोकको, १पाउको मात्र संझदै देहत्याग गर्दछ, तेस्ले परमपद (मुक्ति) पाउँदछ ।

**गीतार्थमपि पाठं वा शृणु यादन्त्यकालतः ।**
**महापातक युक्तोऽपि मुक्तिभागी भयेज्जनः ।।६१।।**

जस्ले अन्त्यकालमा (मर्ने वेलामा) गीताको अर्थ अथवा पाठ मात्र पनि सुन्दछ, त्यो मानिस महापातकी (ठूला-ठूला पाप

गर्ने) भय ता पनी मुक्ति पाउँने हुन्छ ।

गीतापुस्तकसंयुक्तः प्राणांस्त्यक्त्वा प्रयाति यः ।
स बैकुण्ठ मवाप्नोति विष्णुना सह मोदते ।।६२।।

गीताको पुस्तक साथैमा रहेर जस्ले प्राणत्याग गर्दछ, त्यो मानिस बैकुण्ठमा पुगेर विष्णु भगवानका साथ-साथै रहन पाउँछ ।

गीताध्यायसमा युक्तो मृतो मानुषतां व्रजेत् ।
गीताभ्यासं पुनः कृत्वालभते मुक्तिमुत्तमाम् ।।६३।।

गीताको १ अध्याय मात्र पनी साथैमा रहेर मरेको मानिसले मनुष्यकै चोला पाउँदछर फेरी पनी गीताकै अभ्यास (पठन-पाठन) गरेर देहान्तमा उत्तममुक्ति (मोक्ष) पाउँदछ ।

गीतोच्चारणसंयुक्तो म्रियमाणो गतिं लभेत् ।
यद्यत्कर्म च सर्वत्र गीतापाठ प्रकीर्तितम् ।
तत्तत्कर्म च निर्दोषं भूत्वा पूर्णत्वमाप्नुयात् ।।६४।।

मर्ने बेलामा गीताका श्लोकहरूको उच्चारण गर्दै मर्द छ भने पनी गति पाउँदछ अर्थात् अर्को जुनीमा योगी हुन्छ, जुनसुकै कर्म होस् त पनीं सबमा गीतापाठ गरिएको छ भने-त्यो सब कर्मको दोष नाशिन्छ र पूर्ण हुन आउँदछ।।

पितॄनुद्दिश्यः यः श्राद्धे गीतापाठं करोति च ।
सन्तुष्टाः पितरस्तस्य निरयाद्यान्ति सद्गतिम् ।।६५।।

जस्ले श्राद्धमा पितृहरूको उद्देश्य गरेर (पितृका निमित्तमा) गीता-पाठ गर्छ गराउँछ, तेस्का पितृगणहरू नरकमा परेका भए पनी (उद्धारभयेर) खुशी हुँदै, स्वर्ग तर्फ जान पाउँदछन् ।

गीतापाठेन सन्तुष्टाः पितरः श्राद्धतर्पिता ।
पितृलोक प्रयान्त्येव पुत्राशीर्वादतत्पराः ।।६६।।

गीतापाठले सन्तुष्ट भएका र श्राद्धका तर्पण-पिण्डदानादि कर्मले तृप्त भएका पितृगणहरू पुत्र (सन्तान) हरूलाई आशीर्वाद गर्दै पितृहरूको लोकमा जान्छन् ।

लिखित्वा धारयेत्कण्ठे बाहुदण्डे च मस्तके ।
नश्यन्त्युपद्रवाः सर्वे विघ्नरूपाश्च दारूणाः ।।६७।।

गीताको पुस्तक लेखेर जन्त्र बनाई घाँटी बाजुबन्ध माथ जहाँ हुन्छ धारण गर्नाले मानिसलाई परी आउँने अनेक उपद्रव र भयङ्कर विघ्नहरू पनी नाशिएर जान्छन् ।

गीता पुस्तकदानं च धेनुपुच्छसमन्वितम् ।
कृत्वा च तद्दिने सम्यक् कृतार्थो जायते जनः ।।६८।।

जस्ले गीताको पुस्तक लिएर गाईको पुच्छर समाति ती दुबैको दान गर्दछ, त्यो मानिस तेस दिनमा गनुपर्ने कर्तव्य जती सबै गरी सकेको भई कृतकृत्य हुन पाउँदछ ।

पुस्तक हेमसंयुक्तं गीतायाः शुद्धमानसः ।
दत्वा विप्राय विदुषे जायते न पुनर्भवे ।।६९।।

जस्ले शुद्ध मन लिएर (सफा दिलले) सुवर्णसहित गीताको पुस्तक विद्वान ब्राह्मणलाई दिन्छ तेस्ले फेरी यो दुःखमय संसारमा जन्म लिनुपर्दैन ( उत्तमगति पाउँदछ) ।

शतपुस्तकदानं च गीतायाः प्रकरोति यः ।
स याति ब्रह्मसदनं पुनरावृत्तिवर्जितम् ।।७०।।

जस्ले गीताका शय पुस्तक दान गर्दछ त्यो मानिस जहां जानाले फेरी जन्मरणको चक्करमा पर्नु पर्दैन, तेस्तो ब्रह्मको धाममा (मोक्षमा) पुग्छ ।

गीतादानप्रभावेण शप्तकल्पमिताः समाः ।
विष्णुलोकमवाप्याऽन्ते विष्णुना सह मोदते ।।७१।।

गीतादान गर्ने मानिस गीतादानको प्रभावले सातकल्प सातोटा) ब्रह्मा बदलिने काल) सम्म विष्णुलोकमा रहन पायेर आखिरमा चिदानन्दरूप विष्णुमा नै लीन हुन पाउँदछ।

सम्यक् श्रुत्वा च गीतार्थं पुस्तकं यः प्रदापयेत् ।
तस्मै प्रीतोऽस्मि भगवान् ददामि मनसेप्सितम् ।।७२।।

जस्ले गीताको अर्थ राम्ररी सुनेर गीतापुस्तकको दानगर्दछ, देस्का उपर भगवान् (परमात्मस्वरूप) न बहुतै खूस हुन्छू र तेस्का मनले चिताये बमोजिम कुरा पूर्ण गरिदिन्छु ।

देहं मानुषमा श्रित्य चातुर्वर्णेषु भारत! ।
न शृंणोति न पठति गीताममृतरूपिणीम् ।।७३।।
हस्तात्त्यक्त्वाऽमृतं प्राप्तं स नरो विषमश्नुते ।
पीत्वा गीतामृतं लोके लब्ध्वा मोक्ष सुखी भवेत् ।।७४।।

हे अर्जुन ! ब्राह्मणादि गरियेका ४ वर्णमा जन्मी मनुष्यचोला पायेर पनी जस्ले अमृतस्वरूपिणी (अजंमरी बताउँने) गीता सुन्दैन, अथवा पठन-पाठन पनी गर्दैन (पढ्दैन) त्यो मानिस हातमा परेको अमृत फ्याँकेर विषै खाने सरह हुन्छ, किन भने यस लोकमा गीतामृत पान गर्नाले अन्त्यमा मोक्ष पायेर चिदानन्दसुखको भोग गर्ने हुन पाइन्छ ।

जनैः संसारदुःखार्तैर्गीताज्ञानं च यैः श्रुतम् ।
संप्राप्तममृतं तैश्च गतास्ते सदनं हरेः ॥७५॥

संसाररूपी महादुखले आकुल-व्याकुल भयेका जुन जुन मानिसहरूले यो गीताको ज्ञान सुने, ती सबैले परमात्मा को धाममा पुगी अजंमरी पायेका छन्, परमात्मा स्वरूपमा मिलेका छन् ) ।

गीतामाश्रित्य बहवो भूभुजो जनकादयः ।
निर्धूतकल्मषा लोके गतास्ते परमं पदम् ॥७६॥

गीताको आश्रय (सेवा) गरेर जनक, निमि आदि गरियेका धेरै राजाहरू पनी निष्पाप भयेर (कर्मबन्धनबाट छुट्कारा पायेर) परमपद (मुक्ति) मा पुग्न पायेका हुन् ।

गीतासु न विशेषोऽस्ति जनेषुच्चावचेषु च ।
ज्ञानमेव समग्रेषु समा ब्रह्मस्वरूपिणी ॥७७॥

गीता पढ्नलाई सानु-ठुलो जात कसैमा पनी विशेष गरी छुट्याईदैन, किनभने ब्रह्मस्वरूपिणी गीता सबैमा ज्ञान दिनलाई समानै छन् ।

योऽभ्यसूयति गीतां च निन्दां वा प्रकरोति च ।
प्राप्नोति नरके घोरं यावदाभूतसंप्लवम् ॥७८॥

जस्ले गीतालाई असूया गर्दछ (गुणमा दोष) दियेर तुच्छ सँझी हेलाँगर्दछ । अथवा निन्दा गर्दछ, त्यो मानिस प्रलयकालपर्यन्त घोर डर लाग्दो नरकमा पर्दछ ।

अहं कारेण मूढात्मा गीतार्थं नैव मन्यते ।
कुम्भीपाके स पच्येत यावत्कल्पलयो भवेत् ॥७९॥

जसले अहङ्कारीपना लियेर गीताको अर्थलाई मान्दैन् (गीताले भनेका कुराको बास्ता राख्दैन् ) त्यो मूढ मानिस ब्रह्माजीको आयु भर कुंभीपाक नाम गरेको नरकमा पाकी रहन्छ ।

गीतार्थं वाच्यमानं यो न शृणोति समीपतः ।
श्वशूकरभवां योनिमनेकां सोऽधिगच्छति ।।८०।।

जुन मानिस नगीचैमा गीताको अर्थ भन्न लागेको भए पनि बास्ता न गरी सुन्दैन, तेस्ले मरेपछी अनेकौ कुक्कुरजुनी र सुँघुरको जुनी पाउँदछ।

चौर्यं कृत्वा च गीतायाः पुस्तकं यः समानयेत् ।
न तस्य स्यात्फलं किञ्चित्पठनं च बृथा भवेत् ।।८१।।

जो गीताको पुस्तक चोरी ल्याएर तेस्मा पाठ गर्दछ, तेस्ले पाठ गरेको फल पाउँदैन, त्यो पाठ गर्नु व्यर्थ हुन्छ ।

गीता श्रुत्वा च गीतार्थं मोदते न समादरात् ।
नैवाऽऽप्नोति फलं लोके प्रमादाच्च वृथा श्रमम् ।।८२।।

जुन पुरूष गीता सुनेर पनी गीताको अर्थमा (भनाईमा) ठूलो आदर राखी रमाउँदैन, तेसले त्यो सुनेको फल यस लोकमा पाउँदैन, तेसको बेहोसीपनाले गर्दा त्यो सुन्नु व्यर्थको परिश्रम हुन्छ ।

गीतां श्रुत्वा हिरण्यं च पट्टाम्बरप्रवेष्टनम् ।
निवेदयेच्च तद्वेष्टय प्रीतये परमात्मनः ।।८३।।

गीता सुनी सके पछी सुवर्ण राखी रेशमी कपडाले राम्ररी बाँधी वरी 'परमात्मप्रीतये' (परमेश्वरलाई खुश गराउनका निमित्त) भनी त्यो गीतापुस्तक वाचकलाई दिनु ।

वाचकं पूजयेद्भक्त्य द्रव्यवस्त्राद्युपस्करैः ।
अन्नैर्बहुविधैः प्रीत्या तुष्यतां भगवान्नीति ।।८४।।

'भगवान् परमेश्वर खुश हुन्' भन्ने बुद्धि लिई प्रेम भक्तिपूर्वक नाना प्रकार का द्रव्य वस्त्र-अलंकार अन्नहरू दिएर गीतापाठ गरी सूनांउँने (वक्ता) लाई सम्मान गरोस् ।

सूत उवाच -

महात्म्यमेतद्गीतायाः कृष्णप्रोक्तं सनातनम् ।
गीतान्ते पठते यस्तु तथोक्तं फलमाप्नुयात् ।।८५।।

श्रीकृष्ण भगवान्ले बताउँनुभएको सनातनगीताको महात्म्य; जस्ले गीतापाठको नगीचमा अर्थात् आदिमा र अन्त्यमा पाठ गर्दछ, तेस्ले यस्मा कहिएको फल पाउँनेछ ।

गीतायाः पठनं कृत्वा महात्म्यं नैव यः पठेत् ।
वृथा पाठफलं तस्य श्रम एक कि केवलम् ।।८६।।

गीताको पाठ गरेर जस्ते गीताको महात्म्य पाठ गर्दैन (गीताका महिमाको पाठ पढदैन तेस्को पाठफल व्यर्थ हुन्छ, तेस्ले नाहकमा दुःख मात्र पाउँदछ) अर्थात् गीताका विषयमा अतिशय श्रद्धा पैदा गराएर तेस द्वाराको यथोक्त फल दिलाउँने यो महात्म्य नपढे फगत गीताबाट तथोक्त श्रद्धा नहुनाले यथोक्त, फल हुँदैन, महात्म्य बाट पूर्ण श्रद्धाको उदय हुनाले माहात्म्यको पाठ बहुत उपकारीछ ।

एतन्माहात्म्य संयुक्तं गीतापाठं करोतियः ।
श्रद्धया यः शृणोत्येव दुर्लभां गतिमाप्नुयात् ।।८७।।

जस्ले महात्म्य सहित गीताको श्रद्धापूर्वक पाठ गर्दछ,

अथवा सुन्द, छ, तेस पुरूषले दुर्लभ गति (मुक्ति) पाउँदछ ।

**श्रुत्वा पठित्वा गीतां च माहात्म्यं यः शृणोति वै ।**
**तस्य पुण्यफलं लोके भवेद्धि मनसेप्सितम् ।।८८।।**

जो गीता सुनेर अथवा पढेर महात्म्य पनी सुन्ने पढ्ने गर्दछ, तेस्ले यसै लोकमा मनले चिताएको पुण्य-फल पाउँछ ।

इति श्रीमद्वाराहपुराणे सूतशौनकसंवादे श्रीकृष्णप्रोक्तं
श्रीमद्भगवद्गीता-माहात्म्य संपूर्णम् ।
श्रीमद्वाराहपुराणको सूतशौनकसंवादमा श्रीकृष्णबाट
वर्णन गर्नुभएको श्रीमद्भगवद्गीतामाहात्म्य।
नेपाली कोमलटीका-सहित समाप्त भयो।।

## अथ करन्यास :

ॐ अस्य श्रीमद्भगवद्गीतामालामन्त्रस्य भगवान्वेदव्यास ऋषिः। अनुष्टुप् छन्दः। श्रीकृष्णः परमात्मा देवता। अशोच्यानन्दशोचस्त्वं प्रज्ञावादांश्च भाषसे इति बीजम् । सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज इति शक्तिः अहं त्वा सर्वपापेभ्यो मोक्षयिष्यामिमा शुच इति कीलकम् ! नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः इत्यङ्गुष्ठाभ्यां नमः ।न चैनं क्लेदयन्त्यापो न शोषयति मारूतः इति तर्जनीभ्यां नमः । अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योशोष्य एव च इति मध्यमाभ्यां नमः। नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातन इत्यनामिकाभ्यां नमः। पश्य में पार्थ रूपाणि शतशोऽथ सहस्त्रश इति कनिष्ठिकाभ्यां नमः। पश्य मे पार्थ रूपाणि शतशोऽथ सहस्त्रश इति कनिष्ठिकाभ्यां नमः। नानाविधानि दिव्यानि नानावर्णाकृतानि च इति करतल करपृष्ठाभ्यां नमः। इति करन्यासः।

## अथ हृदयादिन्यासः।

नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः इति हृदयाय नमः। न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः इति शिरसे स्वाहा अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च इति शिखायै वौषट। नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातन इति कवचाय हुम्। पश्य मे पार्थरूपाणि शतशोऽथ शहस्त्रश इति नेत्रत्रयाय वौषट। नानाविधानि दिव्यानि नानावर्णाकृतानि च इति अस्त्राय फट्। श्री कृष्णप्रीत्यर्थे पाठे विनियोगः।

श्रीः

संग्रहबाट

## गीताध्यान-पुष्पाञ्जलिः।

(कोमलटीकासहित)

ॐपार्थाय प्रतिबोधितां भगवता नारायणेन स्वयं

व्यासेन ग्रथितां पुराणमुनिना मध्ये-महाभारते।

अद्वैतामृतवर्षिणीं भगवतीमष्टादशाध्यायिनी-

मम्ब! त्वामनुसंदधामि भगवद्गीते! भवद्वेषिणीम्।

साक्षात् भगवान् नारायण श्रीकृष्णबाट महाभारत संग्रामका समयमा अर्जुनलाई बोध गराइयेकी (बताइएकी) पुराणमुनि श्रीवेदव्यासजी ले संग्रह गरी पुस्तकरूपमा लेखिए की, अद्वैतरूप अमृत (ब्रह्म) को वर्षा गर्ने भएकी, षडैश्वर्यले परिपूर्ण र अट्ठारह अध्यायहरूले मुक्त भएकी संसारलाई द्वेष गर्ने (कर्मबन्धनहरूलाई नाश गरेर अजंमरी बनाउँने हे आमा, भगवद्गीता! हजुरलाई हृदयमा धारण गरिरहन्छु।

नमोऽस्तु ते व्यास! विशालबुद्धे! फुल्लार विन्दायतपत्रनेत्रा!

येन त्वया भारततैलपूर्णः प्रज्ज्वालितो ज्ञानमयः प्रदीपः ।।२।।

हे कमलनयन अपारबुद्धि भएका, वेदव्यास! तपाईलाई नमस्कार, छः जुन तपाईले भारत कथारूपी तेजले भरिभराऊ भयेकी (चहकिलो भएको) ज्ञानरूपी, दींपज्योति (बत्ती) यती राम्रो तबर सँग बालिदिनुभयो।

प्रपन्नपारिजाताय तोत्त्रवेत्रैकपाणये ।

ज्ञानमुद्राय कृष्णाय गीतामृतदुहे नमः।।३।।

शरणमा पर्नेहरूका ऊपर कल्पबृक्षस्वरूप जे चितायो उही दिन सक्ने बेतको छडी हातमा लिएका, गीतारूप अमृतलाई दुहुने, ज्ञानमुद्रा (अभय मुद्रा) ले युक्त भएका, श्रीकृष्णलाई नमस्कार छ।

सर्वोपनिषदो गावो दोग्धा गोपालनन्दन ।

पार्थो वत्सः सुधीर्भोक्ता दुग्धं गीतामृतं महत् ।।४।।

किनभने-सारा वेद-उपनिषदहरूगाई हुन् , गीतारूपी उपनिषदहरूगाई हुने (गोठालो) गोपालका पुत्र भगवान् श्रीकृष्ण हुन, गाईलाई पधार्ने बाच्छोस्वरूप अर्जुनहुन् , सर्वश्रेष्ठ भएको गीतारूपअमृत दुध हो, तेस दुधको स्वाद लिने बुद्धिमान् पुरूष हो।

बसुदेवसुतं देवं कंसचाणूरमर्दनम् ।

देवकीपरमानन्दं कृष्णं वन्दे जगद्गुरूम् ।।५।।

बसुदेवका पुत्र, देवतारूप, कंश र चाणुर नाम गरेका राक्षसीप्रकृतिहरूलाई मर्दन गर्ने (निमोठ नामोठ पार्ने) माता देवकीलाई ठूलो आनन्द दिलाउने, जगतैका गुरू श्रीकृष्णलाई नमस्कार गर्दछु।

भीष्मद्रोणतटा, जयद्रथजला, गान्धारनीलोत्पला'

शल्यग्राहवती, कृपेण वहनी, कर्णेन बेलाकुला।

अश्वत्थामविकर्ण-घोरमकरा, दुर्योधनाबर्तिनी,
सोत्तीर्णा खलु पाण्डवै रणनदी कैवर्तकः केशवः ।।६।।

भीष्मपितामह र द्रोणाचार्यरूपी दुई तर्फका किनारा भएकी, जयद्रथ राजारूपी पानीले भरिभराऊ भएकी, शकुनीरूपी नीलकमलले युक्त भएकी, शल्य राजारूपी ग्राह (गोही) भएकी, कृपाचार्यरूपी बहना भएकी, कर्मरूपी उमडिंदै आउँने छाल भएकी महाराज रणनदी थिइन् नदी तार्ने कृपालु माझी जस्तो केशव (भगवान् श्रीकृष्ण) हुनुहुन्थ्यो, वहाँके सहायता पाए र पञ्चपाण्डवहरूले त्यस्तो भयङ्कर रणनदी पनी सहजै सङ्ग तरेर पार गरे।

पाराशर्यबचः सरोजममलं गीतार्थगन्धोत्कटम् ,
नानाख्यानककेसरं हरिकथासम्बोधनाबोधितम् ।
लोके सज्जनषट्पदैरहरह पेपीयमान मुदा,
भूयाद्भारतपङ्कजं कलिमलप्रध्वंसि नः श्रेयसे ।।७।।

श्री बेदव्यासजीको वचनरूपी तलाउमा उब्जेको, बहुत सफा, गीताको अर्थरूपी बढिया सुवासनाले युक्त (चाख लाग्ने), नाना प्रकारका इतिहास-कथारूपी केसर भयेको, हरिका कथारूपी सूर्य किरणले प्रफुल्ल गराइयेको, यस लोकमा सज्जनरूपी भमराहरूले सूर्य किरणले प्रफुल्ल गराइयेको, यस लोकमा सज्जनरूपी भ्रमराहरूले बारम्बार खुशी हुँदै पनि गरियेको (पढ़ियेको, कलिरूपी; मललाई नाश गर्न समर्थ भयेको, भारतरूपी कमल हामीहरूको कल्याणका निमित्त होस् अर्थात् हामीहरू भारतको पठन-पाठन गरेर लेख्ना कहियेका गीता इत्यादि विषयहरूबाट सार लिन सक्ने होऊँ।

मूकं करोति बाचालं पंङ्गु लंघयते गिरिम् ।
यत्कृपा तमहं वन्दे परमानन्दमाधवम् ।।८।।

जुन परमात्माका अनुग्रहले लाटोलाई बोलाउने गराउँदछ र लङ्गढोलाई पनी, पहाड़ नाघ्न सक्ने गराउँदछ, तेस्ता परम दयालु, परमानन्द ब्रह्म रूप, लक्ष्मीका पति (विष्णु) लाई म नमस्कार गर्दछु।

सशंखचक्रं सकिरीटकुण्डलं सपीतवस्त्रं सरसीरूहेक्षणम् ।
सहारवक्षः स्थलकोस्तुभश्रियं नमामि विष्णुं शिरसा चतुर्भुजम् ।।९।।

शंखचक्र हातमा लियेका, माथमा किरीट र कानमा कुण्डल लायेका पिताम्बर पैह्रेका कमलका पत्र-जस्तै लामा, लामा नजर कोश भयेका माला लायेका वक्षःस्थलमा कौस्तुभ मणिको शोभा झल्लाई रहेका चतुर्बाहु विष्णुलाई शिर झुकायेर नमस्कार गर्दछु।

वंशीविभूषितकरान्नवनीरदाभात्
पीताम्बरादरूणविम्बफलाधरोष्ठात् ।
पूर्णेन्दुसुन्दरमुखादरविन्दनेत्रात्
कृष्णात्परं किमपि तत्वमहं न जाने ।।१०।।

बांसुरी हातमा लियेका नीरमणिको जस्तो कान्ति भयेका पीताम्बर पैह्रैको पाकेको गोलकांक्रो झैं लाल ओठ भयेक पूर्णचन्द्र झैं सुन्दर मुख भयेका, नीलकमल जस्ता नजर भयेक परमात्मा श्रीकृष्ण भन्दा कुनै पर तत्व म जान्दिन ।

त्वमेव माता च पिता त्वमेव
त्वमेवबन्धुश्च सखा त्वमेव!
त्वमेव विद्या, द्रविणं त्वमेव
त्वमेव सर्व मम देवदेव! ।।११।।

हें देवदेव! आमा तपाई नै, पिता तपाई नै बन्धुवर्ग तपाई नै

संगी तपाई नै विद्या तपाई नै धन-संपत्ति तपाई नै, अथवा मेरो जो कुछ छ त्यो सब तपाई नै हुनुहुन्छ, तपाई बाहेक अरू मेरो कोही पनी छैँदैछैन ।

यं ब्रह्मावरूणेद्ररूद्र मरूतस्तुन्वन्ति दिब्यैस्तवैं-
बेदै; साङगपदक्रमोपनिष्दैर्गायन्ति यं सामगा:।
ध्यानावस्थिततद्‌गतेन मनसा पश्यन्ति यं योगिनो
यस्याऽन्तं न बिदु: सुरासुरगणा देवाय तस्मै नम: ।१२।

ब्रह्मा सृष्टि गर्ने देवता, वरूण (जल का देवता), इन्द्र (प्रजापालन गर्ने देवता राजा रूद्र संहारको देवता मरूत् (प्राण का देवता) इनीहरू आफ्ना आफ्ना दिव्यस्तुतिहरूले जस्लाई स्तुति गर्दछन् (जस्को) आज्ञा बमोजीमको कामरूपी निरन्तर स्तोत्रपाठले जस्का अलौकिक शक्तिको तारीफ त्यही कामबाटै गरि-रहेका छन् ),सामवेद गाउनेहरू अङ्ग पद क्रम-उपनिषदहरूले सहित भयेका चारै बेदहरूले जस्का महिमाको गान गर्दछन् (बेदहरूलै गान गरिने पनी तपाइकै अलौकिक सामर्थ्य हो), योगीहरू ध्यानमा रहेर एकाग्र मनले विचार गर्दा जस्लाई जहाँ तिहीं व्याप्त भयेर रहेको देख्दछन् (सर्वव्यापी तपाई नै हुनुहुन्छ), देवगण वा दैत्यगण कसैले पनी जस्को अन्त्यै पाउन सकेनन् अथवा देवदानवहरूको जस्को अन्त (नाशमरण) भन्ने कुरा कहिल्यै थाह पायेनन् तपाई अव्यय हुनुहुन्छ), तेस्ता अविनाशी देव (परमात्मा) लाई नमस्कार छ।

या सूक्ति रूपेण जगत्त्रयीणा-
मालोकयात्राविधये प्रवृत्ता।
सा भूरितृष्णातरलीकृतानां
गीतेश्वरी नृत्यतु चित् तरङ्गे ।।१३।।

जो बहुतै राम्रो बोली· रूप लियर अथवा बोली द्वार नै तीन लोक(स्वर्ग-मर्त्य-पाताल) को दर्शन गराउँन रखासै सैर गराउँनाका निमित्त पनी प्रवृत्त भयेकी छन् तत्पर रहेकी छन् ) परमात्माकी शक्ति र सर्वेश्वरी उनै गीताजी मै सांसारिक-देवी परमार्थिक अनेक कामनाले (डाँवाडोल) गराइयेका हामी सबे जनहरूका चित्तरूपी नाचघरमा अथवा चितरूपी लहरीमा पनी नाचुन् अर्थात् - गीताको सेवाले ऐहिक र पारलौकिक सबै कुरा पाउँन सकिन्छ यस कारण हामी सबै ले तन मन दिई गीताजीको राम्ररी पठन-पाठन र मनन पनी गरौं।

गीताध्यानपुष्पाञ्जलिः समाप्तः



श्री गणेशाय नमः

# श्रीमद्भगवद्गीता

## तथा

## कोमलगीता

नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् ।
देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ।।

नेपालीले बुझौं कृष्ण! गीताका धर्मको गति।
गीता कोमलगीताको गान गर्दै यथामति ।।

### अर्जुनविषादयोग-१

महाराज धृतराष्ट्रको प्रश्न-

धृतराष्ट्र उवाच-

धर्मक्षेत्रे कुरुक्षेत्रे समवेता युयुत्सवः ।।
मामकाः पाण्डवाश्चैव किमकुर्वत सञ्जय ! ।।१।।

धर्मस्थान [1]कुरुक्षेत्रबीचयुद्ध - [2]दृढाशय ।
[3]कुरु [4]पाण्डवले फेरि के गरे? भन [5]सञ्जय !।।

---

१. आजकाल 'पानिपत' भन्दछन् । २. युद्धमा अट्टल मन गरिसकेका। ३. कुरुराजाका सन्तान कौरवहरू । ४. पाण्डुराजाका सन्तान पाण्डवहरू । ५. महाराज धृतराष्ट्रका हजूरिया मन्त्री । यिनले व्यासजीबाट दिव्य दृष्टि पायेका थिए ।

महाराज धृतराष्ट्रले सोध्नुभयो- हे सञ्जय ! पुण्यभूमि (धर्मस्थल) कुरुक्षेत्रमा युद्धको इच्छाले जम्मा भएका मेरा छोरा दुर्योधनादिले र पाण्डुका छोरा युधिष्ठिरादिले के गरे १।।

## पाण्डवसैन्य - वर्णन

सञ्जय उवाच-

दृष्ट्वा तु पाण्डवानीकं व्यूढं दुर्योधनस्तदा ।।
आचार्यमुपसंगम्य राजा वचनमब्रवीत ।। २ ।।

देखी पाण्डवसेनाको [1]वज्रव्यूह महा-धन ।
श्रीद्रोणाचार्यका साथ भन्न लागे सुयोधन[2] ।।

सञ्जयले बिन्ती गरे- महाराज! त्यस बखत पाण्डवहरुको सैन्यलाई वज्राकार-व्यूह रचना गरी तयार भएको देखेर महाराज दुर्योधन द्रोणाचार्यको नगीच गई यस्तो कुरा भन्न लागे ।।

पश्यैतां पाण्डुपुत्राणामाचार्य ! महतीं चमूम् ।
व्यूढां द्रुपदपुत्रेण तव शिष्येण धीमता ।।३।।

हेर्नुहोस, गुरुकै शिष्य धीमान्[3] [4]द्रुपद-पुत्रले ।
यो ठूलो [5]पाण्डवी सेना [6]हाँकिएको [7]प्रयत्नले ।।

हे आचार्य (गुरु)! पाण्डवहरूको यो ठूलो सैन्यलाई हेर्नुहोस्, जसको व्यूहरचना हजूरका बुद्धिमान् शिष्य, द्रुपदका छोरा, धृष्टद्युम्नले गरिएको छ ।।

अत्र शूरा महेष्वासा भीमार्जुनसामा युधि ।।
युयुधानो विराटश्च द्रुपदश्च महारथः ।।४।।

---

१. वजको जस्तो आकार भएको नरदुर्ग (किल्ला)। २. महाराज दुर्योधन। ३. बुद्धिमान । ४. धृष्टद्युम्नले । ५. पाण्डवहरूको। ६. काइदामाफिक चलाइएको । ७. कोशिशसाथ ।

**यहाँ महा-धनुर्धारी [१]भीमार्जुन-बराबर ।**
**महारथी श्रीद्रुपद, [२]युयुधान, विराट र ।।**

यस सेनामा महा-धनुर्धारी, युद्धमा अर्जुन र भीमसेन जत्तिकै पराक्रमी धेरै शूरवीरहरु छन् , जस्तै युयुधान (सात्यकि), बिराट् राजा र महारथी महाराज द्रुपद ।।

**[३]धृष्टकेतु, चेकितान[४],काशीराज पराक्रमी ।**
**पुरुजित् श्रीकुन्तिभोज[५] [६]शिविराज नराग्रणी ।।**

अनि धृष्टकेतु, चेतिकान, त्यस्तै पराक्रमी काशीराज, बहुविजेता कुन्तिभोज र मनुष्यहरुमा श्रेष्ठ शैन्य ।।

युधामन्युश्च विक्रान्त उत्तमौजाश्च वीर्यवान् ।
सौभद्रो द्रौपदेयाश्च सर्व एव महारथाः ।।६।।

**[७]उत्तमौजा, [८]युधामन्यु, [९]सौभद्र, [१०]द्रौपदी-सुत।**
**[११]महारथी हुन् रणमा छन् सबै शूर अद्भुत ।।**

अनि पराक्रमी युधामन्यु, वीर्यशाली उत्तमौजा, सुभद्रापुत्र अभिमन्यु त्यस्तै द्रौपदीका पाँच पुत्र यी महारथी हुन् ।।

---

१.भीमसेन र अर्जुन बराबर । २. सात्यिक । ३. शिशुपालका छोरा । ४. यदुकुलका योद्धा । ५. पाण्डवका मामा । ६. शिविदेशका राजा । ७. पाञ्चालदेशका रजौठा । ८. पाञ्चालराजा । ९. सुभद्राका पुत्र अभिमन्यु । १०. द्रौपदी महारानीका छोराहरू । ११. दश हजार धनुर्धारी योद्धासंग एक्लै लड़ाइँ गर्न सक्ने ।

## कौरव सैन्यवर्णन-

अस्माकं तु विशिष्टा ये तान् निबोध द्विजोत्तम ।।
नायका मम सैन्यस्य संज्ञार्थं तान्ब्रवीमि ते ।।७।।

हाम्रा यी सैन्यमा ठूला जो सेनापति छन् सब ।
गुरुजी !भन्दछू उन्को नामादिक [१]सगौरव ।।

हे ब्राह्मणमा श्रेष्ठ (गुरु) ! हामीतर्फका सेनामा जो जो प्रधान सेनापति छन् , तिनका नाम पनि चिह्लाउनाका लागि म हजूरलाई सुनाउँछु, राम्ररी सुन्नुहोस् ।

भवान् भीष्मश्च कर्णश्च कृपश्च समितिञ्जयः ।।
अश्वत्थामा विकर्णश्च सोमदत्तस्तथैव च ।।८।।

हजूर, भीष्मजी, कर्ण, अश्वत्थामा, [२]विकर्ण र ।
भूरिश्रवा, कृपाचार्य, [३]समितिञ्जय [४]दुर्धर ।।

पहिला खूद हजूर, भीष्मपितामह, कर्ण युद्धमा विजयी कृपाचार्य अश्वत्थामा, विकर्ण र सोमदत्तका पुत्र (भूरिश्रवा) ।।

अन्ये च बहवः शूरा मदर्थे त्यक्तजीविताः ।।
नानाशस्त्रप्रहरणाः सर्वे युद्धविशारदाः ।।९।।

अरु पनी मभन्दामा गर्ने प्राण समर्पण ।
[५]शस्त्रास्त्रयुद्ध-मर्मज्ञ लडाका छन् कडोरन ।।

त्यस्तै यीबाहेक, धेरैजसो अरू पनि शूरवीरहरू मेरा निमित्त

---

१. महत्वका साथ । २. दुर्योधनका १०० भाइमध्येमा १ भाई ।
३. लड़ाइँ जित्ने वा एक पुरुषको नाम । ४. शत्रुले डेग चलाउनै नसकिने।
५. शस्त्रास्त्र युद्धको मर्मजानी प्रयोग गर्न सक्ने ।

प्राण दिनलाई तयार छन् औ यी सब नाना प्रकारका शस्त्रास्त्र चलाउनामा सिपालु र युद्धमा प्रवीण पनि छन् ।।

दुवै सेनाहरूको तुलना -

अपर्याप्तं तदस्माकं बलं भीष्माभिरक्षितम् ।।
पर्याप्तं त्विदमेतेषां बलं भीमाभिरक्षितम् ।।१०।।

**भीष्मले हाँकिएको यो हाम्रो सैन्य[1] अगाध छ ।**
**थोरै छ पाण्डवी सेना जस्को [2]नायक भीम[3] छ ।।**

यस किसिमको यो हाम्रो सैन्य, जसको रक्षा खुद भीष्मले गरीरहेका छन् अपर्याप्त (असंख्यात) छ; परन्तु ती पाण्डवहरूको त्यो सैन्य, जसको रक्षा भीमसेनले गरिएको छ, पर्याप्त (परिमिति, थोरै) छन् ।

फौजमा दुर्योधनको आज्ञा-

अयनेषु च सर्वेषु यथाभागमवस्थिताः ।।
भीष्ममेवाऽभिरक्षन्तु भवन्तः सर्व एव हि ।।११।।

[4]प्रवेशद्वार सारामा आफ्नो ठाउँ लिईकन ।
तपाईहरुले गर्नू भीष्मकै अब [5]रक्षण ।।

यस बखत तपाईहरु सबैले आफ्ना-आफ्ना तोकिएका सैन्यका भिन्न-भिन्न प्रवेशद्वार (मुहुडा) हरुमा बसेर सेनापति भीष्मपितामहको नै जतातत‌ैबाट रक्षा गर्नुहोस् ।।

---

१. अन्त्य नपाइसक्नु । २. नेता (सीनियर कमान्डर) । ३. भीमसेन। ४. जुन भाग छिन्नभिन्न गरेर शत्रुहरूले हमला गर्दछन् । ५. शिखण्डी आदिबाट बचावट।

युद्धप्रारम्भको शङ्खध्वनि-

तस्य सञ्जनयन्हर्षं कुरुवृद्धः पितामहः ।।
सिंहनादं विनद्योच्चैः शंङ्खं दध्मौ प्रतापवान् ।।१२।।

**यस्तैमा [1]उनमा हर्ष बर्साई भीष्म वीरले ।**
**सिंहनाद गरी शंख बजाए खूब जोरले ।।**

यसप्रकारले दुर्योधनको द्रोणाचार्यसँग कुरा भइसकेपछि, दुर्योधनलाई हर्ष गराउँदै महाप्रतापशाली, कुरुवृद्ध, पितामह (सेनापति भीष्म) ले सिंहकै समान ठूलो गर्जना गरेर, लडाईँको शुरू सूचना गर्ने आफ्नो शङ्ख (बिगुल) बजाए ।।

ततः शंखाश्च भेर्यश्च पणवानकगोमुखाः ।।
सहसैवाऽभ्यहन्यन्त स शब्दस्तुमुलोऽभवत् ।।१३।।

**त्यो-साथै शंख कर्नाल, नगारा, ढोल, मादल ।**
**बजे संग्रामका बाजा धन्क्यो भुवनमण्डल ।।**

सेनापति भीष्मको शंख बज्नासाथ अनेक शंख, नगारा, ढोल, मादल कर्नाल (नर्सिंगा), आदि लँडाइका बाजाहरु धमाधम बज्न लागे, औ यी बाजाहरूको भयंकर शब्द (घनघनाहट) चारौंतर्फ फैलिएको थियो।

ततः श्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ ।
माधवः पाण्डवश्चैव दिव्यौ शंखौ प्रदध्मतुः ।। १४।।

**अनि [2]श्वेताश्वले युक्त महारथमहाँ [3]स्थितः ।**
**कृष्ण-अर्जुनले शंख बजाए दिव्य[4] अद्भुत ।।**

---

१. दुर्योधनमा । २. सेता घोडाहरुले । ३. बसेका । ४. अलौकिक।

यसपछि, सफेद घोडाहरु जातियोको ठूलो रथमा बसेका श्रीकृष्ण र अर्जुनले 'हामी पनि तयार छौं' भन्ने प्रत्युत्तरको तवरसँग दिव्य शंख बजाए।

पाञ्चजन्यं हृषिकेशो देवदत्त धनञ्जयः ।।
पौण्ड्रं दध्मौ महाशंखं भीमकर्मा वृकोदरः ।। १५।।

श्रीकृष्णले पाञ्चजन्य, देवदत्त [1]किराटले ।
पौण्ड्रनाम महाशंख बजाए वीर भीमले ।।

हृषिकेष (इन्द्रियहरुका स्वामी) भगवान् श्रीकृष्णले पाञ्चजन्य, अर्जुनले देवदत्त र भयङ्कर कर्म गर्ने वृकोदर (भीमसेन) ले पौण्ड्र नाम को ठूलो शंख बजाए।।

अनन्तविजयं राजा कुन्तीपुत्रो युधिष्ठिरः।।
नकुलः सहदेवश्च सुघोषमणिपुष्पकौ।।१६।।

अनन्त विजयी शंख बजाए [2]धर्मराजले।
मणिपुष्पक-सौघोष माद्रीका दुइ [3]पुत्रले।।

कुन्तीपुत्र महाराज युधिष्ठिले अनन्तविजय नाम को शंख र नकुल त्यस्तै सहदेवले सुघोष र मणिपुष्पक नाम भएका शंख बजाए।।

काश्यश्च परमेष्वासः शिखण्डी च महारथः।।
धृष्टद्युम्नो विराटश्च सात्यकिश्चाऽपराजितः।।१७।।

महारथी [4]शिखण्डी र [5]धनुष्मान् काशिकेश्वर।
[6]अजेय सात्यकि अनी धृष्टद्युम्न, विराट र।।

महाधनुर्धारी काशीराज, महारथी शिखण्डी, धृष्टद्युम्न, राजा विराट् र अजेय सात्यकि।।

---

१. अर्जुनले । २. युधिष्ठिरले । ३. सहदेव र नकुलले । ४. कुबेरको अनुग्रहले स्त्रीबाट पुरूष भएको । ५. श्रेष्ठ धनुर्धारी । ६. जितिनसक्नु ।

द्रुपदो द्रौपदेयाश्च सर्वशः पृथिवीपते ! ।।
सौभद्रश्च महाबाहुः शंखान्दध्मुः पृथक् पृथक् ।।१८।।

द्रौपदीपुत्र, सौभद्र, राजा द्रुपदले पनि।
आफ्ना आफ्ना फुके शंख 'हामी तैयार छौं भनी।।

महाराज! त्यस्तै राजा द्रुपद, द्रौपदीका पाँच छोरा, महाबाहु अभिमन्यु, इत्यादि सबै वीरहरूले सामेलीको तवरसँग चारैतिरबाट आफ्ना आफ्ना भिन्न भिन्न शंख बजाए।।

स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत् ।।
नभश्च पृथिवीं चैव तुमुलो व्यनुनादयन् ।।१९।।

घन्की घनक्क त्यै शब्द आकाश-पृथिवी-भरी।
सारा[1] कौरव-सेनाको चिस्र्यो हृदय चर्चरी।।

ती शंखहरूको तुमुलध्वनि (घनघोर आवाज) ले आकाशमण्डल र पृथ्वीमण्डललाई पनि प्रतिध्वनित गराउँदै हजूर का छोराहरूका मुटु कलेजालाई पनि चर्चरी चिर्न लाग्यो।।

अर्जुनबाट सेना निरीक्षण -

अथ व्यवस्थितान् दृष्ट्वा धार्तराष्ट्रान् कपिध्वजः।
प्रवृत्ते शस्त्रसंपाते धनुरुद्यम्य पाण्डवः।।२०।।

हेरी तैयार ती सारा कुरूसैन्यहरूकन।
[2]शस्त्र-संपात-बेलामा उठाई धनु अर्जुन।।

त्यसपछि कपिध्वज (हनुमान् ध्वजामा रहेका) अर्जुनले कौरवहरू (धृतराष्ट्रका सन्तान लगायत उसतर्फका) लाई व्यवस्थापूर्वक आफ्ना-

---

१. दुर्योधनतर्फका फौज । २. शस्त्र चलाउन्यै बखतमा ।

आफ्ना स्थानमा तयार भई बसेका [illegible] [illegible] [illegible]को हानाहान शुरूहुन्यै बखतमा आफ्नू धनु [illegible]

हृषीकेशं तदा वाक्यमिदमाह महीपते ।

अर्जुन उवाच-

सेनयोरूभयोर्मध्ये रथं स्थापय मेऽच्युत! ।।२१।।

**श्रीकृष्णसँग यो बिन्ती गर्न लागे नगीचमा।**

**''लानुहोस् रथ यो मेरो यी दुई-सैन्य-बीचमा।।**

महाराज! यसपछि, अर्जुनले भगवान् श्रीकृष्णसँग यस्तो कुरा बिन्ती गर्न लागे- हे अच्युत, (कुनै कुरामा पनि नचुक्ने कृष्ण ) मेरो रथ दुवै थरी सैन्यहरूको बीचमा लगेर अड्याउनुहोस् ।।

यावदेतान्निरीक्षेऽहं। योद्धुकामानवस्थितान् ।।

कैर्मया सह योद्धव्यमस्मिन् रणसमुद्यमे ।।२२।।

**म हेरूँ पहिले कृष्ण ! युद्धलाई खडा हुने ।**

**को को रहेछन्, [१]''कोमाथि मैले शस्त्र [२]उठाउने ? ।।**

म हेर्न चाहन्छु कि युद्धको इच्छाले तयार भएर यहाँ को को आएका रहेछन् ? मैले यस संग्राममा कोमाथि शस्त्र उठाउनुपर्ने हो?

योत्स्यमानानवेक्षेऽहं य एतेऽत्र समागताः।।

धार्तराष्ट्रस्य दुर्बुद्धेर्युद्धे प्रियचिकीर्षवः।।२३।।

**[३]दुर्बुद्धि दुर्योधनको युद्धमा जयखातिर।**

**जम्बा भएका जो जो छन्, हेर्दछु म तिनैतिर।।**

---

१. कसका उपर । २. चलाउने (हात्रे) । ३. दुराग्रही ।

युद्धमा दुर्बुद्धि (अर्काको अंश जबर्दस्ती अँठ्याउन चाहने दुष्ट बुद्धि भएको ) दुर्योधनको कल्याण (जय) चाहने जो जो लडाकाहरू यस सेनामा आएका छन् , ती युद्ध गर्ने सबलाई म हेरूँ।।

संजय उवाच-

एवमुक्तो हृषीकेशो गुडाकेशेन भारत ।
सेनयोरूभयोर्मध्ये स्थापयित्वा रथोत्तमम् ।।२४।।

यस्तो अर्जुनले बिन्ती गरिएका [1]नरोत्तम।
ती दुवै सैन्यको बीच राखेर रथ उत्तम।।

भरतवंशी महाराज ! गुडाकेश ( निद्रा-आलस्य जित्ने अथवा घुंगुरिएका केश भएका) अर्जुनले यति बिन्ती गरेपछि, श्रीकृष्णले अर्जुनको उत्तम रथलाई दुवै सेनाहरूको ठीक मध्यभागमा पुऱ्याई अड्याउनुभयो र ।।

भीष्मद्रोणप्रमुखत: सर्वेषां च महीक्षिताम् ।।
उवाच पार्थ ! पश्यैतान् समवेतान् कुरूनिति ।।२५।।

भीष्म, द्रोण, अरू राजाहरूका सामुमा अनि ।
बोल्नुभो, "पार्थ[2] ! लौ हेर जम्बा [3]कौरवयी' भनी ।।

अनि, भीष्म, द्रोण र सब राजाहरूका सामनेमा श्रीकृष्णावाट आज्ञा भयो - अर्जुन ! यहाँ जम्मा भएका यी सब कौरवहरूलाई हेर ।।

तत्राऽपश्यत् स्थितान् पार्थ पितृनथ पितामहान् ।।
आचार्यान्मातुलानभ्रातृनपुत्रानपौत्रान्सखींस्तथा।।२६।।

त्यहाँ अर्जुनले देखे बाबु, बाज्ये, सँगीजन ।
गुरू, मामा, दाजु-भाइ, छोरा नाति अनेकन ।।

---

१. मानिसमा श्रेष्ठ (कृष्ण) । २. पृथा (कुन्ती) महारानी का पुत्र हे अर्जुन ! । ३. कुरूराजाका सन्तान लगायत।

त्यहाँ अर्जुनले देखे कि आफ्नै बाबु (काका), बाज्ये (जिबाबु), गुरू, मामा, भाइ, छोरा नाति असंख्यात धेरै र ।।

श्वशुरान् सुहृदश्चैव सेनयोरूभयोरपि ।।
तान् समीक्ष्य स कौन्तेयः सर्वान् बन्धूनवस्थितान् ।।२७।।

**त्यस्तै प्रेमी र ससुरा इत्यादिक हजारन ।**
**देखी दुवै सैन्यतर्फ आफ्ना बन्धुहरूकन ।।**

त्यस्तै ससुरा, प्रेम गर्ने सब आपस्त र माननीय मानिसहरू मर्नमार्ना को निमित्त ठीकठाक परी दुवै तर्फका सेनामा जम्मा भएका देखे र ।

## अर्जुनको खेद - खेदको शरीरमा असर-

कृपया परयाऽऽविष्टो विषीदन्निदमब्रवीत् ।।
अर्जुन उवाच -
दृष्ट्वेमं स्वजनं कृष्ण ! युयुत्सुं समुपस्थितम् ।।२८।।

**लागी ठूलो दया, दिक्क भई, अर्जुनले भने ।**
**"हे कृष्ण ! देखी [१]स्वजन युद्धनिंति खडा हुने ।।**

त्यस बखत माया लागी कुन्तीका पुत्र अर्जुन खिन्न (दिग्दार) हुँदै भन्न लागे-हे कृष्ण ! युद्ध गर्नाको इच्छाले यहाँ जम्मा भएका यी आपस्त बन्धुवर्गहरूलाई देखे र ।।

सीदन्ति मम गात्राणि मुखं च परिशुष्यति ।।
वेपथुश्च शरीरे मे रोमहर्षश्च जायते ।।२९।।

**मेरा अङ्ग सबै गल्छन् , मुख अत्यन्त सुक्तछ ।**
**शरीरमा कंप हुन्छ, रोमाञ्च पनि आउँछ ।।**

१. आफ्नो मानिस (बन्धुवर्ग) ।

मेरो शरीर (अङ्गप्रत्यङ्गहरू) सबै गल्दछन्, मुख पनि सुकिरहेछ, शरीर थर्थरी काँप्न लागेको छ, शरीरमा रोमाञ्च भइरहेछ।।

गाण्डीवं स्रंसते हस्तात् त्वक्चैव परिदह्यते ।।
न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मनः ।।३०।।

**हातबाट धनू[1] खस्छ, छाला भत्भति पोल्दछ ।**
**टिक्नै सक्तिनँ, यो चित्त बहुतै चक्कराउँछ ।।**

त्यस्तै हातबाट गाण्डीव धनु खस्दछ औ शरीरमा सर्वत्र दाह भइरहेछ, यी आपस्तहरूको शोचनीय अवस्था संझी रथमा टिक्नै सक्तिनँ, मन बेहोश जस्तो भई चक्कर खान लागिरहेछ ।।

## खेदको मनमा असर-

निमित्तानि च पश्यामि विपरीतानि केशव ।।
न च श्रेयोऽनुपश्यामि हत्वा स्वजनमाहवे ।।३१।।

**सारा[2] लक्षण हे कृष्ण ! विपरीत[3] म देख्दछु ।**
**आपस्त मारी रणमा कल्याणौं छैन ठान्दछु ।।**

हे कृष्ण ! मलाई सब लक्षण उल्टा नै प्रतीत हुन्छन्, औ युद्धमा आफ्नो कुललाई नासेर (स्वजनलाई मारेर) मलाई कल्याण हुने जस्तो केही पनि देख्दिन, अर्थात् कल्याण छैन ।।

## स्वजनहरूको मोह-

न काङ्क्षे विजयं कृष्ण! न च राज्यं सुखानि च ।।
किन्नो राज्येन गोविन्द किंभोगैर्जीवितेन वा ।।३२।।

---

१. गाण्डीव । २. सगुन । ३. उल्टो ।

यस्तो[1] विजय चाहन्न सुख राज्य कुनै पनि ।
के भयो राज्यले? फेरि भोग [2]जीवनले पनि ।।

हे कृष्ण! मयस तरहको विजय (जितबाजी) राज्य, सुखभोग पनि चाहन्नँ, हे गोविन्द ! हामीले बन्धुवर्गहरुलाई मारेर राज्य, सुखभोग र जिन्दगीले पनि के गरौंला ।।

येषामर्थे काङ्क्षितं नो राज्यं भोगाः सुखानि च ।।
त इमेऽवस्थिता युद्धे प्राणांस्त्यक्त्वा धनानि च ।।३३।।

जस्का निमित्त चाहिन्थ्यो राज्य, भोग, सुखादिक ।
[3]धन-प्राण सबै छोडी उनै छन [4]समरोत्सुक ।।

किनभने, हामीलाई जसका निमित्त राज्य, उपभोग र सुखहरूको इच्छा (चाहना) थियो, उनै सब आपस्तहरू आफ्नो ज्यान र संपतिको समेत ममता छोडेर युद्धमा तयार छन् ।।

आचार्याः पितरः पुत्रास्तथैव च पितामहाः ।।
मातुलाः श्वशुराः पौत्राः श्यालाः सम्बन्धिनस्तथा ।।३४।।

गुरु, बाबुहरू, बाज्ये, साला, मामा, सँगीजन ।
छोरा, नाती, भाइ-बन्धु, श्वशुरादि हजारन ।।

जो कि, गुरुजन, बाबु, बाज्ये, छोरा, नाति, मामा, ससुरा, साला, दाजु भाई त्यस्तै अरू पनि सम्बन्धी (इष्ट- मित्र) मानिसहरू (छन्) ।।

एतान्न हन्तुमिच्छामि घ्नतोऽपि मधुसूदन ।।
अपि त्रैलोक्यराज्यस्य हेतोः किं नु महीकृते ।। ३५।।

---

१. जितबाजी अथवा अर्जुन । २. जिन्दगीले । ३. जीउ-धन लडाईमा उत्सुक ।

पृथ्वीको के कुरा? [१]सारा लोक पाए पनी अब ।
यिन्लाई मार्न चाहन्नँ आइलागे पनी सब ।।

यद्यपि यिनीहरू हामीलाई मार्नाको निमित्त खडा छन, तथापि हे मधुसूदन! यस तुच्छ पृथ्वीको निमित्त के कुरा! म ता तीनै लोकको नै राज्य पाइन्छ भने पनि यी बान्धवलाई मार्न चाहन्नँ।।

निहत्य धार्तराष्ट्रान्नः का प्रीतिः स्याज्जनार्दन ।।
पापमेवाश्रयेदस्मान्हत्वैतानाततायिनः ।।३६।।

मारी कौरव यी हाम्रो केभलो हुन्न आउला?
[२]आततायी पनी बन्धु मार्नाले पाप लागला !

हे जनार्दन! धृतराष्ट्रका पुत्र दुर्योधनादिलाई मारेर पनि हामीलाई के असल होला? यिनी आततायी हुन् तापनि यिनलाई मार्‍यौं भने हामी अवश्य पापका भागी हुनेछौं ।।

तस्मान्नार्हा वयं हन्तुं धार्तराष्ट्रान् स्वबान्धवान् ।।
स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधवः! ।।३७।।

तसर्थ हामिले मार्न हुन्न आत्मीय बान्धवः ।।
कसो गरी सुखी हौंला बन्धु मारेर माधव?।।

त्यसकारण, हामीले आफ्ना बान्धव धृतराष्ट्रका पुत्रहरूलाई मार्नु

---

१. त्रैलोक्यराज्य ।

२. अग्निदो गरदश्चैव शस्त्रपाणिर्धनापह ।
क्षेत्रदाराहरश्चैव षडेते आततायिनः (व.स्मृ. ३. १६)

अर्थ- आगो लगाउने, विष ख्वाउने, हतियार लिई जाइलाग्ने, धन हर्ने, खेत लुट्ने, स्त्रीहरण गर्ने यी ६ आततायी कहिन्छन् ।

योग्य हुँदैन; किनभने हे माधव! आपस्तलाई मारेर हामी सुखी कसरी हौला? ।।

## कुलक्षय र मित्रद्रोह-

यद्यप्येते न पश्यन्ति लोभोपहतचेतसः ।।
कुलक्षयकृतं दोषं मित्रद्रोहे च पातकम् ।।३८।।

**हुन ता यिनि देख्तैनन् वशमा परि लोभको ।**
**यो मित्रद्रोहको पाप, यो दोष कुलनाशको ।।**

यिनीहरू सबको चित्त लोभको वशमा परिरहेको छ यसैले हुन त कौरवहरू कुलक्षयबाट हुने दोष र मित्रहरूका साथ विरोध गर्दामा हुने पापलाई पनि देख्तैनन् ।

कथं न ज्ञेयमस्माभिः पापादस्मान्निवर्तितुम् ।।
कुलक्षयकृतं दोषं प्रपश्यद्भिर्जनार्दन।।३९।।

**यो कुलक्षयको दोष देख्ने हामिले किन ।**
**यो पापबाट हट्नामा नजान्ने? हे [1]जनार्दन ।।**

तथापि, हे जनार्दन यो कुलक्षयको दोष राम्रैगरी देख्ने हामीहरूले यो पापबाट हट्नुपर्छ भन्ने कुरा किन नसंझने १।।

## कुलक्षयको परिणाम

कुलक्षये प्रणश्यन्ति कुलधर्माः सनातनाः ।।
धर्मे नष्टे कुलं कृत्स्नमधर्मोऽभिभवत्युत ।।४०।।

**नासिए कुल, नासिन्छन् कुलधर्म सनातन[2] ।**
**धर्मका नाशले[3] उस्मा पाप फैलिन्छ भीषण [4] ।।**

१. जनका गतिस्वरूप हे कृष्ण ! २. परापूर्वदेखि चलिआएका । ३. वंश (कुल) मा । ४. डरलाग्दो (भयङ्कर) ।

किनभने, कुलको नाश भएमा सनातन कुलधर्म नष्ट हुन्छन् , कुलधर्महरू नासिएमा संपूर्ण कुललाई अधर्म, पाप) ले पनि बिलकुल नै ढाक्तछ ।।

अधर्माभिभवात् कृष्ण! प्रदुष्यन्ति कुलस्त्रियः ।।
स्त्रीषु दुष्टासु वार्ष्णेय ! जायते वर्णसंकरः ।।४१।।

**फैलिंदा कुलमा पाप कुलस्त्री दुष्ट[१] बन्दछन् ।**
**स्त्रीहरू बिग्रँदा कृष्ण! वर्णशंकर[२] बढ्दछन् ।।**

हे कृष्ण! पाप फैलनाले कुलस्त्रीहरू दूषित हुन्छन् (बिग्रन्छन्) र हे वार्ष्णेय (वृष्णिकुलमा जन्मेका हे कृष्ण!) स्त्रीहरू बिग्रेमा वर्णसंकर सन्तान पैदा हुन्छन् ।।

संकरो नरकायैव कुलघ्नानां कुलस्य च ।।
पतन्ति पितरो ह्येषां लुप्तपिण्डोदकक्रियाः ।।४२।।

**कुलघाती[३] र कुलको नरकैलाइ संकर ।**
**हुन्छ, पितृहरू गिर्छन् पिण्डपानी[४] भई पर ।।**

वर्णशंकर उत्पन्न भएमा त्यसले कुलघातीहरूलाई र संपूर्ण कुललाई समेत निश्चय नै नरकमा लैजान्छ, अनि पिण्डदान र तर्पण आदि क्रियाहरू लुप्त हुनाले तिनका पितृहरू पनि नरकमा गिर्दछन् ।।

दोषैरेतैः कुलघ्नानां वर्णसंकरकारकैः ।।
उत्साद्यन्ते जातिधर्माः कुलधर्माश्च शाश्वताः ।।४३।।

**[५]वर्ण-सांकर्यका मूल दोषले कुलघातिका,**
**उखाडिन्छन्[६] जाति धर्म कुलधर्म अगाडिका ।**

---

१.व्यभिचारिणी । २. खच्चर सन्तान । ३. कुलनाश गर्ने । ४. पाउन नसक्ने । ५. वर्णसंकर बनाउने । ६. जातअनुसारको धर्म।

कुलघाती यिनै वर्णसंकरकारी दोषहरूले सनातन जातीयधर्म न कुलधर्म पनि नामेट हुन्छन् अर्थात् नामनिशानै रहँदैनन् ।

उत्सन्नकुलधर्माणां मनुष्याणां जनार्दन ।।
नरकेऽनियतं वासो भवतीत्यनुशुश्रुम ।। ४४ ।।

सुन्दछौं, कुलका धर्म जस्का विच्छिन्न[1] बन्दछन् ।
तिन्को नरकमा बास सर्वदा हुन्छ भन्दछन् ।।

अनि, हे जनार्दन! हामीले यस्तो पनि सुनेका छौं कि जुन मानिसहरुका कुलधर्महरू बिछिन्न हुन्छन् , तिनको अवश्यमेव घेरै कालसम्म नरकवास हुन्छ ।।

युद्धगर्नेको निश्चय-

अहो बत! महत्पापं कर्तुंव्यवसिता वयम् ।।
यद्राज्यसुखलोभेन हन्तुं स्वजनमुद्यताः ।।४५।।

अहो ठूलो पाप गर्न भएछौं हिम तत्पर! ।
राज्यको लोभले बन्धु मार्न आँट्यौं सरासर ।।

अहो! बड़ो खेदको कुरो छ कि हामीहरू जान्दाजान्दै पनि राज्य र सुखको लोभले स्वजनहरूलाई मार्न तयार भएका छौं! साँची नै यो हामीले एक ठूलो पाप गर्नालाई योजना गर्‍यौं ।

यदि मामप्रतीकारमशस्त्रं शस्त्रपाणयः ।।
धार्तराष्ट्रा रणे हन्युस्तन्मे क्षेमतरं भवेत् ।।४६।।

बरु शस्त्रास्त्र क्यै लिन्न, मलाई शस्त्र लीकन ।
दुर्योधनादिले मारून्, यै भलो छ जनार्दन ।।

---

१. छिन्नभिन्न (टुट्नू )!

यदि मकुनै किसिमबाट आफ्नो बचावट नगरी, शस्त्र पनि न लिएर चुपचाप् बसीरहुँ र यस अवस्थामा इनि कौरवहरुले शस्त्र लियेर मलाई लडाइँमा मारून तापनि त्यो मर्नु मेरा निम्ति अति कल्याणकारी हुनेछ ।

अर्जुनको धनुर्बाणत्याग-

सञ्जय उवाच

एवमुक्त्वाऽर्जुनः संख्ये रथोपस्थ उपाविशत् ।।
विसृज्य सशरं चापं शोकसंविग्नमानसः ।।४७।।

यति भनेर रणमा-शोकव्याकुल[१] अर्जुन
फ्याँकि धनुर्बाण थाले रथमित्र बसी रुन ।

सञ्जयले बिन्ति चढाए-महाराज! युद्धभूमिमा श्रीकृष्णसँग पूर्वोक्तकुराहरू बिन्ति गरेर, हातका धनु र बाणहरू फ्याँकी, शोकले व्याकुल चित्तभएका अर्जुन रथको भित्रपट्टि हटेर बसे ।।४७।

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे अर्जुनविषादयोगो' नाम
प्रथमोऽध्यायः ।।१।।

इति नेपालीभाशामा कोमलगीता अर्जुनविषादयोगो' नाम
प्रथमोऽध्यायः समाप्त ।।१।।



---

१. दिग्दारीले के गरूँ के गरूँ मनभएका ।

# श्रीमद्भगवद्गीता

## तथा

## कोमलगीता

### सांख्ययोगः २

कृष्णबाट नीचकर्म त्यागको उपदेश-

संजय उवाच-

तं तया कृपयाऽऽविष्टश्रुपूर्णाकुलेक्षणम् ।।
विषीदन्तमिदं वाक्यमुवाच मधुसूदनः ।।१।।

[1]दयावश भई आँसु खसाली, दिक्क भैकन ।
रहेका [2]पार्थमा आज्ञा गर्नुहुन्छ जनार्दन ।।

महाराज धृतराष्ट्रलाई सञ्जयले बिन्ति गरे-यसरी करूणाको वशीभूत भएर गहमरी आँसु काढेका र खिन्न भएका अर्जुनलाई श्रीकृष्णले यस्तो आज्ञा गर्नुभयो ।।

श्रीभगवानुवाच-

कुतस्त्वाकश्मलमिदं विषमे समुपस्थितम् ।।
अनार्यजुष्टमस्वर्ग्यमकीर्तिकरमर्जुन! ।।२।।

**स्वर्ग, कीर्ति, दुवै हर्ने [3]नीचसंसेव्य [4]मोह यो।**
**यस्तो संकटबेलामा तिमीमा कसरी भयो ? ।।**

---

१. मायालागी । २. अर्जुनमा । ३. छोटाले आचरण गरिने । ४. अज्ञानमनको मैलापना ।

श्रीकृष्णबाट आज्ञा भयो- हे अर्जुन! यस्तो संकटपरेको अवस्थामा (बेमौकामा) तिम्रो मनमा यो मोह कहाँ बाट आयो ? जसलाई सत्पुरूषहरूले कहिल्यै पनि आचरण गरेनन्, जसले स्वर्गको गतिमा विघ्न गराउँछ अकीर्ति (बदनाम) पनि गराउँछ ।।

क्लैब्यं मा स्म गमः पार्थ! नैतत्त्वय्युपपद्यते ।।
क्षुद्रं हृदयदौर्बल्यं त्यक्त्वोत्तिष्ठ परन्तप! ।।३।।

**नलेऊ पार्थ! [१]कार्तय बीरमा हुन्न यो ठिक ।**
**कम्जोरी छोड मनको,उठ, होऊ [२]रणोत्सुक ।।**

हे पार्थ यस्तो नामर्द पना अर्थात्‌कातरपना छोड, तिमि जस्ता बहादुरलाई यो लाछीपनाले शोभा दिंदैन, हे शत्रुलाई ताप दिलाउने वीर! हृदयको तुच्छ दुर्बलतालाई हटाएर युद्धको निमित्त तयार होऊँ ।

अर्जुनको उत्तर र शरणमापर्नू -

अर्जुन उवाच-

कथं भीष्ममहं संख्ये द्रोणं च मधूसूदन! ।।
इषुभिः प्रति यात्स्यामि पूजार्हावरिसूदन! ।।४।।

**ती [३]पूजा गर्नमा योग्य भीष्म, द्रोण गुरुकन ।**
**युद्धमा बाणले हानूँ कसोरी? [४]मधुसूदन ! ।।**

अर्जुनले बिन्ति गरे - हे मधुसूदन ! मैले युद्धमा परमपूज्य भीष्म र द्रोणका उपर वाणको प्रहार कसरी गरूँ?

गुरूनहत्वा हि महानुभावान्
श्रेयोभोक्तुंभैक्ष्यमपीह लोके ।।

---

१. कौंतरपना । २. लडाईंमा कमर कसेको । ३. मान-मर्यादा । ४. मधुदैत्यलाई मार्ने हे कृष्ण ।

हत्वाऽर्थकामांस्तु गुरूनिहैव

भुञ्जीय भोगान् रूधिरप्रदिग्धान् ।।५।।

गुरू बचाईकन ती [१]महात्मा

भिक्षा बरू [२]श्रेय छ यो जगत्मा ।

[३]अर्थेच्छु उन्कै गरि नाश आज

भोगूँ कसोरी [४]रूधिराक्त राज ?।।

महानुभाव मान्य गुरूजनहरूको हत्या नगरी अर्थात् बचावट गरी यस लोकमा भीख मागी खाएर पेट पाल्नु परोस् , बरू त्यो बढिया हुन्छ, प्राणपालनका निमित्त लालची भएका उनै गुरूजनको बध गर्नाले यसै लोकमा म उनका रगतले मुछिएका भोगहरू कसरी भोग्न सकुँला ।।

नचैतद्विद्मः कतरन्नो गरीयो

यद्वा जयेम यदि वा नो जयेयुः ।।

यानेव हत्वा न जिजीविषाम

स्तऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः।।६।।

हामी जितौं या उनले जितेमा

जानिन्न के श्रेय[५] छ यो दुईमा,

जो मारिंदा बाँच्नु [६]अयोग्य ठान्छौं,

बन्धू उनै लड्न तयार देख्छौं।

हामीहरू जितौं, अथवा उनीहरूले हामीलाई जितून् , हाम्रा निमित्त जित्नु असल छ या हार्नु? यो पनि बुझिंदैन, जसलाई मार्नाले

---

१. ठूलो महात्मा । २. असल । ३. प्राणपालनको अपेक्षा गर्ने । ४. रगतले भिजेको । ५. बढिया । ६. बेठीक ।

हामी खूद आफै बाँच्न चाहन्नौ, तिनै धृतराष्ट्रका पुत्र (कौरवहरू) युद्धका निमित्त हाम्रा सामनेमा खडा भैरहेछन् ।।

कार्पण्यदोषोपहतस्वभावः
पृच्छामि त्वां धर्मसंमूढचेताः ।।
यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे
शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम् ।।७।।

[१]कार्पण्यले यो मन बिग्रनाले
म सोध्दछू [२]धर्म नसंझनाले।
जो श्रेय हो निश्चित त्यै खुलाई
आज्ञा हवस् भक्त म शिष्यलाई।।

मेरो प्रकृति यस कार्पण्य (करूणादि) दोषले बेकम्मा बनेको छ। मलाई आफ्नो धर्म अर्थात् कर्तव्यको मनमा मोह भएको छ, यस निमित्त म हजूरसंग सोध्दछु, म शरणागत शिष्य हूँ। मलाई जो निश्चितरूपले सबभन्दा कल्याण हुन्छ, उही कुराको उपदेश गर्नुहोस।।

नहि प्रपश्यामि ममाऽपनुद्याद्यच्छोकमुच्छोषणमिन्द्रियाणाम् ।।
अवाप्य भूमावसपत्नमृद्धं राज्यं सुराणामपि चाऽऽधिपत्यम् ।।८।।

यो भूमि, [३]निष्कण्टक, [४]उच्च राज्य,
मिलोस् तथा [५]स्वर्गत, [६]देवराज्य।
देखिन्न नै [७]इन्द्रिय-शोषकारी
सन्ताप हर्ने चिज नै [८]मुरारी ।।

---

१. हृदयको दौर्बल्यले । २. आफूले गर्नुपर्ने कर्तव्य । ३. शत्रु नभएको । ४. । ५. स्वर्गमा रहेको ६. देवताको राज्य (इन्द्रासन) । ७. मन आदि इन्द्रिय सुकाउने । ८. मुर दैत्यका शत्रु हे कृष्ण ।

किनभने, पृथ्वीको निष्कण्टक समृद्ध (खूब उन्नति भएको) राज्य र देवताहरूको अधिकार) (स्वर्गलोकको रजाँइ) मिले पनि मेरा यी सारा इन्द्रियलाई सुकाई बेकम्मा गराउने, शोकलाई हटाउन सक्ने कुनै त्यस्तो साधन (उपाय) देख्दिन ।।

## युद्धनगर्नामा दृढनिश्चय-

सञ्जय उवाच-

एवमुक्त्वा हृषीकेशं गुडाकेशः परन्तप।।
नयोत्स्य इति गोविन्दमुक्त्वा तूष्णीं बभूव ह।।९।।

**वीर अर्जुनले राजन्! यती श्रीकृष्णमा भनी।**
**'युद्ध गर्दिनँ हे कृष्ण !' भनी चुप भए उनी।।**

सञ्जयले बिन्ति चढाए- यसरी शत्रुलाई सन्ताप गराने अर्जुन, श्रीकृष्णसँग पूर्वोक्त कुरा भन्दै 'म युद्ध गर्दिन'- यति बोलेर चुप लागे।।

तमुवाच हृषीकेशः प्रहसन्निव भारत ।।
सेनयोरूभयोर्मध्ये विषीदन्तमिदं वचः ।।१०।।

**ती दुई सैन्यका बीच [1]शोकार्त [2]विजयीकन।**
**भन्नुभो कृष्णले केही हाँसे जस्तो करीकन।।**

त्यसपछि, हे भरतवंशी महाराज! दुबै सेनाका बीचमा बहुतै दिक्दार भएर बसेका अर्जुनलाई श्रीकृष्णबाट केही हाँसे जस्तो गरेर (मुसुक्कहाँसेर) आज्ञा गर्न लाग्नुभयो।।

---

१. शोकले व्याकुल । २. अर्जुनलाई ।

## आत्माको अशोच्यत्व-

श्रीभगवानुवाच-

अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्च भाषसे।।
गतासूनगतासूंश्च नानुऽशोचन्ति पण्डिताः।।११।।

[१]अशोच्यको शोक गर्छौ, छाँट्दछौ बात बुद्धिको ।
कुनै बाँचुन् ,मरून् विद्वान्[२] गर्दैनन् शोक यत्तिको ।।

जुनको शोक गर्नु उचित छैन उनैको शोक गर्दै तिमी यस्ता कुरा छाँटिरहेकाछौ कि जो सुन्दामा त ज्ञानका जस्ता ठानिन्छन् , वास्तविक ती ज्ञानका होइनन् , हेर, जो पण्डित (ज्ञानी) हरू छन् , उनीहरू बाँचेका या मरेका कुनैको निमित्तमा पनि शोक गर्दैनन् ।।

## हामी सबै सनातनी हूँ।

न त्वेवाऽहं जातु नाऽऽसं न त्वं नेमे जनाधिपाः।।
न चैव न भविष्यामः सर्वे वयमतः परम् ।।१२।।

तिमी[३], म, यी सबै राजा अघी पनि छँदै थियौं,
पछी पनि हुने नै छौं, किन यो मूढता लियौं?

पहिले पनि म, तिमी औ यी सबै राजाहरू छँदै थियौं, यसपछि पनि म, तिमी र यी सबै रहन्यैछौं, यो कुरा होइन कि भन्ने नठान।।

## पुनर्जन्म-

देहिनोऽस्मिन् यथा देहे कौमारं यौवनं जरा।।
तथा देहान्तरप्राप्तिर्धीरस्तत्र नमुह्यति ।।१३।।

---

१. शोक नगर्नुपर्ने चीजको २. ज्ञानी पण्डित ।
२. पाठान्तर - थिएनौं कि अघी पार्थ! म, यी राजा तिमि पनि !
हुँदैनौं कि सबैं हामी यसभन्दा पछि पनि ? ।।

[1]देहीले [2]देहको [3]बाल्य-जवानी-[4]बृद्धता-सरी।
[5]देहान्तर पनी लिन्छ, [6]धीर आत्तिन्नक्यै गरी ।।

यस देहमा जस्तै बालकपन, जवानी र बुढ्याँइँ आदि अवस्था प्राप्त हुन्छ, त्यस्तै देहधारी आत्माको एक शरीर छोडेर अर्को शरीरमा प्राप्त हुने पनि हुन्छ, जो धीर (विद्वान) पुरूष छ' त्यो यस्तोमा मोह गर्दैन, अर्थात् घबडाउँदैन ।।

अमर बन्नाको सामर्थ्य-

मात्रास्पर्शास्तु कौन्तेय! शीतोष्णसुखदुःखदाः।
आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत।।१४।।

[7]शीतोष्ण-सुखदुःखादि दिने [8]इन्द्रिय-सङ्गम।
आउनासाथ नासिन्छन्, नित्य छैनन् , सहू सब।।

हे कुन्तीपुत्र ? विषय (बाहिरी चीज) हरूका साथ इन्द्रियहरूको संयोग नै तातोचिसो सुखदुःख इत्यादि दिने, यस्तो छ, त्यो संयोग कहिले हुन्छ, कहिले नासिन्छ, अतएव अनित्य छ, हे भारत! शोक नगरेर तिमी त्यसलाई सहन गर।।

यं हि न व्यथयन्त्येते पुरूषं पुरूषर्षभ ।।
समदुःखसुखं धीरं सोऽमृत्वाय कल्पते ।।१५।।

[9]विषयेन्द्रिय-संयोग-जन्य, दुःखसुखादिले।
जो धीर कत्ति डग्दैन, मुक्ति पाउँछ तेसले ।।

---

१. शरीर धारण गर्ने जीवात्माले । २. शरीरको । ३. बालकपन । ४. बुढ्याँई। ५. अर्को देह। ६. फिक्री नभएको । ७. चीसोतातो सुख-दुःख इत्यादि । ८. इन्द्रियहरूको विषयकासाथ सम्बन्ध। ९. इन्द्रियहरूका विषयका साथ भएको संयोगबाट उत्पन्न हुने सुखदुःखरूपले ।

किनभने, हे पुरूषश्रेष्ट ! यो अनित्य विषयेन्द्रिय-संयोगले आफ्नो संयोग-वियोगाबाट जुन पुनषलाई दुःख गर्न सक्दैन, सुख र दुःखलाई समान संझने उही धीर पुरूष अमृतभावमा अर्थात् अमृतब्रह्मको स्थिति प्राप्त गरी लिनामा समर्थ हुन्छ ।।

## आत्माको अशोच्यत्वसामर्थ्य-

नासतो विद्यते भावो नाभावो विद्यते सतः।।
उभयोरपि दृष्टोऽन्तस्त्वनयोस्तत्त्वदर्शिभिः ।।१६।।

जो छैन त्यो हुँदै हुन्न, जो छ त्यो छ सधैं पनी ।
[1]'सत् - [2]असत' दुइको [3]तत्वदेख्दछन् ज्ञानवान् मुनि ।।

जो छैन त्यो कहिले हुँदैहुन्न, औ जो छ त्यो सबै कालमा छँदै छ, तत्वज्ञानी पुरूषहरूले 'सत' र 'असत्' दुबैको अन्त्य देखिएको छ, अर्थात् अन्त्य देखेर तिनका स्वरूपको निर्णय गरिएको छ।।

अविनाशि तु तद्विद्धि येन सर्वमिदं ततम ।।
विनाशमव्ययस्याऽस्य न कश्चित्कर्तुमर्हति ।।१७।।

ननासिने उही जान जस्ले यो परिपूर्ण छ।
यो नित्य[4]-तत्वको नाश गर्न लौ कुन सक्तछ?।।

संझना राख कि, यो जगत् जसले व्याप्त गरेको छ, त्यो मूल आत्मस्वरूप ब्रह्म अविनाशी छ, यस अविनाशी तत्वलाई नाश गर्न कोही समर्थ छैन।।

## नित्यआत्माका अनित्यदेह-

अन्तवन्त इमे देहा नित्यस्योक्ताः शरीरिणः ।।
अनाशिनोऽप्रमेयस्य तस्माद्युध्यस्व भारत ।।१८।।

---

१. कहिल्यै ननासिने । २. नासिने । ३. सार वस्तु । ४. कहिल्यै नास नहुने आत्माको ।

[१]अनाशी, [२]कल्पनातीत, [३]नित्यात्माका यिनी सबै ।
नासिने देह हुन् पार्थ ! तसर्थ लड धीर भै ।।

जो यो शरीरको स्वामी आत्मा छ, त्यो नित्य कहिल्यै ननासिने र अचिन्त्य (मनले पनि संझन नसकिने) छ, त्यसले लिइने यी शरीर नाशवान् अर्थात्- अनित्य छन् भनेर बताउँदछन् , यस कारण- हे भारत ! तिमि युद्ध नै गर अर्थात् - तिमीले बचाउँदैमा बाँच्ने र मार्दैमा मर्ने पनि हुँदैन।।

य एनं वेत्ति हन्तारं यश्चैनं मन्यते हतम् ।।
उभौ तौ न विजानीतो नाऽयं हन्ति न हन्यते ।।१९।।

[४]जोयोमार्छ भनी ठान्छ, जो यो मारिन्छ ठान्दछ।
दुबैको झूठ हो ज्ञान, यो न मारिन्छ मार्दछ।।

शरीरको स्वामी जीवात्मालाई नै जो मार्ने हो भन्ने संझन्छ, औ जो यसलाई मर्ने (मरेको) भन्ने संझन्छ, ती दुबैको ज्ञान सच्चा होइन, किनभने यो आत्मा न कसैलाई मार्दछ,न त अरूद्वारा आफू मारिन्छ।।

## पुराणपुरूष-

न जायते म्रियते वा कदाचि-
न्नाऽयं भूत्वा भविता वा न भूयः।।
अजो नित्यः शाश्वतोऽयं पुराणो
न हन्यते हन्यमाने शरीरे ।।२०।।

---

१.ननासिने । २. मनको गतिबाट पररहेको । ३. सधैं भईरहने आत्माका । ४.आत्मा ।

न जन्म यो लिन्छ, न नासिने हो,

न यो अघी भो, न पछी हुने हो।

[१]पुराण, आत्मा, [२]अज, नित्य नै हो,

यो देह मारी न त मारिने हो ।।

यो आत्मा न त कहिल्यै जन्मन्छ, न त कहिल्यै मर्दछ, न त त्यो एक पटक उत्पन्न भएर फेरि नहुने हुन्छ, यो आत्मा जन्मरहित, नित्य र पुराणपुरूष हो, शरीर मारियोस, तापनि त्यो कबै मारिदैन।।

वेदाऽविनाशिनं नित्यं य एनमजमव्ययम् ।।

कथं स पुरूषः पार्थ ! कं घातयति हन्तिकम् ।।२१।।

जस्ले आत्मा [३]अनाशी र [४]अजन्मा [५]नित्य जान्दछ।

कस्लाई कसरी? त्यस्ले मराउँदछ, मार्दछ?।।

जो पुरूष आत्मालाई अविनाशी, अजन्मा, नित्य र अव्यय भन्नै जान्दछ, त्यसले कसलाई कसरी मराउला र कसलाई कसरी मार्ला।।

आत्माको देहान्तर ग्रहण-

वासांसि जीर्णानि यथा विहाय

नवानि गृह्णाति नरोऽपराणि।।

तथा शरीराणि विहाय जीर्णा-

न्यन्यानि संयाति नवानि देही।।२२।।

लुगा पुराना जसरी त्यजेर

नयाँ लुगा मानिस लिन्छ फेर,

---

१. सबभन्दा पहिलेको । २. कहिल्यै न जन्मने । ३. कहिल्यै ननासिने । ४. नजन्मने । ५. तीनै कालमा एकैनास ।

त्यस्तै बुढ़ा देह हरू त्यजेर
यो [1]जीवले लिन्छ नयाँ शरीर।।

मानिसले जस्तै पुराना कपडा फेरेर नयाँ कपडा पहिरन्छ, त्यस्तै शरीरको स्वामी आत्माले काल, कर्मका वशले पुराना भएका शरीरलाई छोडेर(बदलेर) दोस्रो नयाँ शरीर धारण गर्दछ (लिन्छ) ।।

आत्माको अविनाशिता-

नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः।।
न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः।।२३।।

न [2]शस्त्र काट्छ यस्लाई, न आगोले जलाउँछ।
न गलाउँछ पानीले, न हावाले सुकाउँछ।।

यो आत्मालाई शस्त्रहरूले काट्न सक्दैनन्, आगोले जलाउन सक्दैन, पानीले भिजाउन वा गलाउन सक्दैन, औ हावाले सुकाउन पनि सक्दैन।।

अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।।
नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः ।।२४।।

कसैले छेद्य[3] वा [4]दाह्य क्लेद्य[5] वा [6]शोष्य होइन।
नित्य, [7]व्यापी, स्थिर[8], [9]स्थाणु यो आत्माछ [10]सनातन।।

यो (आत्मा) अच्छेद्य, अदाह्य, अक्लेद्य र अशोष्य छ; यो नित्य, सर्वव्यापी, स्थिर, अचल र सनातन छ।।

---

१. जीवात्माले । २. हतियार । ३. काटिने । ४. डढाइने । ५. गलाइने । ६. सुकाउन सकिने । ७. जहाँतहीं रहेको । ८. एकनास रहने । ९. मूल । १०. पहिलै देखि नै रहिरहेको ।

अव्यक्तोऽयमचिन्त्योऽयमविकार्योऽयमुच्यते।
तस्मादेवं विदित्वैनं नाऽनुशोचितुमर्हसि।।२५।।

**हेर यो अति-अव्यक्त[1]अविकारी, अचिन्त्य छ।**
**यस्तो जानेर उस्लाई शोक गर्नु अयोग्य छ।।**

यस आत्मालाई नै अव्यक्त अर्थात्- आँखा आदि इन्द्रियका विषयबाट पर रहेको, अचिन्त्य अर्थात् मनले पनि जान्न नसकिने, औ अविकारी अर्थात्- कुनै पनि विकारको उपाधिले रहित छ, यस्तो बताउँछन् , यस कारणले आत्मालाई यस्तो सँझेर तिमी उसका उपर शोक र मोह नगर।

## आत्माका अनित्यत्व पक्षको उत्तर-

अथ चैनं नित्यजातं नित्यं वा मन्यसे मृतम् ।।
तथापि त्वं महाबाहो ! नैनं शोचितुमर्हसि।।२६।।

**यदि यो नित्य[2] जन्मेको, मरेको भनिठान्दछौ।**
**तैपनी पार्थ! उस्लाई शोक गर्न अयोग्य छौ।।**

अथवा, ''तिमी यो आत्मा नित्य होइन, शरीरका साथसाथै सर्वदा जन्मन्छ र मर्दछ' भन्ने ठान्दछौ भने पनि हे महाबाहु ! त्यसको निमित्त तिमीले शोक गर्न ठीक छैन।।

जातस्य हि ध्रुवो मृत्युर्ध्रुवंजन्म मृतस्य च ।।
तस्मादपरिहार्येऽर्थे न त्वं शोचितुमर्हसि।।२७।।

**अवश्य जन्मने मर्छ, मर्नेको जन्म नित्य छ।**
**न भई नहुनेमाथी तिम्रो शोक [3]अयोग्य छ।।**

किन भने जो जन्मन्छ त्यसको मृत्यु निश्चित छ, औ जो मर्दछ

---

१. अगम्य जान्न नसकिने । २. सदासर्वदा । ३. बेठीकछ ।

उसको जन्म निश्चित छ, यस निमित्त यस्तो नभई न छोड्ने कुराका उपर, यो माथि कहिएको तिम्रो मतको अनुसार पनि तिमीले शोक गर्न उचित हुँदैन।।

## सांख्यमतले प्राणीको अशोच्यत्व-

अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि भारत ।।
अव्यक्तनिधनान्येव तत्र का परिदेवना ।।२८।।

देखिन्नन् [1]पहिले [2]प्राणी, देखिन्छन् तिनी [3]मध्यमा ।
[4]आखिर फेरि देखिन्नन् शोचनू कुन बातमा ।।

सब भूत (प्राणी) पहिले अव्यक्त (नजानिने), मध्यमा व्यक्त (जानिने) र मरण भएमा फेरि अव्यक्त (नजानिने) हुन्छन् ; यदि यस्तै सबैको स्थिति छ भने हे भारत! ती तीन कुरामध्येमा शोक कुन कुराको गर्नू ।।

## आश्चर्य-पूर्ण अमर आत्मा -

आश्चर्यवत्पश्यति कश्चिदेन-
माश्चर्यवद्वदति तथैव चाऽन्यः ।।
आश्चर्यवच्चैनमन्यः शृणोति
श्रुत्वाऽप्येनं वेद न चैव कश्चित् ।।२९।।

आश्चर्य भै [5]यस्कन हेर्छ कोही,
आश्चर्य कै साथ कहन्छ कोही

---

१. न जन्मेको अस्वस्थामा । २. मानिसहरू । ३. जन्मेर न मरुञ्जेल। ४. मरेपछि । ५. आत्मालाई ।

आश्चर्य मानीकन सुन्छ कोही,

सुने पनी यो [१]बुझदैन कोही!

मानो कोही ता आश्चर्य अर्थात् अद्भुत चीज नै संझेर आत्मातर्फ दृष्टि दिन्छ कोही आश्चर्यमा नै परी यसको वर्णन गर्दछ, अर्को कुनै मानो आश्चर्य नै भएर यसलाई सुन्दछ, परन्तु यस प्रकार देखेर सुनेर वर्णन गरेर पनि यिनीहरूमा कुनै पनि यस आत्मालाई वास्तविक जान्दैनन् ।।

देही नित्यमवध्योऽयं देहे सर्वस्य भारत ।।

तस्मात् सर्वाणिभूतानि न त्वं शोचितुमर्हसि ।।३०।।

[२]देही मारेर मारिन्न कसैका देहको पनी,

तस्मात् प्राणी [३]सबैमाथी गर्दछौ शोक के भनी? ।

हे भारत! सबका शरीरमा रहने यो आत्मा सर्वदा अबध्य अर्थात् कहिल्यै पनि बध (मार्न) नसकिने, यस्तो छ! त्यस कारण सबका अर्थात् कुनै पनि प्राणीका विषयमा शोक गर्नु तिमिलाई योग्य छैन ।।

क्षत्रियका धर्मबाट युद्ध नै श्रेय-

स्वधर्म चाऽवेक्ष्य न विकम्पितुमर्हसि ।।

धर्म्याद्धि युद्धाच्छ्रे योऽन्यत्क्षत्रियस्य न विद्यते ।। ३१।।

[४]स्वधर्ममपि पनि संझेर काँप्नू यो अयोग्य छ,

[५]स्वधर्मको युद्धभन्दा क्षत्रीको श्रेय कौन छ?

योबाहेक, स्वधर्मतिर हेरौं भने पनि यस वखत हिक्मत हार्नु (कातर हुनु) तिमीलाई उचित छैन । किनभने धर्मोचित युद्धबाहेक क्षत्रिलाई ज्यादै कल्याण गर्ने अरू केही कुरा छैदैछेन ।।

---

१. जान्दैन । २. आत्मा । ३. सबैका उपर । ४. र । ५. आफ्ना आफ्ना जातको धर्म ।

यदृच्छया चोपपन्नं स्वर्गद्वारमपावृतम् ।।
सुखिनः क्षत्रियाः पार्थ! लभन्ते युद्धमीदृशम् ।।३२ ।।

आई परेको, स्वर्गीय[१], खुलाद्वार समानको ।
युद्ध यस्तो भाग्यमानी क्षत्रीले पाउँछन् निको ।।

अनि हे पार्थ! यो युद्ध आपसेआप उप्रेको, स्वर्गको द्वार (ढोका) नै हो। यस्तो संग्रामता भाग्यवान् क्षत्रिहरूलाई मात्र प्राप्त हुन्छ ।।

अथ चेत्त्वमिमं धर्म्यं संग्रामं न करिष्यसि ।।
ततः स्वधर्मं कीर्तिञ्च हित्वा पापमवाप्स्यासि ।।३३।।

यस्तो यो धर्मको युद्ध तिमि छोडदछौ भने ।
धर्म किर्ति दुवै नासी हुन्छौ दुर्नाम[२] पाउने ।।

अतएव, यदि तिमिले आफ्नो धर्मको अनुकूल भएको युद्ध गरेनौ भने आफ्नो (कर्तव्य) र कीर्तिलाई समेत गुमाएर ठूलो पापको भागी (पापी भोग गर्ने) बन्नेछौ ।।

अकीर्तिं चाऽपि भूतानि कथयिष्यन्ति तेऽव्यायाम् ।।
संभावितस्य चाऽकीर्तिमरणादतिरिच्यते ।।३४ ।।

बदनामी सबै तिम्रो गाउनेछन् [३]अनेकशः ।
[४]मृत्युभन्दा ठुलो हुन्छ ठूलाका निति [५]दुर्यशः ।।

यत्ति मात्र होइन कि धेरै कालसम्म दुनियाँहरूमा तिम्रो बदनामीको चर्चा फैलिइरहनेछ, प्रतिष्ठित (इज्जतदार) पुरूषको बदनाम हुनु मर्नु भन्दा पनि बढी ठहर्छ ।।

---

१. स्वर्गमा भएको (रहेको) । २. बदनाम । ३. धेरै प्रकारका । ४. मर्नुभन्दा । ५. अपजस ।

भयाद्रणादुपरतं मंस्यन्ते त्वां महारथाः ।।
येषां च त्वं बहुमतो भूत्वा यास्यसि लाघवम् ।।३५।।

[१]महारथीले ठान्नेछन् भाग्यो यो डरले भनी ।
जो [२]वीर ठान्दथे तिन्ले भन्नेछन् भगुवा पनी ।।

सब महारथीहरु तिमिलाई डराएर युद्धबाट हट्यो भन्ने ठान्नेछन् औ मानिस अहिलेसम्म तिमिलाई वीरमा अग्रगण्य संझन्थे, उनैले अब तिम्रो योग्यता कम्ती संझनेछन् (ठान्नेछन्) ।।

अवाच्यवादाँश्च बहून्वदिष्यन्ति तवाऽहिताः ।।
निन्दन्तस्तव सामर्थ्यं ततो दुःखतरं नु किम् ।।३६।।

तिम्रो [३]सामर्थ्यको निन्दा गर्दै दुश्मनवर्गले ।
[४]अवाच्य धेरै [५]वक्नेछन् योभन्दा बढि दुःख के ? ।।

यस्तै तिम्रा सामर्थ्यको निन्दा गरेर, तिम्रा शत्रुहरूले यस्ता यस्ता अनेक कुरा तिम्रा विषयमा भन्नेछन् , जो भन्नै नसिकैन छन् यसभन्दा ठूलो दुःख गर्ने कुरा के होला?

हतो वाप्राप्स्यसिस्वर्गं जित्वा वा भोक्ष्यसे महीम् ।।
तस्मादुत्तिष्ठ कौन्तेय! युद्धाय कृतनिश्चयः ।। ३७।।

मरे स्वर्ग, जितेदेखीन् पृथ्वीको भोग [६]निर्भय ।
तसर्थ, उठ [७]कौन्तेय! युद्धमा गरि [८]निश्चय ।।

मारियौ भने स्वर्ग जान पाउनेछौ, जित्यौ भने पृथ्वीको राज्यभोग

---

१. कर्ण दुर्योधनहरूले । २. बहादुर । ३. शक्ति, तागतको । ४. भन्न नालायक कुरा । ५. बकबक गर्नेछन् । ६. शत्रुबाट डर नभएको । ७. हे कुन्तीका पुत्र अर्जुन! ८. पक्कापक्की ।

गर्न पाउनेछौ । यस कारण हे अर्जुन? युद्धकै निश्चय गरेर उठ (तैयार भएर अगाडि सर) ।

सुखदुःखे समे कृत्वा लाभालाभौ जयाजयौ ।।
ततो युद्धाय युज्यस्व नैवं पापमवाप्स्यसि ।। ३८।।

**जित-हार, नफा-हानि, सुख-दुःख बराबरी**
**संझेर गर संग्राम, पापी हुन्नौ यसो गरी ।।**

सुख-दुःख, नाफा नोक्सान र जित-हार जो होस् , यो सब एकै ठानेर अनि युद्ध गर्न लाग, यसो गर्नाले तिमिलाई केही पनि पाप लाग्नेछैन!

## योगको विवेचना -

एषातेऽभिहिता सांख्ये बुद्धिर्योगे त्विमां शृणु ।
बुध्या युक्तो यया पार्थ! कर्मबन्धं प्रहास्यसि ।। ३९।।

**बताएँ [१]सांख्यको बुद्धि, अब लौ [२]योगको सुन,**
**जो [३]योगबुद्धिले गर्दा छोडौला [४]कर्मबन्धन।।**

हे पार्थ! सांख्य अर्थात् संन्यासनिष्ठाको अनुसार यो बुद्धि (ज्ञान) बताएँ, अब जुन बुद्धिले युक्त भएमा कर्महरू नछोडे पनि तिमि कर्मबन्धन लाई छोडौला, यस्तो यो कर्मयोगको बुद्धि अर्थात कर्म गरे पनि निर्लिप्त रहने बुद्धि तिमिलाई बताउँछु,।।

नेहाऽभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते।
स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात् ।।४०।।

---

१. आत्मा नित्य छ, शरीर नासिंदा पनि त्यो नासिंदैन भन्ने सांख्यशास्त्र अनुसारको ज्ञान । २. कर्मयोग । ३. आत्मामा लीन भएको आसक्तिरहित बुद्धिले । ४. कर्मका सुखदुःखादि दिलाउने पाप-पुण्य जन्म मरण इत्यादि

[1]यस्मा [2]आरम्भ नासिन्न, न यस्मा दोष आउँछ।
थोरै होस् तर यो धर्म ठूलो भय हटाउँछ।।

यो योगबुद्धिमा एकपटकगरिएका कर्मको नाश हूँदैन (भुसिदैन), पछि पनि पाप लाग्नाको(विग्रनाको) संभावना नै रहँदैन, यो धर्म अलिकति मात्र गरियोस् तापनि यसले कर्तालाई ठूलाठूला भयबाट रक्षा गर्दछ(बचाउँदछ)।।

## व्यवसायात्मक बुद्धिको स्थिरता-

व्यवसायात्मिका बुद्धिरेकेह कुरुनन्दन!।
बहुशाखा ह्यनन्ताश्च बुद्धयोऽव्यवसायिनाम् ।।४१।।

[3]एकाग्रबुद्धि नै यस्मा [4]प्रधान बुझ अर्जुन ।
त्योविना वासना-हाँगा हाल्छे बुद्धि कडोरन ।।

हे कुरुन्दन! यस मार्गमा व्यवसायात्मक बुद्धि अर्थात्कार्य र अकार्यको निश्चय गर्ने एकाग्रबुद्धि नै प्रधान छ, किनभने, जसका बुद्धिको यस प्रकार एक निश्चय हूँदैन, तिनका बुद्धि वासनारुप अनेक हाँगा हालेर कडोरौं हुन्छन् ।।

## कर्मकाण्डीका अस्थिरबुद्धि-

यामिमां पुष्पितां वाचं प्रवदन्त्यविपश्चितः ।
वेदवादरताः पार्थ! नान्यदस्तीति वादिनः ।।४२।।

वेदका कर्मफलमा भुलेका मन्द [5]कर्मठे ।
भन्छन् स्वर्गादिबाहेक सुख अर्को कहाँ छ के ।।

---

१. बुद्धि योगमा । २. शुरु गरिएको कर्म । ३. एकैमा अटल भएकी बुद्धि । ४. मुख्य । ५. कर्मकाण्डमार्गमा चल्नेहरु ।

हे पार्थ? कर्मकाण्डात्मक वेदहरूका फलश्रुतियुक्त वाक्यहरूता मात्र वादविवाद गर्दै भुलेका र यस्तो कुरा भन्ने मूढछन् , जो कि योवाहेक दोस्रो छँदैछैन ।

कामात्मानः स्वर्गपरा जन्मकर्मफलप्रदाम् ।
क्रियाविशेषवहुलां भोगैश्वर्यगतिं प्रति ।।४३।।

[१]जन्म-कर्मादिको हेतु, [२]क्रिया-जंजाल-पूरित,
[३]ऐश्वर्यभोगमा [४]व्यग्र हुन् सवै ती [५]अपण्डित।

अनि ' अनेक प्रकारका यज्ञ-याग आदि कर्मवाट नै स्वर्गादि भोग र जन्मजन्मान्तरमा ऐश्वर्य पनि मिल्दछ', भन्दै स्वर्गकै पछि दौडने ती कर्मठेहरु काम्यबुद्धि भएका नै हुन ।

भोगैश्वर्यप्रसक्तानां तथाऽपहृतचेतसाम् ।।
व्यवसायात्मिका बुद्धिः समाधौ न विधीयते ।।४४।।

त्यस्ता ती [६]कामनाऽऽसक्त, स्वर्ग-भोगादि-लंपट।
अज्ञको बुद्धि हे पार्थ! हुन्न [७]एक-समाहित ।।

माथि बताइएका कुरातिर नै तिनको मन तानिएको हुनाले भोग र ऐश्वर्यमा नै लट्ठ रहने ती अविवेकी, मूढ (अज्ञानी)पुरुषहरूको बुद्धि समाधिमा एकाग्रताको साथ स्थिर रहन सक्दैन ।।

## स्थिर र योगस्थ बुद्धिले कर्म गर्नू-

त्रैगुण्यविषया वेदा निस्त्रैगुण्यो भवाऽर्जुन! ।।
निर्द्वन्द्वो नित्यसत्वस्थो निर्योगक्षेम आत्मवान् ।।४५।।

---

१. अनेक जन्मर कर्मका कारण । २. नानाकर्मका बखेडाले पूर्ण । ३. ऐश्वर्य र भोगकानिंति । ४. मस्त (लागिपर्ने) । ५. निबुद्धि । ६. फल इच्छा गरिरहने । ७. एकमा स्थिर ।

[१]गुण प्रपञ्ची छन् वेद गुणको गर लंघन ।
अनी [२]सात्विक, [३]निर्द्वन्द, [४]निःस्वार्थी, [५]आत्मवान् [६]बन ।।

हे अर्जुन! कर्मकाण्डात्मक वेद यस रीतिबाट त्रैगुण्य (सत्व-रज-तम गुणसंबन्धी) कुराहरूले भरिएका छन् , यस निमित्त तिमि त्रिगुणातीत नित्यसत्वस्थ र सुख-दुःख इत्यादि द्वन्द्वधर्महरूबाट अलिप्त भएर योगक्षेम आदि स्वार्थमा नपरी आत्मनिष्ठ होऊ ।।

यावानर्थ उदपाने सर्वतः सम्प्लुतोदके ।।
तावान्सर्वेषु वेदेषु ब्राह्मणस्य बिजानतः ।।४६।।

[७]सर्वत्र पानी पाएमा कूवाको जो [८]प्रयोजन ।
ज्ञानी [९]ब्रह्मज्ञको हुन्छ वेदमा [१०]त्यै प्रयोजन ।।

चारैतिरि (जतासुकै) बाट पानीको बाढी आएमा, कुवाको जत्ति प्रयोजन (काम) रहन्छ, अर्थत् कत्ति पनि काम लाग्ने हुँदैन, त्यत्तिकै प्रयोजन ज्ञानप्राप्त ब्राह्मण (ब्रह्मज्ञ) लाई सब कर्मकाण्डात्मक वेदमा पनि रहन्छ, अर्थात् , केवल काम्यकर्मरुपी वैदिक कर्मकाण्डको उसलाई केही आवश्यकता रहँदैन ।।

## कर्मयोग का चार सूत्र-

कर्मण्येवाऽधिकारस्ते मा फलेषु कदाचन ।।
मा कर्मफलहेतुर्भूर्मा ते संगोऽस्त्वकर्मणि ।।४७।।

---

१. सत्व-रज-तम गुणको विस्तार गर्ने । २. सत्वगुणको पराकाष्ठामा रहेको । ३. सुखदुःखादिका जोडबाट अलग रहेको । ४. जीविकानिमित्त मत्तलबी नभएको । ५. परमात्मामा हरबखत मन राख्ने । ६. होऊ । ७. जतातत्तै। ८. काम । ९. ब्रह्मज्ञानीको । १०. पाठान्तर-

भरी तलाउमा पानी लिनू जस्तो प्रयोजन ।
वेदका कर्ममा त्यस्लै ज्ञानीको छ प्रयोजन ।।

[1]कर्ममा [2]हक तिम्रो छ, [3]फलमा छैन अर्जुन!
नराख फलको आशा, न इच्छा कर्म छोडन ।।

कर्म गर्नलाई मात्र तिम्रो अधिकार छ, फल पाउनु वा नपाउनु कहिल्यै पनि तिम्रो अधिकार (कब्जा) मा छैन; यसनिमित्त मेरा कर्मको फलानो फल मिलोस यो हेतु मनमा राखेर काम गर्ने नबन; और कर्म नगर्नाको ( छोड्नाको) पनि तिमि आग्रह नगर ।।

योगस्थ कुरु कर्माणि सङ्गंत्यक्त्वा धनञ्जय ।
सिद्ध्यसिद्ध्योः समो भूत्वा समत्वंयोग उच्यते ।।४८।।

असिद्धि-सिद्धिमा तुल्य भई [4]संग त्यजीकन ।
गर कर्म, बनी [5]योगी, [6]संयत्ता योग हो गुन ।।

हे धनञ्जय? आशक्ति छोडेर, और कर्मको सिद्धि होस् या असिद्धि दुवैलाई समाने मानेर, योगस्थ अर्थात् योगमा रहेको भई कर्म गर,सिद्धि हुँदा या विफल हुँदामा रहने, समताको मनोवृत्तिलाई नै 'कर्मयोग' भन्दछन् ।।

दूरेण ह्यवरं कर्म बुद्धियोगाद्धनञ्जय! ।।
बुद्धौ शरणमन्विच्छ कृपणाः फलहेतवः ।।४९।।

यो बुद्धियोगका लेखा [7]अरू कर्म [8]कनिष्ठ छन् ।
लेऊ त्यो समताबुद्धि [9]फलेच्छु सब तुच्छ हुन् ।।

किनभने, हे अर्जुन! बुद्धिको साम्ययोग भन्दा बाह्य कर्म

---

१. काम गर्नामा । २. अधिकार । ३. कामबाट उत्पन्न हुने फलहरूमा । ४. आसक्ति । ५. परमेश्वरमा मन राखेको । ६. कार्य-सिद्धि वा असिद्धिमा समान ठान्नु । ७. फल इच्छा गरिने । ८. सानो । ९. फल चाहना गरी कर्म गर्नेहरू ।

गर्नुज्यादा नै कनिष्ठ (कान्छी नीचो) छ, यसैले त्यही साम्यबुद्धिका शरणमा पर, फलहेतुक अर्थात् पछिल्लो दर्जाका संझिन्छन् ।।

बुद्धियुक्तो जहातीह उभे सुकृतदुष्कृते ।।
तस्माद्योगाय युज्यस्व योगः कर्मसु कौशलम् ।।५०।।

[1]बुद्धियोगी यहीं छोडछ पाप पुण्य दुवै थरी ।
तस्मात् त्यै [2]योगमा लाग योगै हो [3]कर्म-चातुरी ।।

जो साम्यबुद्धिले युक्त होला, त्यो यस लोकमा पाप र पुण्य दुवैबाट अलिप्त रहन्छ, यस कारण त्यही योगको आश्रय गर, पापपुण्य दुवैबाट बचेर कर्म गर्नाको कुशलता (चतुर्याईं वा जुक्ति) लाई नै 'कर्मयोग' भन्दछन् ।।

## कर्मयोगबाट मोक्षप्राप्ति-

कर्मजं बुद्धियुक्ता, हि फलं त्यक्त्वा मनीषिणः ।।
जन्मबन्धविनिर्मुक्ताः पदं गच्छन्त्यनामयम् ।।५१।।

समता-बुद्धिका ज्ञानी कर्मका फल छोड्दछन् ।
हटाई जन्म बन्धादि [4]कैवल्यपद पुग्दछन् ।।

समत्वबुद्धिले युक्त, जो ज्ञानी पुरुष, कर्मका फल त्याग गर्दछन् ती जन्मका बन्धनबाट मुक्त भएर परमात्माको दुःखविरहित पद (मोक्षपद) मा पुग्दछन् ।।

यदा ते मोहकलिलं बुद्धिर्व्यतितरिष्यति ।
तदा गन्ताऽसि निर्वेदं श्रोतव्यस्य श्रुतस्य च ।।५२।।

---

१. समान-बुद्धि लिने । २. कर्मयोगमा । ३. कर्म गरी पापधर्मबाट बच्नको जुक्ति । ४. मुक्तिमा ।

मोहबाट जसै तिम्रो बुद्धिले पार पाउला ।
[1]सुनेका [2]सुनिनेमाथी [3]बिरक्ति तब आउला ।।

जब तिम्रो बुद्धि मोहको धमिलो पर्दाबाट पार होला; त्यसै वेला तिमि ती कुराहरुबाट विरक्त हुनेछौ; जो केही सुनिसकिएका र केही सुन्नलाई पनि बाँकी छन् ।।

श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्चला ।।
समाधावचला बुद्धिस्तदा योगमबाप्स्यसि ।।५३।।

जब त्यो [4]वेदविभ्रान्त बुद्धि तिम्रो [5]समाहित ।
होला [6]निश्चल त्यै बेला पाउला [7]योग यो [8]स्वतः ।।

नानाप्रकारका बेदवाक्यहरूले घबडाएको तिम्रो बुद्धि जब समाधिबुद्धिमा स्थिर र निश्चल होला त्यसै बखत यो साम्यबुद्धिरूप योग तिमीलाई प्राप्त हुनेछ ।।

## स्थिरप्रज्ञका लक्षण-

### अर्जुन उवाच-

स्थितप्रज्ञस्य का भाषा समाधिस्थस्य केशव! ।।
स्थितधीः किं प्रभाषेत किमासीत ब्रजेत किम् ।।५४।।

[9]स्थितप्रज्ञ [10]समाधिस्थ योगीका चिह्न हुन् कति?
कसरी बोल्छ वा बस्छ? के गरी चल्छ? त्यो [11]यति।

१. पहिले बताइयाका कुरा । २. पछि बताइने कुरा । ३. वैराग्य । ४. वेदका वाक्यले चक्कराएको । ५. एकाग्र । ६. नडग्मगाउने । ७. समतायोग । ८. आपसे आप । ९. स्थिर बुद्धि भएको । १०. समाधिमा रहेको । ११. इन्द्रियसंयमी पुरुष ।

अर्जुनले सोधे-हे केशव! मलाई भन्नुहोस् कि समाधिस्थ, स्थितप्रज्ञ कसलाई भन्नु? त्यस स्थितप्रज्ञको बोल्नु, बस्नु र हिड्नु कस्तो रहच्छ ।।

श्रीभगवानुवाच-

प्रजहाति यदा कामान्सर्वान्पार्थ! मनोगतान् ।।
आत्मन्येवाऽऽत्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते ।।५५।।

**आफैमा तृप्त भै आफै, मनका [१]कामनाकन ।**
**जब छोड्यो, अनी हुन्छ समाधिस्थ [२]निरञ्जन ।।**

भगवान्ले भन्नुभयो-हे अर्जुन! जहिले कोही मनुष्य आफ्ना मनका कामना अर्थात् वासनाहरूलाई छोड्दछ र आफसे आप सन्तुष्ट भएर रहन्छ, तब त्यसलाई 'स्थितप्रज्ञ' (स्थिरबुद्धि भएको) भनी बताउँछन् ।।

दुःखेष्वनुद्विग्नमनाः सुखेषु विगतस्पृहः ।।
वीतरागभयक्रोधः स्थितधीर्मुनिरुच्यते ।।५६।।

**दुःखमा दिक्क नहुने, नलाग्ने सुखमा पनि ।**
**[३]राग द्वेष भय-त्यागी योगी हो [४]स्थितधी [५]मुनि ।**

दुःखमा जसको मनलाई खेद हुँदैन, सुखमा जसको आसक्ति छैन औ जसका प्रेम, डररिस छुटेका छन् , त्यसलाई स्थितप्रज्ञमुनि भन्दछन् ।।

यः सर्वत्राऽनभिस्नेहस्तत्तत्प्राप्य शुभाशुभम् ।।
नाभिनन्दति न द्वेष्टि तस्य प्रज्ञा प्रतिष्ठिता ।।५७।।

---

१. विषयवासना । २. निर्लिप्त । ३. प्रेम, डाहा, डर छोड्ने । ४. स्थितप्रज्ञ । ५. इन्द्रियहरु रोक्ने ।

जस्को स्नेह कतै छैन, जो [१]शुभाऽशुभ पाउँदा ।
गदैन [२]स्तुति वा निन्दा, त्यै स्थितप्रज्ञ हो सदा ।।

सब कुरामा जसको मन निस्संग भएको छ, औ आइपरेका शुभ-अशुभमा जसलाई खुशी या खेद पनि छैन, तब त्यसको बुद्धि स्थिर भएको हुनाले त्यो 'स्थितप्रज्ञ' हो भन्नुपर्दछ ।।

यदा संहरते चाऽयं कूर्मोऽङ्गनीव सर्वशः ।।
इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठता ।।५८।।

[३]कूर्मले अंङ्गझैं जस्ले सारा विषयबाट यी ।
[४]दशेन्द्रिय खिची लिन्छ, समाधिस्थित हो उही ।।

जस्तै कछुआ आफ्ना हातपयर इत्यादि अवयवहरू चारैतिरबाट खुँच्याउँदछ, त्यस्तै जब कोही पुरुष इन्द्रियहरुका शब्द-स्पर्श आदि विषयहरूबाट आफ्ना इन्द्रियहरूलाई खिंच्दछ, तब त्यसलाई (स्थिरबुद्धि) भएको पुरुष भन्नुपदर्छ ।।

विषया विनिवर्तन्ते निराहारस्य देहिनः ।।
रसवर्जं रसोऽप्यस्यं परं दृष्टवा निवर्तते ।।५९।।

[५]आहार-हीन योगीका छुट्छन् विषय, [६]चाहता ।
छुट्दैन, तर त्यो [७]ब्रह्म-ज्ञानले हुन्छ बेपता ।।

निराहारी पुरुषका विषयहरू छुट्न जाऊन् लौ, तथापि तिनको (विषयहरुको) रस अर्थात् चाहना छुटेको हुँदैन, परन्तु परब्रह्मको अनुभव भएमा त्यो चाहना पनि छुट्दछ, अर्थातविषय र तिनको चाहसमेत दुवै छुट्तछन् ।।

---

१. बढिया र घटिया कुराहरु । २. तारीफ। ३. कछुवाले । ४. चक्षुश्रोताद्रि इन्द्रिय । ५. नखाएर इन्द्रिय रोके चाहने । ६. इच्छा । ७. परब्रह्मको ज्ञानले ।

यततो ह्यपि कौन्तेय! पुरुषस्य विपश्चितः ।।
इन्द्रियाणि प्रमाथीनि हरन्ति प्रसभं मनः ।।६०।।

कुनै [१]विद्वान् [२]जबर्जस्ती लागोस् ता पनि रोकन।
[३]अजोडी इन्द्रियहरु बलैले हर्दछन् मन।।

हे कौन्तेय! कारण यो छ कि केवल इन्द्रियहरूलाई दमन (दबाव) को निमित्त प्रयत्न गर्ने विद्वानका पनि मनलाई यी बलिया इन्द्रियहरूले जबर्जस्तीसाथ आफैतिर तान्दछन् ।।

तानि सर्वाणि संयम्य युक्त आसीत मत्परः ।।
वशे हि यस्येन्द्रियाणि तस्य प्रज्ञा प्रतिष्ठिता ।।६१।।

मेरै [४]आश्रय ली सारा सँभालीकन [५]इन्द्रिय ।
जसले बशमा गर्छ स्थितधी त्यै छ निश्चय ।।

यस कारण यी सब इन्द्रियहरूलाई संयमन गरेर, योगयुक्त र मत्परायण (ममा नै एकाश्रय) भएर रहनुपर्दछ । यस किसिमले जसका इन्द्रियहरु अधीनमा पर्न आए तब संझनुपर्छ कि त्यो स्थितप्रज्ञ भयो ।।

ध्यायतो विषयान्पुंसः सङ्गस्तेषूपजायते ।।
संगात्संजायते कामः कामात्क्रोधोऽभिजायते ।।६२।।

चिताउनाले [६]विषय तिनैमा [७]सङ्ग बढ्दछ ।
संगले [८]कामना हुन्छ, नपुगोस् [९]क्रोध चढ्दछ।।

विषयहरु चिताउने पुरुषको तिनै विषयहरुमा सङ्ग बढ्दै जान्छ

---

१. इन्द्रिय दमन गर्न इच्छा गर्ने पुरुष । २. विषयहरुको चाइना नहटी । ३. बहुतै बलिया । ४. शरण । ५. चक्षुआदि इन्द्रिय । ६. रूप-रस इत्यादि । ७. आसक्ति । ८. पाउनाको इच्छा । ९. रिस ।

अनि त्यस संगबाट यो वासना उत्पन्न हुन्छ कि, मलाई यो काम अर्थात् - त्यो विषय चाहिन्छ, अनि त्यस कामनाको तृप्तिमा विघ्न हुन आयो भने त्यस कामबाट नै क्रोधको उत्पत्ति हुन्छ ।।

क्रोधाद्भवति संमोहः समोहात्स्मृतिविभ्रमः ।।
स्मृतिभ्रशाद्बुद्धिनाशो बुद्धिनाशात्प्रणश्यति ।।६३।।

**क्रोधले हुन्छ [१]सम्मोह त्यो भई [२]स्मृतिनाश छ ।**
**त्यसले [३]बुद्धि नासिन्छ, त्यसैले [४]सर्वनाश छ ।।**

क्रोधबाट संमोह अर्थात् अविवेक पैदा हुन्छ, संमोहबाट स्मृतिविभ्रम (उल्टो ज्ञान) हुन्छ, स्मृतिभ्रंशबाट बुद्धि नासिन्छ, बुद्धिनाशबाट पुरुषको सर्वनाशै हुन्छ ।।

रागद्वेषवियुक्तैस्तु विषयानिन्द्रियैश्चरन् ।।
आत्मवश्यैर्विधेयात्मा प्रसादमधिगच्छति ।। ६४।।

**जस्ले [५]रागादिले [६]हीन, [७]वश्य इन्द्रियले सदा ।**
**भोग्ला विषय तेसैको हुँन्छ [८]अन्तःप्रसन्नता ।।**

परन्तु आफ्नो आत्मा अर्थात् अन्तःकरण जसका कब्जामा छ, त्यो पुरुष प्रेम र द्वेष हटिसकेका आफ्ना स्वाधीन इन्द्रियहरुले विषयहरुको उपभोग गरोस तापनि त्यसको मन निर्मल नै रहेको हुन्छ ।

प्रसादे सर्वदुःखानां हानिरस्योपजायते ।।
प्रसन्नचेतसो ह्यासु बुद्धिः पर्यवतिष्ठते ।।६५।।

---

१. अविवेक । २. समझमा भ्रांति । ३. ज्ञान ।४. केही बाँकी रहदैन । ५. प्रेम, रिस, इत्यादिले । ६. रहितभएका ७. अधिनमा रहेका । ८. भित्री शान्ति ।

[1]अन्तःप्रसाद जस्को छ दुःख त्यसको हराउँछ।
त्यस्ता [2]प्रसन्नचेताको बुद्धिले ठाउँ पाउँछ ।।

चित्त प्रसन्न रहनाले त्यसका सब दुःखहरुको नाश हुन्छ, किनभने, जसको चित्त प्रसन्न छ, त्यसको बुद्धि पनि तत्कालमाठीक ठाउँमा नै स्थिर (अटल रहेको) हुन्छ ।।

असंयमीको घोर दुःख-

नास्ति बुद्धिरयुक्तस्य न चायुक्तस्य भावना ।।
न चाऽभावयतः शान्तिरशान्तस्य कुतः सुखम् ।।६६।।

[3]अयुक्तको न ता [4]बुद्धि [5]भावना न अयुक्तको ।
न भावना बिना [6]शान्ति न ता सुख [7]अशान्तको ।।

जो पुरुष पूर्वोक्त रीतले युक्त अर्थात् योगयुक्त भएको छैन, त्यसमा स्थिरबुद्धि र भावना अर्थात् दृढबुद्धिरूप निष्ठापनि रहँदैन; जसलाई भावना छैन, त्यसलाई शान्ति हुन्न; औ जसलाई शान्ति छैन, त्यसलाई सुख (आनन्द) कहाँबाट मिल्न सक्ला ।।

इन्द्रियाणां हि चरतां यन्मनोऽनुविधीयते ।।
तदस्य हरति प्रज्ञां वायुर्नावमिवाऽम्भसि ।।६७।।

डुल्ने इन्द्रियका साथै मन जो पछि लाग्दछ ।
वायुले [8]नाउ झैं त्यस्ले त्यस्को बुद्धि उडाउँछ ।।

विषयहरूमा सञ्चार अर्थात् व्यवहार गर्ने इन्द्रियहरूका पछि

---

१. अन्तःकरणको निर्मलता । २. प्रसन्नचित्त भएका को । ३. योग नगर्नेको । ४. स्थिर बुद्धि । ५. दृढबुद्धिको स्थिति । ६. मनको आरामीपन। ७. शान्ति नभएकाको । ८. पानीमा रहेको डुङ्गा-जहाज झैं।

पछि जो मन गइरहेको छ, त्यसले नै पुरुषको बुद्धिलाई यसरी खिंचेर लैजान्छ, जस्तै कि, पानीमा डुंगालाई हावाले खिंच्तछ ।।

तस्माद्यास्य महाबाहो! निगृहीतानि सर्वशः ।
इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता ।। ६८।।

तस्माद्य इन्द्रिय संपूर्ण सबै विषयबाट यी ।
जस्का हटीसकेका छन् , स्थितधी मुनि हो उही ।।

यसै कारणले, हे महाबाहु, अर्जुन! जसका इन्द्रियहरू सबै इन्द्रियका विषयहरुबाट हटिसकेका छन् , त्यसैको बुद्धि स्थिर भयो भनी जान्नुपर्छ ।।

## मुनिको जागृति र निद्रा-

या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी ।।
यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः ।।६९।।

प्राणीको जो रात्रि हुन्छ, उस्मा [1]जाग्दछ [2]संयमी ।
जस्मा जाग्छन् सबै प्राणी, देख्छ त्यो रात्रि नै मुनि ।।

सब प्राणीहरुको जो रात छ, त्यसमा स्थितप्रज्ञ मुनि जागा रहन्छ, औ जसमा सारा प्राणी जागा रहन्छन् त्यसलाई ज्ञानवान् मुनि रात जस्तै देख्दछ । (अर्थात् - ज्ञानी पुरुषहरु काम्यकर्मलाई अंध्यारो रात्री जस्तो बेकामको ठहन्याउँछन् , त्यसमा अज्ञानीहरू दिनमा जस्तै गरी चलन-वर्तन गर्दछन् , अज्ञानीहरुले रात जस्तै बेकामको ठहराएको निष्काम कर्मयोगलाई ज्ञानीहरु दिन जस्तै उपयोगी ठहरयाई उपयोग गर्दछन् ।।

---

१. जागा रहन्छ । २. योगी ।

ब्राह्मीस्थिति-

आपूर्यमाणमचलप्रतिष्ठं
समुद्रमापः प्रविशन्ति यद्वत् ।
तद्वत्कामा यं प्रविशन्ति सर्वे
स शान्तिमाप्नोति न कामकामी ।।७०।।

जस्तै [१]भरी सागर-भित्र सारा ।
मिल्छन् सदा गैकन [२]तोय-धारा ।।
त्यस्तै जहाँ [३]काम [४]विलीन बन्छन् ।
त्यै शान्त भो, [५]अन्य अशान्त हुन्छन् ।।

चारौं तर्फबाट पानी उर्लंदै आउँदा पनि मर्यादा नछोडी न डग्मगाई रहने हुनाले समुद्रमा जसरी सब पानीहरू गएर मिल्दछन्, त्यस्तै जुन पुरुष सारा विषयहरू आइपर्दा शान्तिभंग हुन नदिई ती सबलाई आफूमा प्रवेश गराउन सक्छ, त्यसले नै सच्चा शान्ति पाउँछ, विषयहरूको इच्छा गर्नेलाई यो शान्ति कदापि मिल्न सक्दैन ।।

विहाय कामान्यः सर्वान्पुमांश्चरति निस्पृहः ।।
निर्ममो निरहङ्कारः स शान्तिमधिगच्छति ।।७१।।

जो छोडी [६]कामनाजाल, इच्छा र [७]ममता सब,
[८]निरहंकारभै [९]चल्छ, लिन्छ त्यो शान्ति-[१०]गौरव ।।

---

१. पूर्णसागर । २. पानीकाप्रवाह हरू । ३. विषयोपभोगका इच्छा। ४. भित्रै बिलाउने । ५. अरु (चाहना गर्ने हरु) ।६. कामनाको जंजाल । ७. यो मेरो भन्ने बुद्धि । ८. म यो काम गर्ने पुरुष हूँ भन्ने बुद्धि नलिने । ९. बर्ताव गर्दछ । १०. पूर्ण शान्ति ।

जो पुरुष सब आसक्ति छोडेर, निःपृह भई, व्यवहारमा बर्तन्छ (रहन्छ), त्यस्तै जसलाई ममत्व र अहङ्कार रत्तिभर छैन, त्यस्ले नै शान्ति पाउँछ।

एषा ब्राह्मी स्थितिः पार्थ ? नैनां प्राप्य विमुह्यति ।।
स्थित्वाऽस्यामन्तकालेऽपि ब्रह्मनिर्वाणमृच्छति ।।७२।।

**यो ब्राह्मी-स्थिति[1] हो पार्थ ! यस्ले [2]मोहहराउँछ ।**
**मर्दा पनि रही यस्मा ब्रह्मनिर्वाण[3] पाउँछ ।।**

हे पार्थ ! ब्राह्मी-स्थिति' यही हो, यसलाई पाए पछि कोही पनि मोहमा फस्दैन; और अन्त्यकालमा अर्थात् मर्ने वेलामा पनि यसै स्थितिमा रह्यो भने ब्रह्मनिर्वाण अर्थात् , परब्रह्ममा लीन हुन जाने मोक्ष त्यसले अवश्य नै पाउँदछ ।

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे श्रीकृष्णार्जुन संवादे 'सांख्ययोगो' नाम द्वितीयोऽध्यायः ।।२।।

इति नेपाली कोमलगीता 'सांख्ययोग'

द्वितीय अध्याय समाप्तः ।।२।।



१. परमेश्वरमा कर्म अर्पण गरेर कर्मबन्धन (पाप-पुण्य) बाट छुटकारा पाउनेस्थान । २. अज्ञान । ३. ब्रह्ममा लय ।

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### कर्मयोग ३

### कर्मगर्नू वा नगर्नू-

अर्जुन उवाच-

ज्यायसी चेत्कर्मणस्ते मता बुद्धिर्जनार्दन ! ।।
तत्किं कर्मणि घोरे मां नियोजयसि केशव ! ।।१।।

**हे कृष्ण ! त्यो [1]कर्मभन्दा [2]बुद्धि नै श्रेष्ठ हो भने ।**
**यो घोर कर्ममा फेरि मलाई किन लाउने ?**

अर्जुनले सोधे- हे जनार्दन ! यदि हजूरको मत 'कर्मभन्दा साम्य बुद्धि (ज्ञान) नै श्रेष्ठ छ, भन्ने हो मने, हे केशव ! मलाई युद्धको घोर कर्ममा (संग्रामकाण्डमा) किन लगाउनुहुन्छ ।।

व्यामिश्रेणेव वाक्येन बुद्धिं मोहयसीव मे ।।
तदेकं वद निश्चित्य येन श्रेयोऽहमाप्नुयाम् ।।२।।

**मेरो [3]विभ्रान्त भो बुद्धिं दोधारे बोलिले गरी ।**
**जस्मा श्रेय छ त्यै यौटा आज्ञा होस निश्चयै गरी ।।**

तपाईं कहिले ज्ञानको र कहिले कर्मको प्रशंसा गर्दै मेरो बुद्धिलाई मानो मोहमा फसाउन लाग्नुभएको हुनुहुन्छ, यस निमित्त निश्चय गरेर मलाई एकै कुरा बताउनुहोस् जसबाट मेरो ज्यादा नै कल्याण हुन्छ ।।

---

१. साम्यबुद्धि लिनु । २. कर्ममा लाग्नु । ३. चक्कराउने ।

## उन्नतिका दुईवाटा-

श्री भगवानुवाच-

लोकेऽस्मिन्द्विविधा निष्ठा पुरा प्रोक्ता मयाऽनघ ।
ज्ञानयोगेन सांख्यानां कर्मयोगेन योगिनाम् ।।३।।

**यो लोकमा दुई निष्ठा[1] बताएँ अधि भिन्न[2] नै ।**
**[3]सांख्यको त्यै ज्ञानयोग योगीको[4] कर्मयोग नै ।।**

भगवान्ले भन्नुभयो- हे निष्पाप, अर्जुन ! पहिले अर्थात् दोस्रा अध्यायामा मैले यो बताएँ कि यस लोकमा दुइ प्रकारका निष्ठाहरू छन् सांख्यमत लिनेहरूको 'ज्ञान' र योगीहरूको, कर्मयोग' ।।

न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरूषोऽश्नुते ।।
न च सन्न्यसनादेव सिद्धिं समधिगच्छति ।।४।।

**प्रारम्भ नगरी कर्म, कहाँ नैष्कर्म्य[5] पाउँछ ?**
**छोड्दैमा कर्म हे पार्थ! कसरी सिद्धि आउँछ ?**

परन्तु 'कर्महरूको शुरू न गर्नाले नै पुरूषलाई नैष्कर्म्य, प्राप्ति हुँदैन और कर्महरूको प्रारंभलाई त्याग गर्नाले मात्र पनि सिद्धि मिल्दैन ।।

### प्रकृतिधर्मवाट कर्मको श्रेष्ठता

न हि कश्चित्क्षणमपि जातु तिष्ठत्यकर्मकृत् ।।
कार्यते ह्यवशः कर्म सर्वः प्रकृतिजैर्गुणैः ।।५।।

**एक क्षण पनी कर्म नगरी कुन बस्दछ ?**
**गुणका[6] वशमा पर्दा जगतै सब गर्दछ ।।**

---

१. मार्ग (रास्ता) ।२. बेग्लाबेग्लै । ३. सांख्यतमतावलम्बीको । ४. निष्कामकर्मगर्नेको । ५. बन्धकत्व दोषले रहित कर्मसिद्धि। ६. प्रकृति बाट उत्पन्न हुने सत्व रज आदि गुणको ।

कुनै मनुष्य पनि केही न केही कर्म नगरी एक क्षणमात्र पनि रहन सक्दैन, ईच्छा नरहे पनि प्रकृतिका गुणहरूले आधीन भयेर उसद्वारा एउटा न एउटा कर्म गराएरै छोडदछन् ।

## मिथ्याचारी ढोंगी ।

कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा स्मरन् ।
इन्द्रियार्थान् विमूढात्मा मिथ्याचारः स उच्यते ।।६।।

**[1]कर्मेन्द्रियहरू बाँधी [2]इन्द्रियार्थहरूकन ।**
**मनले संझने मूढ हो [3]मिथ्याचार, अर्जुन ।।**

जो मूढ, हात खुट्टा आदि इन्द्रियलाई जबर्जस्तीले रोकेर मनले इन्द्रियहरूका रूप-रस आदि विषयलाई संझिरहन्छ, त्यसलाई मिथ्याचारी अर्थात् दांभिक भन्दछन् ।।

## अनाशक्ति कर्मयोग

यस्त्विन्द्रियाणि मनसा नियम्याऽऽरभतेऽर्जुन ! ।
कर्मेन्द्रियैः कर्मयोगमसक्तः स विशिष्यते ।।७।।

**मनले वश पारेका यी [4]कर्मेन्द्रियले सब ।**
**जो [5]कर्मयोग नै गर्छ, त्यही हो श्रेष्ठ [6]मानव ।।**

परन्तु हे अर्जुन त्यसको योग्यता विशेष अर्थात् श्रेष्ठ, जो मनले इन्द्रियहरूलाई रोकेर खालि कर्मेन्द्रियहरूको द्वारा आसक्तिरहित बुद्धिले 'कर्मयोग' को आरंभ गर्दछ ।।

**नियतं कुरू कर्म त्वं कर्म ज्यायो ह्यकर्मणः ।।**
**शरीरयात्राऽपि च ते न प्रसिदध्येदकर्मणः ।।८।।**

---

१. काम गर्ने इन्द्रियहरु । २. इन्द्रियका विषयहरु । ३. ढोंगी। ४. हात खुट्टा इत्यादिले । ५. आसक्ति छोडिएको काम। ६. मनुष्य ।

[1]अकर्मभन्दा श्रेष्ठ छ आफ्नो [2]कर्म सधैं गर ।
कर्मै छोड्यौ भने तिम्रो [3]देहनिर्वाह चल्छ र ?

आफ्नो धर्मको अनुसार नियत अर्थात् तोकिएको कर्मलाई तिमी गरिरहू, किनभने कर्म नगर्नुभन्दा कर्म गर्नु केही न केही असलै छ । यो बाहेक अर्को कुरा पनि संझ कि, यदि तिमी कर्म गर्दैनौ भने खाने कुरा पनि नपाइनाले तिम्रो शरीर-निर्वाहसंम पनि चल्न सक्तैन ।।

आशक्ति छोडी यज्ञचक्र चलाउनू-

यज्ञार्थात्कर्मणोऽन्यत्र लोकोऽयं कर्मबन्धनः ।।
तदर्थं कर्म कौन्तेय ! मुक्तसङ्ग समाचर ।।९।।

[4]यज्ञार्थ-कर्मबाहेक कर्मले गर्छ बन्धन।
गर यज्ञार्थमा कर्म [5]फलेच्छा नगरीकन ।।

यज्ञका निमित्त जो कर्म गरिन्छन् तीबाहेक अरू कर्महरूले यो लोक बाँधिएको छ, यज्ञार्थमा गरिने कर्महरू पनि तिमी आसक्ति या फलाशालाई छोडेर गर्दै जाऊ ।।

सहयज्ञाः प्रजाः सृष्ट्वा पुरोवाच प्रजापतिः ।।
अनेन प्रसविष्यध्वमेष वोऽस्त्विष्ट कामधुक् ।।१०।।

[6]प्रजालाई यज्ञ-साथै [7]रची ब्रह्माजिले भने-
"यै होस् तिम्रो [8]बृद्धि गर्ने, [9]कामधेनु सरी हुने ।

सृष्टिको आदिमा यज्ञका साथसाथै प्रजालाई उत्पन्न गरेर ब्रह्माले

---

१. काम न गर्नु । २. कर्तव्य कर्म । ३. खान पीन आदिले प्राण राख्ने काम । ४. फलको इच्छा नलिई गरिने यज्ञको कर्म । ५. फलको चाहना ।६. जगत्कामानिसलाई । ७. सृष्टि गरी । ८. उन्नति गर्ने । ९. इच्छामाफिक फल दिने ।

तिनीहरूसँग भने- 'यस यज्ञको द्वारा वृद्धि होला, यो यज्ञतिम्रो कामधेनु होस' अर्थात् - यो तिम्रा इच्छा-माफिक फल दिनेवाला होस् ।।

देवान्भावयताऽनेन ते देवा भावयन्तु वः ।।
परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथ ।।११।।

[१]यज्ञले देवता [२]मान उन्ले तिम्रो गरून् भलो ।
[३]अन्योन्य यो भलाईले श्रेय मिल्ला पछी ठुलो ।"

तिमीहरू यस यज्ञले देवताहरूलाई सन्तुष्ट गर्दै रहू, ती देवताहरू पनि तिमीहरूलाई सन्तुष्ट गर्दै रहून् , यसरी परस्परमा सन्तुष्ट गराउँदै दुवैथरीले कल्याण प्राप्त गर ।।

इष्टान्भोगान्हि वो देवा दास्यन्ते यज्ञभाविताः ।।
तैर्दत्तानप्रदायैभ्यो यो भुंक्ते स्तेन एव सः ।।१२।।

यज्ञले खुस भै देव देलान् [४]इच्छित भोग ति ।
उन्मा त्यो क्यै नटक्र्याई भोग्ने हो चोर दुर्मति ।।

किनभने यज्ञले सन्तुष्ट भएर देवताहरू तिम्रा इच्छाभाफिकका भोग तिमीहरूलाई दिनेछन् , उनीहरूले दिएको चीज उनैलाई केही समर्पण नगरेर जो खालि आफू मात्र उपभोग गर्दछ, त्यो साँच्चि नै चोर ठहर्दछ ।।

यज्ञशिष्टाशिनः सन्तो मुच्यन्ते सर्वकिल्विषैः ।।
भुञ्जते ते त्वधं पापा ये पचन्त्यात्मकारणात् ।।१३।।

यज्ञै गरी शेष[५] खाने योगीका पाप छुट्दछन् ।
आफ्नै-निति [६]पाक गर्ने पापी हुन, पाप भोगदछन् ।।

---

१. श्रोत-स्मार्त यज्ञकर्म. चातुर्वर्ण्यका आफ्नो अधिकारले प्राप्त सब कर्मरव्यवहारिकखानपीन लगायतकर्मरूप यज्ञले। २. रिझाऊ। ३.परस्पर। ४. इच्छा गरिएका । ५. बाँकी रहेको अमृतरूप अन्न । ६. पकाउने ।

यज्ञ गरेर शेष बचेको भागलाई ग्रहण गर्ने (खान लिने) सज्जनहरू सब पापहरूबाट मुक्त हुन्छन् , परन्तु यज्ञ नगरेर केवल आफ्नै निमित्त जो अन्न पकाउँछन् , ती पापीहरूले पाप नै खान्छन् ।।

अन्नाद्भवन्ति भूतानि पर्जन्यादन्नसंभवः ।।
यज्ञाद्भवति पर्जन्यो यज्ञः कर्मसमुद्भवः ।।१४।।

जन्मन्छन् अन्नले [1]प्राणी, अन्न उम्रन्छ [2]वृष्टिले ।
यज्ञले वृष्टि बर्सन्छ, यज्ञ चल्दछ [3]कर्मले ।।

यावत् प्राणीहरूको उत्पत्ति अन्नबाट हुन्छ अन्न मेघबाट उत्पन्न हुन्छ, मेघ (वर्षा) यज्ञ बाट उत्पन्न हुन्छ, और यज्ञको उत्पत्ति कर्मबाट हुन्छ ।।

कर्म ब्रह्मोद्भवं विद्धि ब्रह्माऽक्षरसमुद्भवम् ।।
तस्मात्सर्वगतं ब्रह्म नित्यं यज्ञे प्रतिष्ठितम् ।।१५।।

हुन्छन्[4] प्रकृतिले कर्म, त्यों ता ईश्वरबाट छ[5] ।
तस्मात् [6]सर्वगत यो ब्रह्म यज्ञमा नित्य बस्दछ ।।

कर्मको उत्पत्ति ब्रह्मबाट अर्थात् प्रकृतिबाट भएको छ, औ त्यो ब्रह्म अक्षरबाट (परब्रह्मबाट) भएको छ, यसैले यो संझ कि, सर्वगत अर्थात् सर्वव्यापी ब्रह्म ने यज्ञमा सदा सर्वदा रहेको छ ।

एवं प्रवर्तितं चक्रंनाऽनुवर्त्तयतीह यः ।।
अघायुरिन्द्रियारामो मोघं पार्थ! स जीवति ।।१६।।

[7]ब्रह्म-चालित यो [8]चक्र छोड़ी जो देह भर्दछ ।
[9]अघायु [10]इन्द्रिया-ऽऽरामो त्यो पापी व्यर्थ बाँच्दछ ।।

---

१. जीवधारी। २. पानी पर्नाले ३. काम गर्नाले । ४. त्रिगुणा प्रकृतिले । ५. हुन्छ (उत्पन्न हुन्छ)। ६. सर्वव्यापी । ७. ब्रह्माले चलाएको । ८. सिलसिला । ९. पापमय जिन्दगी भएको । १०. मोजमा लाग्ने ।

हे पार्थ! यस तरहले जगत् धारणका निमित्त ईश्वरले चलाएका कर्मयज्ञको चक्रलाई जसले यस जगत्मा पछि पनि चलाओइन, त्यसको आयु पापरुप छ, त्यस इन्द्रिय, लंपटको अर्थात् देवताहरूलाई नदिएर आफै मात्र खाने मानिसको जीवन (जिन्दगी) व्यर्थ छ ।

ज्ञानीलेपनी निष्कामले कर्म गर्नु-

यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः ।।
आत्मन्येव च सन्तुष्टतस्य कार्यं न विद्यते ।।१७।।

**आत्मस्वरूपमा प्रेमी, तृप्त आत्मस्वरूपमा ।**
**जो आत्मामा छ सन्तुष्ट, त्यस्को के बाँकि लोकमा[1] ।।**

परन्तु जुन मनुष्यलाई केवल आत्मामा नै प्रीति, आनन्द र सन्तोष पनि छ त्यसका निमित्त खुद आफ्नो केही पनि कर्तव्य-कर्म (गर्नुपर्ने काम) बाँकी रहेको हुँदैन ।

नैव तस्य कृतेनाऽर्थो नाऽकृतेनेह कश्चन ।।
न चाऽस्य सर्वभूतेषु कश्चिदर्थव्यपाश्रयः ।।१८।।

**त्यस्ले छोडोस् , गरोस् कर्म लोकमा के प्रयोजन ।**
**प्राणी सबैमा त्यस्को ता अड्का के छ र ? अर्जुन !**

यस लोकमा कुनै काम गर्नाले या नगर्नाले पनि उसलाई मतलब छैन; औ सब प्राणीहरूमा त्यसको केही पनि आफ्नो मतलब अड्के हुँदैन, अर्थात् - मोक्षका निमित्त उसले कसैको आश्रय लिनुपर्दैन ।।

तस्मादसक्तः सततं कार्यं कर्म-समाचर।।
असक्तो ह्याचरन्कर्म परमाप्नोति पूरूषः ।।१९।।

---

१. यस संसारमा ।

तस्मात् फलेच्छा नलिई [1]स्वकर्तव्य सधैं गर ।
फल छोडी, गरी कर्म मोक्ष पाउँछ लौ नर ।।

ज्ञानी पुरूष यसरी केहीको पनि अपेक्षा राख्दैन, यस कारण तिमी पनि फलको आसक्ति छोडेर आफ्नो कर्तव्य कर्म सधैं गर्ने गर; किनभने, आसक्ति छोडेर कर्म गर्ने मनुष्यलाई परमगति प्राप्त हुन्छ ( मोक्षमिल्दछ) ।।

## लोक संग्रहका निमित्त कर्मगर्नु-

कर्मणैव हि संसिद्धिमास्थिता जनकादय: ।।
लोकसंग्रहमेवाऽपि संपश्यन्कर्तुमर्हसि ।।२०।।

जनकादि सबै मुक्त भए कर्म गरीकन ।
लोकसंग्रह[2] देखेर कर्म नै गर अर्जुन ! ।।

जनक आदि महात्मा पुरूषहरूले पनि यस्तै प्रकार कर्म गरेर नै सिद्धि प्राप्त गरेका हुन्; यसो हुनाले लोकसंग्रहतिर दृष्टि दिएर पनि तिमीले कर्म गर्नु नै उचित छ ।।

यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः ।।
स यत्प्रमाणं कुरूते लोकस्तदनुवर्तके ।।२१।।

जो जस्तो [3]श्रेष्ठले गर्छ त्यै त्यै गर्छ अरू जन ।
श्रेष्ठले मानिएकोमा [4]लोक लाग्छ [5]सनातन ।।

श्रेष्ठ आत्मज्ञानी कर्मयोगी पुरूष लोकमा जो कुछ गर्दछ, त्यसको देखा सिखी गरी त्यही त्यही कर्म अरू साधारण मानिस पनि गर्दछ,

---

१. स्वजातले पाएको काम । २. सारा जगत्लाई सुमार्गमा चलाउनु । ३. जानिफकार ठूलो मानिसले । ४. दुनियाँ । ५. आस्तिक ।

श्रेष्ठले (ठूलोले) जेलाई प्रमाण मानेर स्वीकार गर्दछ, तमाम दुनियाँ उसैको पछि पछि लाग्ने हुन्छ (नक्कल गर्दछ) ।।

न मे पार्थाऽस्ति कर्तव्यं त्रिषु लोकेषु किञ्चन ।।
नाऽनवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि ।।२२।।

[१]गर्नुपर्ने कुनै मैले छैन कर्म [२]त्रिलोकमा।
[३]प्राप्तव्य नै छँदैछैन तैपनी छु म कर्ममा ।।

हे पार्थ ! विचार गर कि, त्रिभुवनमा नै न त मेरो केही कर्तव्य बाँकी रहेको छ, न त कुनै नपाइएको चीज पाउनालाई बाँकी छ, तैपनि म कर्म (लौकिक काम) गरिरहेकै छु ।।

यदि ह्यहं न बर्तेयं जातु कर्मण्यतन्द्रितः ।।
मम वर्त्माऽनुवर्तन्ते मनुष्याः पार्थ ! सर्वशः ।।२३।।

[४]सतर्क भै कर्म गर्न छोडें मैले भने सब ।
मेरै बाटो लिई कर्म छोड्नेछन् अरू मानव ।।

किनभने, यदि म आलस्य लिएर या चनाखो भएर कर्म नगरूँ ता हे पार्थ ! सारा लोक मेरै अनुगामी भएर कर्म गर्न छोड्नेछन् ।

उत्सीदेयुरिमे लोका न कुर्यां कर्म चेदहम् ।।
संकरस्य च कर्ता स्यामुपहन्यामिमाः प्रजाः ।।२४।।

नासिन्छ जगतै मैले कर्म छोडिदिएँ भने !
बन्छु [५]संकरकर्ता मै, मै [६]प्रजावर्ग नासने ।।

यसरी मैले कर्म गरिनँ भने यी सबै लोक नासिनाको संभावना

---

१. गर्नालाई योग्य । २. तीनै लोकमा । ३. पाउनुपर्ने चीज । ४. चनाखो । ५. वर्णसंकर बनाउने । ६. तमाम दुनियाँ ।

हुन्छ, यसो गरेमा म वर्णसंकर बनाउने र प्रजाहरूलाई नाश गर्ने (संहारी) पनि हुन जानेछु ।।

## अज्ञानीमा सदाचार-शिक्षा -

सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत ! ।।
कुर्याद्विद्वांस्तथाऽसक्तश्चिकीर्षुर्लोकसंग्रहम् ।।२५।।

**जस्तो [१]आसक्त अज्ञानी गर्छन् [२]कर्महरू सबै ।**
**[३]लोकका निंतिमा ज्ञानी गरोस् उस्तै [४]अशङ्क भै ।।**

हे अर्जुन ! लोकसंग्रह गर्नको इक्ष्छा राख्ने ज्ञानी पुरूषले आसक्ति छोडेर त्यस्तै चालचलन गर्नू पर्दछ, जस्तो कि, व्यावहारिक कर्ममा आसक्त भएका अज्ञानीहरूको चालचलन हुन्छ ।

न बुद्धिभेदं जनयेदज्ञानां कर्मसङ्गिनाम् ।।
जोषयेत्सर्वकर्माणि विद्वान्युक्तः समाचरन् ।।२६।।

**[५]बुद्धिभेद नदेखाओस् कर्मठेकन[६] क्यै गरी ।**
**गराउँदै-रहोस् योगी कर्म आफै पनी गरी ।।**

कर्ममा आसक्त भएका अज्ञानीहरूको बुद्धिमा ज्ञानी पुरूषले भेदभाव (भ्रम) उत्पन्न न गराओस् , आफू खुदयुक्त अर्थात् योगयुक्त भएर सब कर्म गरोस् र लोकहरूबाट पनि खुशीसाथ गराओस् ।।

प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः ।।
अहङ्कारविमूढात्मा कर्ताऽहमिति मन्यते ।।२७।।

---

१. फलको चाहना गर्ने। २. लोक-व्यवहारका कर्म । ३. लोकशिक्षाका लागि । ४. निष्कामना लिएर । ५. बुद्धिमा यो हो कि यो हो भन्ने दोधार । ६. लौकिक कर्ममा लागेका जनलाई ।

गुण जो छन् प्रकृतिका तिनैले कर्म चल्दछ ।
[1]अहन्ता, [2]मूढ, [3]जीवात्मा [4]'कर्ता म भनिठान्दछ ।।

प्रकृतिका सत्व-रज-तमोगुणहरूले सब प्रकारका कर्म भइरहन्छन्; परन्तु अहङ्कारले मोहित, अज्ञानी, पुरूष ठान्दछ कि, 'म कर्ता हुँ' ।।

तत्ववित्तु महाबाहो ! गुणकर्मविभागयोः ।।
गुणा गुणेषु वर्तन्त इति मत्वा न सज्जते ।।२८।।

जो 'मदेखी कर्म, गुण भिन्न छन्' भनि जान्दछ,
त्यो [5]'गुणै गुणमा खेल्छन्' भनी आसक्ति छोड्दछ ।।

परन्तु हे महाबाहु, अर्जुन! गुण र कर्म यी दुवै मबाट भिन्न (अलग) छन्' यस्तो तत्व जान्ने, ज्ञानी पुरुष गुणहरुको यो खेल तमाशा आपसमा भइरहेको छ, भन्नेठानी तिनमा आसक्त हुँदैन ।।

प्रकृतेर्गुणसंमूढाः सज्जन्ते गुणकर्मसु ।।
तानकृत्स्नविदो मन्दान्कृत्स्नविन्न विचालयेत ।।२९।।

[6]गुणसंमूढ अल्पज्ञ [7]फस्तछन् [8]गुणकर्ममा ।
[9]विज्ञले मूर्ख तिन्लाई [10]नचलाउनु लोकमा ।।

प्रकृतिका गुणले बहकिएका जनहरू गुण र कर्महरूमा नै आसक्त रहन्छन्; यिनी असर्वज्ञ र मन्द जनहरूलाई सर्वज्ञ पुरुषले कर्मत्यागबाट कुनै अनुचित मार्गमा लगाएर नडगाइदेओस् ।।

---

१. अहंकारलेढाकिएको । २. अज्ञानी । ३. जीवधारी । ४. गर्नेवाला ।५. सत्वादि गुण । ६. प्रकृति-गुणले बेहोस । ७. लागिपर्छन् । ८. फल चाहने कर्ममा । ९. सब कुरा जानने मानिसले । १०. विचलित नगराउनु ।

## ईश्वरार्पण-बुद्धिले कर्म गर्नु-

मयि सर्वाणि कर्माणि सन्न्यस्याऽध्यात्मचेतसा ।।
निराशीनिर्ममो भूत्वा युध्यस्व विगतज्वरः ।।३०।।

[१]अध्यात्म-बुद्धिले पार्थ! [२]अर्पी कर्म सबै ममा।
फलेच्छा [३]ममता छोडी बेफिक्री लड युद्धमा ।।

यस निमित्त हे अर्जुन! ममा नै अध्यात्मबुद्धिले सब कर्महरुलाई संन्यास अर्थात् अर्पण गरेर, औ फलको आशा र ममतालाई छोडेर, तिमि निश्चिन्त भई युद्ध नै गर ।।

## पूर्वोक्त कर्म गर्ने र न गर्नेको फल-

ये मेमतमिदं नित्यमनुतिष्ठन्ति मानवाः ।।
श्रद्धावन्तोऽनसूयन्तो मुच्यन्ते तेऽपि कर्मभिः ।।३१।।

[४]श्रद्धालु भै नली [५]ईर्ष्या, यो मेरो मत धारण ।
जो गर्छन् तिनका पार्थ! छुट्तछन् [६]कर्म-बन्धन ।।

जो श्रद्धावान पुरुष दोष नखोजेर मेरो यस मतको अनुसार चलनवर्तन गर्दछन् , ती पनि कर्मबाट अर्थात् कर्मबन्धनबाट मुक्त हुन्छन् ।।

ये त्वेतदभ्यसूयन्तो नाऽनुतिष्ठन्ति मे मतम् ।।
सर्वज्ञानविमूढांस्तान्विद्धि नष्टानचेतसः ।।३२।।

ईर्ष्याले मत यो मेरो गर्दैनन् जुन धारण ।
बेहोशी, मुर्ख, ती सारानासिन्छन् जान अर्जुन !

परन्तु, जो दोषदृष्टिले शंकाहरु गरेर, मेरो यस मतको अनुसार

---

१. परमात्मामा रहेको समताबुद्धिले । २. अर्पण गरी । ३. मेरो हो भन्ने बुद्धि । ४. श्रद्धा राख्ने । ५. द्वेष । ६. पुण्यपापरूपी बन्धन ।

चल्दैनन् , ती सब ज्ञानविमूढ अर्थात् पक्कै मूर्ख अविवेकीहरुलाई नासिए भनी ठान ।।

## प्रकृति-स्वभावनै जबर्जस्ति छ -

सदृशं चेष्टते स्वस्याः प्रकृतेर्ज्ञानवानपि ।।
प्रकृतिं यान्ति भूतानि निग्रहः किं करिष्यति ।।३३।।

**चल्छन् ज्ञानी पनी पार्थ! आफ्नै [1]प्रकृतिमाफिक,**
**[2]प्राणी-प्रकृतमै [3]प्राणी, के गर्ला [4]निग्रहादिक ?**

ज्ञानी पुरुष पनि आफ्नो प्रकृतिको अनुसारनै चल्दछ, सबै प्राणी आफ्ना प्रकृतिको अनुसारै चल्दछन् भने, त्यहाँ निग्रह अर्थात् जबर्ददस्तीबाट के हुन सक्ला? ।।

इन्द्रियस्येन्द्रियस्याऽर्थे रागद्वेषो व्यवस्थितौ ।।
तयोर्न वशमागच्छेत्तौ ह्यस्य परिपन्थिनौ ।।३४।।

**छन् [5]अर्थमा इन्द्रियका [6]रागद्वेष खडा भनी ।**
**नपरोस् वशमा तिन्को आत्माका शत्रु हुन् तिनी ।।**

चक्षुरादि इन्द्रिय र तिनका रूपादि विषयहरूमा प्रेम र द्वेष यी व्यवस्थित अर्थात् स्वभावैले रहने हुन्छन् , प्रेम र निन्दाको वशमा पर्न हुँदैन, किनभने, मानिसका ती मुख्य शत्रु हुन् ।।

## अरुभन्दा स्वधर्मनैश्रेष्ठछ -

श्रेयान् स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।
स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः ।।३५।।

---

१. स्वभाव अनुसार । २. प्राणीको सवभावमा । ३. सब जीवधारी । ४. जबर्दस्ती रोकावट । ५. विषयमा । ६. तारीफ र निन्दा ।

[1]राम्रो अरू धर्मभन्दा, दोषी श्रेष्ठ छ आफनू ।
मर्नू स्वधर्ममै श्रेय, [2]अर्कोमा डर राखनू ।।

पराईका धर्मको आचरण सहजै (सुखपूर्वक) गर्न सकिन्छ भने पनि, त्योभन्दा आफ्नो धर्म अर्थात् चातुर्वर्ण्य-विहीत कर्म नै ज्यादा श्रेयस्कर छ, चाहे त्यो विगुण अर्थात् दोषयुक्त पो किन नहोस् ? स्वधर्मको अनुसार चलदामा मरिन्छ भने पनि उसमा कल्याण छ; परन्तु परधर्म भयङ्कर हुन्छ ।।

## पापमा लगाउने कोहो -

### अर्जुन उवाच-

अथकेन प्रयुक्तोऽयं पापं चरित पूरुषः ।।
अनिच्छन्नपि वार्ष्णेय! बलादिव नियोजितः ।।३६।।

कृष्ण! कस्को [3]प्रेरणाले पाप गर्दछ पूरुष।
जबर्जस्ती लगाए झैं गरी भै भित्र [4]नाखुस? ।।

अर्जुनले सोधे - हे वृष्णिकुलमा उत्पन्न भएका श्रीकृष्ण! अब यो बताउनुहोस् कि मनुष्य आफ्नो इच्छा न रहेमा पनि कसका प्रेरणाले जबर्जस्ती धोक्याएर लगाइएको जस्तो भएर पाप कर्म गर्द छ? ।।

## पापवृत्तिको कारण-

काम एष क्रोध एष रजोगुणसमुद्भवः ।।
महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम् ।।३७।।

---

१. निर्दोष । २. विधर्ममा । ३. करलगाइले । ४. बिराजी ।

[१]काम यै हो, [२]क्रोध यै हो, यो [३]रजोगुणजन्य छ ।
यो [४]संहारी महापापी ज्ञानको शत्रु बन्दछ ।।

भगवान्‌ले बताउनुभयो यस विषयमा यो संझ कि, रजोगुणबाट उत्पन्न भएको, जत्ति पाए, पनि तृप्त नहुने, महापापी, यो काम वा क्रोध नै जबर्जस्त मुख्य शत्रु हो ।।

धूमेनाऽऽव्रियते वह्निर्यथाऽऽदर्शो मलेन च ।।
यथोल्बेनाऽऽवृतो गर्भस्तथा तेनेदमावृतम् ।।३८।।

ऐना मयलले आगो धुँवाले: गर्भ सालले ।
ढाकिन्छ जसरी, त्यस्तै यो ढाकेको छ तेसले ।।

जसरी धूवाले आगो, धूलोले ऐना सालले गर्भ ढाकिएर रहन्छ, त्यस्तै त्यसले (कामले) यो (ज्ञान) ढाकिएको छ ।।

आवृतं ज्ञानमेतेन ज्ञानिनो नित्यवैरिणा ।।
कामरूपेण कौन्तेय! दुष्पूरेणाऽनलेन च ।।३९।।

ज्ञानीको [५]सर्वदा वैरी, अग्निरुप, [६]सुदुभर ।
कामीले ज्ञानको रूप छोपेको छ सबैतिर ।।

हे कुन्तीपुत्र अर्जुन ! ज्ञानीको यो कामरूपी नित्य-बैरी कहिल्यै पनि तृप्त नहुने आगो नै हो । यसले साराको ज्ञानलाई छोपिराखेको छ ।।

इन्द्रियाणि मनो बुद्धिरस्याऽधिष्ठानमुच्यते ।।
एतैर्बिमोहयत्येष ज्ञानमावृत्य देहिनाम् ।।४०।।

---

१. आसक्ति । २. रिस । ३. रजोगुणबाट उत्पन्न । ४. स्वाहा पारादिने । ५. सबै कालमा । ६. कहिल्यै नअघाउने ।

कामका घर हुन् पार्थ ! मन, बुद्धि र इन्द्रिय ।
यिनैले ज्ञान छोपी यो मोह गर्दछ निश्चय ।।

इन्द्रिय, मन र बुद्धि-यी तीनलाई यसको अधिष्ठान अर्थात् घर हो भनेर बताउँ छन् । यिनैको आश्रयले ज्ञानलाई ढाकेर त्यसले मनुष्यलाई मोहमा फसाउँछ ।।

इन्द्रियहरू रोकी कामनालाई मार्नू -

तस्मात्त्वमिन्द्रियाण्यादौ नियम्य भरतर्षभ ! ।।
पाप्मानं प्रजहि ह्येनं ज्ञानविज्ञाननाशनम् ।।४१।।

तसर्थ पहिले पार्थ ? रोकी [1]सकल इन्द्रिय ।
ज्ञान-विज्ञानको वैरी, यो पापीको गर [2]क्षय ।।

हे भरतकुलमा श्रेष्ठ, अर्जुन ! यस कारण पहिले इन्द्रियहरूलाई संयमन (रोकावट गरेर, ज्ञान(अध्यात्मज्ञान) र विज्ञान (परमात्मविषयक विशेष ज्ञान) लाई नाश गर्ने यस काम, पापीलाई ''प्रजहि'' मार अथवा 'प्रजहिहि'' त्याग गर ।।

इन्द्रियका श्रेष्ठताको क्रम-

इन्द्रियाणि पराण्याहुरिन्द्रियेभ्यः परं मनः ।।
मनसस्तु परा बुद्धिर्यो बुद्धेः परतस्तु सः ।।४२।।

पर इन्द्रिय छन् भन्छन् तीभन्दा मन हो पर ।
त्योभन्दा पर हो बुद्धि, त्योभन्दा [3]ब्रह्म झन् पर ।।

---

१. सारा । २. नाश । ३. यहाँ श्रीशंकराचार्य आदि सब आचार्यको यही मत छ, एक रामानुजाचार्य मात्र प्रकरणले 'सः' को 'काम' अर्थ गर्दछन् ।

भन्दछन् कि स्थूल बाह्य-पदार्थहरूको ठेगानाबाट ती पदार्थलाई जान्ने इन्द्रियहरू पर (टाढा) छन् इन्द्रियहरूभन्दा पर मन छ, मनभन्दा पनि पर निश्चयात्मक बुद्धि छ,और जो बुद्धिभन्दा पनि पर छ, त्यो आत्मा (ब्रह्म) हो ।।

## आत्मज्ञान द्वारा इन्द्रियको रोकावट -

एवं बुद्धेः परं बुद्ध्वा संस्तभ्याऽऽत्मानमात्मना ।।
जहि शत्रुं महाबाहो ! कामरूपं दुरासदम् ।।४३।।

**बुद्धिभन्दा परै ब्रह्म जानी, रोकी स्वयं मन ।**
**[1]कामरूपी, [2]दुरासाध्य, बैरीको गर [3]छेदन ।।**

हे महाबाहो, अर्जुन ! यस प्रकारसँग जो बुद्धिभन्दा पनि पर छ, त्यस ब्रह्मलाई पहिचानेर, आफूले अन्त:करणलाई रोकी (स्थिर गरी) बलियो, हटाइ न सक्नु कामरूपी शत्रुलाई तिमि नाश गर । (१६२)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे कर्मयोगोनाम तृतीयोऽध्याय: ।

इति नेपालीभाषामा कोमलगीता 'कर्मयोग' तृतीय अध्याय: समाप्त ।



---

१. आसक्तरूपी । २. हटाउन मुश्किल । ३. काट्नु ।

ॐ

# श्रीमद्‌भगवद्‌गीता

## कोमलगीता

### ज्ञानकर्मसंन्यास-योग ४

### कर्मयोगको परंपरा-

श्रीभगवानुवाच-

इमं विवस्वते योगं प्रोक्तवानहमव्ययम् ।।
विवस्वान्मनवे प्राह मनुरिक्ष्वाकवेऽब्रवीत् ।।१।।

**[1]अघि [2]अव्यय यो [3]योग मैले श्रीसूर्यमा कहें।**
**सूर्यले [4]मनुमा त्यस्तै, [5]उन्‌ले [6]इक्ष्वाकुमा कहे ।।**

भगवान्‌ले भन्नु भयो-त्रिकालमा नै अवाधित र नित्य यो कर्मयोगमार्ग मैले सृष्टि को आदिमा सूर्यलाई बताएको थिएँ, उनले आफ्ना छोरा मनुलाई र मनुले पनि आफ्ना छोरा राजा इक्ष्वाकुलाई यस योगको उपदेश (शिक्षा) गरेका थिए ।।

एवं परंपराप्राप्तमिमं राजर्षयो विदुः ।।
स कालेनेह महता योगो नष्टः परन्तप ! ।।२।।

**परंपराले यो योग, जाने [7]राजर्षिले अनि ।**
**त्यो योग अहिले धेरै कालले नासियो पनि ।।**

---

१.सृष्टिको आरंभमा । २.कहिल्यैननासिने । ३.कर्मयोग । ४.आदि राजमनुमा । ५.मनुले । ६.रामचन्द्रका पूर्व पुरूखामा । ७.निमि जनक आदि राजर्षिले ।

हे परन्तप ! यस्तै परंपराले प्राप्त भएको यो कर्मयोगलाई निमि आदि राजर्षिले पनि जानेका थिए; परन्तु धेरै काल भएकोले यस लोकमा त्यही योग नष्ट भयो अर्थात् लुप्तप्राय: भइसक्यो ।।

स एवाऽयं मया तेऽद्य योग: प्रोक्त: पुरातन: ।।
भक्तोऽसि में सखा चेति रहस्यं ह्येतदुत्तमम् ।।३।।

**तिमी भक्त [१]सखा जान्नी उही योग [२]पुरातन ।**
**बताएँ अहिले मैले, यो [३]रहस्य छ उत्तम ।।**

सब रहस्यमा उत्तम रहस्य संझेर, उही पुरानो योग अर्थात् कर्मयोग-को मार्ग यस बखत तिम्रो अगाडि वर्णन गरेको छु. तिमी मेरा भक्त र सँगी हुनाले यस्तो गोप्य कुरा तिमीलाई बताएको हुँ ।।

## ईश्वरको आफ्नै मायाले जन्म-

अर्जुन उवाच-

अपरं भवतो जन्म परं जन्म विवस्वत: ।।
कथमेतद्विजानीयां त्वमादौ प्रोक्तवानीति ।।४।।

**[४]वरै हजूरको जन्म सूर्यको जन्म त्यो [५]पर ।**
**भन्नुभो पहिले भन्ने जानूँ कसरि आखिर ? ।।**

अर्जुनले सोधे-हजूरको जन्म हाल यहाँ भएको छ, और सूर्यको जन्म यसभन्दा धेरै पहिले भइसकेको छ, अब यस्तो दशामा तपाईंले यो योग पहिले सूर्यलाई बताउनुभयो भन्ने कुरा म कसरी जानूँ (पत्याऊँ) ? ।।

---

१. सँगी दोस्त । २.पुरानो । ३.सिसिमिती कसैले नजानिने । ४.हालै द्वापरयुगमा । ५.अघि कहिले हो, कहिले हो ।

श्रीभगवानुवाच-

बहूनि मे व्यतीतानि जन्मानि तव चाऽर्जुन ! ।।
तान्यहं वेद सर्वाणि न त्वं वेत्थ परन्तप ! ।।५।।

मेरा तिम्रा जन्म धेरै, बितेका छन् [१]परन्तप ?
जानेको छु सबै मैले, जान्दैनौ तिमीले सब ।।

भगवान्‌ले भन्नुभयो-हे परन्तप, अर्जुन ! मेरा र तिम्रा अनेक जन्म भइसकेका छन् । म ती सब जान्दछु, औ तिमी ती जन्म जान्दैनौ ।यत्ति तिम्रो र मेरो फरक छ ।।

अजोऽपि सन्नव्ययात्मा भूतानामीश्वरोऽपि सन् ।।
प्रकृतिं स्वामधिष्ठाय संभवाम्यात्ममायया ।।६।।

[२]अनाशी छु, [३]अजन्मा छु, [४]सर्वेश्वर पनी म छु,
रही आफ्नी [५]प्रकृतिमा [६]मायाले जन्म धर्दछु ।।

म सब प्राणीहरूको स्वामी र जन्म-रहित छु, यद्यपि मेरो आत्मस्वरूप मा कहिल्यै पनि व्यय अर्थात् विकार हुँदैन, तथापि आफ्नै प्रकृतिमा अधिष्ठित भएर म आफ्नै मायाले जन्म लिंदैगर्दछु ।।

यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ! ।।
अभ्युत्थानमधर्मस्य तदाऽऽत्मानं सृजाम्यहम् ।।७।।

जहिले धर्मको [७]ग्लानि, पापको [८]वृद्धि देखदछु ।
त्यसै वखतमा पार्थ ! [९]अवतार म गर्दछु ।।

---

१. शत्रुलाई ताप दिलाउनेवीर । २. कहिल्यै नमासिने । ३. कहिल्यै नजन्मने । ४. सबको स्वामी । ५. स्वभावमा । ६. इच्छा कल्पनाले । ७. घटती । ८. बढ्ती । ९. यसै जन्म ।

हे भारत ! जहिले-जहिले धर्मको ग्लानि हुन्छ औ अधर्मको प्रबलता फैलिन्छ, त्यही त्यही बखतमा म खुद आफैले जन्म अर्थात् अवतार लिने गर्दछु ।

परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।।
धर्मसंस्थापनार्थाय संभवामि युगे युगे ।।८।।

हरेक [1]युगमा साधु-[2]रक्षा, दुष्ट-[3]विनाशन ।
धर्मको [4]स्थापना गर्न, हुन्छु [5]उत्पन्न अर्जुन ? ।।

साधूहरूको रक्षाका निमित्त, दुष्टहरूलाई नाश गर्नाका निमित्त र युगयुगमा अर्थात्हरेक युगमा धर्मस्थापन गर्नाको निमित्त पनि म जन्म (अवतार) लिनेगर्छु ।।

## तत्व जान्नाले ईश्वरप्राप्ति-

जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।।
त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ।।९।।

[6]दिव्य मेरो जन्म कर्म, [7]तत्त्वले जुन जान्दछ ।
मरेपछि जन्मदैन, मैमा त्यो मिल्न आउँछ ।।

हे अर्जुन ! यस प्रकारका मेरा दिव्य जन्म र दिव्य कर्मको तत्त्वलाई जो जान्दछ, त्यो पुरुष शरीर त्यागेपछि फेरि जन्म नलिई, मसित नै आएर मिल्दछ ।।

वीतरागभयक्रोधा मन्मया मामुपाश्रिताः ।।
बहवो ज्ञानतपसा पूता मद्भावमागताः ।।१०।।

---

१. सत्य-त्रेता-द्वापर-कलि-यी चार युगमा । २. सज्जनहरूको रक्षा । ३. दुष्टहरूको नाश । ४. यथावत । ५. प्रादुर्भाव । ६. अलौकिक । ७. ठीक तवरले ।

**छोडी [१]राग-भय-क्रोध, मैमा [२]आश्रित, [३]मन्मय ।**
**धेरै, ज्ञान-तपः-[४]शुद्ध भएका छन् ममा [५]लय ।।**

प्रीति, भय र क्रोधबाट छुटकारा पाएका, मत्परायण र मेरै आश्रयमा आएका, अनेक यस्तै ज्ञानरूप तपस्याले शुद्ध भएर मेरै स्वरूपमा आई मिलिसकेका छन् ।।

## अरू रीतले देवताको उपासना-

ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् ।।
मम वर्त्माऽनुवर्तन्ते मनुष्याः पार्थ ! सर्वशः ।।११।।

**जो जस्तो [६]भाव ली आऊन् तिन्मा त्यस्तै म बन्दछु ।**
**सबै मानिसले पार्थ ! [७]अनुगम्य [८]सदा म छु ।।**

हे पार्थ ! जुन पुरूषहरू मलाई जस्तो प्रकारले भज्छन् , तिनलाई म उस्तै प्रकारका फल दिन्छु । त्यसो हुनाले जतानतैबाट पनि मनुष्य मेरै मार्गको पछि पछि आइपुग्दछ ।।

काङ्क्षन्तः कर्मणां सिद्धिं यजन्त इह देवताः ।।
क्षिप्रं हि मानुषे लोके सिद्धिर्भवति कर्मजा ।।१२।।

**कर्मको सिद्धिका निति गर्दछन् देव-[९]पूजन् ।**
**मिल्छ यो लोकमा चाँडै त्यो कर्मफल अर्जुन ।।**

कर्मजन्यफलका चाहनेहरूको कर्म होइन कि केवल कर्मफलको

---

१. प्रेम-डर रिस । २. आश्रय गर्ने । ३. मलाईक अरू नचिताउने । ४. ज्ञान र तपस्याले पवित्र । ५. लीन (मिलेका) । ६. भक्ति-अभिप्राय । ७. अनुसरण गरिने । ८. सधैं । ९. देवताको पूजा ।

इच्छा गर्नेहरू कर्मको फल चाहेर देवताहरूको पूजा गर्दछन् । यो ठीक छ, किनभने मनुष्यलोकमा कर्मको फल बहुतै चाँडो पाइन्छ ॥

## तत्वज्ञानाले कर्मका बन्धनको नाश-

चातुर्वर्ण्यं मया सृष्टं गुणकर्मविभागशः ।
तस्य कर्तारमपि मां विद्ध्यकर्तारमव्ययम् ॥१३॥

**चार वर्ण रचें मैले [1]गुण-कर्म-विभागले ।**
**[2]कर्ता छु तपनी त्यसको [3]अकर्ता छु म [4]तत्त्वले ॥**

मैले गुण र कर्मको विभाग गरेर ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र-यी चार वर्ण रची व्यवस्था गरेको छु । यो तिमीले याद राख कि, त्यसको कर्ता पनि मै हुँ, औ अकर्ता अर्थात् त्यसलाई नबनाउने अव्यय पनि मै हुँ ॥

न मां कर्माणि लिम्पन्ति न मे कर्मफले स्पृहा ।
इति मां योऽभिजानाति कर्मभिर्न स बध्यते ॥१४॥

**न कर्मफल चाहन्छु न मलाई कर्म [5]लाग्दछन् ।**
**जान्दा मलाई जो यस्तो त्यसका [6]कर्मादि छुट्दछन् ॥**

मलाई कर्मको लेप अर्थात् बन्धन हुँदैन, किनभने, कर्मका फलमा मेरो इच्छा छैन । जो मलाई यस प्रकारको जान्दछ, त्यसलाई कर्मको बन्धन(जन्म-मरणादि) हुँदैन ॥

एवं ज्ञात्वा कृतं कर्म पूर्वैरपि मुमुक्षुभिः ।
कुरु कर्मैव तस्मात्त्वं पूर्वैः पूर्वतरं कृतम् ॥१५॥

---

१. गुण र कर्म अलग गरेर । २. सृष्टिकर्ता । ३. बनाउने भएर पनि वास्तविक नहुने । ४. वास्तविक । ५. लिप्त हुन्छन् । ६. कर्मबन्धनादिक

यस्तै संझी गरे कर्म पहिलेका [१]मुमुक्षुले ।
तसर्थ गर त्यै कर्म गरे जो [२]धरपूर्वले ।।

यो कुरा जानेर पहिलेका मुमुक्षु अर्थात् मुक्ति चाहना गर्नेहरूले पनि कर्म गरेका थिए । यस निमित्त, पूर्व पुरूषहरूले गरिएका अतिप्राचीन कर्म नै तिमी पनि गर ।।

## कर्म अकर्म र विकर्मको भेद

किं कर्म किमकर्मेति कवयोऽप्यत्र मोहिताः ।।
तत्ते कर्म प्रवक्ष्यामि यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ।।१६।।

हुन्छन् [३]कवि पनि [४]मुग्ध [५]कर्माऽकर्म-विवेकमा ।।
त्यै कर्म भन्छु जो जानी पर्दैनौ [६]पापगर्तमा ।।

यस विषयमा ठूला ठूला विद्वान्हरूलाई पनि भ्रम हुन्छ कि, कुन कर्म हो? और कुन अकर्म हो ? यसैले त्यस्तो कर्मतिमीलाई बताउँछु कि जसलाई जानिलिनाले तिमी पापबाट मुक्त हुने छौ ।

कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यं च विकर्मणः ।।
अकर्मणश्च बोद्धव्यं गहना कर्मणो गतिः ।।१७।।

[७]बुझ के [८]कर्मको ? फेरि [९]विकर्म र [१०]अकर्मको ।
जान्नुपर्दछ यो तत्त्व [११]अगम् छ गति [१२]कर्मको ।।

---

१. मुक्ति चाहनेहरूको । २. पूर्व-पुरुषको । ३. विद्वान्हरू । ४. अलमल्ल । ५. कर्म र अकर्म छुट्याउनमा । ६. पापको खाडलमा ।
पाठान्तर-कर्माऽकर्म बताउँन विद्वानै पनि मुग्ध छन् ।
तै कर्म भन्छु जो जान्दा छिटा जान्छौ दुःखबाट ।
७. बुझ्नुपर्छ । ८. शास्त्रविहित कर्मको । ९. शास्त्रनिषिद्ध कामको । १०. कर्मनगर्नुको । ११. बुझ्न नसकिने छ । १२. कर्मको ।

कर्मको गति गहन(जटिल) छ, यसो हुनाले 'कर्म के हो ? विकर्म अर्थात् विपरीत कर्म (पापकर्म) के हो ? अकर्म अर्थात् कर्म नगर्नु के हो ? यो सब राम्ररी बुझ्नुपर्दछ।।

कर्मण्यकर्म यः पश्येदकर्मणि च कर्म यः ।।
स बुद्धिमान्मनुष्येषु स युक्तः कृत्स्नकर्मकृत् ।।१८।।

अकर्म कर्ममा जस्ले देख्छ कर्म अकर्ममा ।
त्यही हो [1]बुद्धिमान् योगी, त्यै कर्ता सर्वकर्ममा ।।

कर्ताका भावको अनुसार कर्ममा अकर्म र अकर्ममा कर्म पनि जसलाई देखा पर्दछ, त्यो पुरूष सब मनुष्यमा ज्ञानी र त्यही युक्त अर्थात्- योगयुक्त औ संपूर्ण कर्म गर्ने पनि ठहर्दछ, (अर्थात् - कर्म गरिरहे पनि आसक्ति नलिई गर्ने हुनाले कर्ममा 'अकर्म' र कर्म नगरिरहे पनि इन्द्रियहरूबाट स्वभावैले एक एक कर्म भइरहेकाले 'कर्म' देख्ने अर्थात्- 'म केहि गर्दिन' संझेर आसक्ति छोडी कर्म गर्ने पुरूष ज्ञानी, योगी र सबै कर्म गर्ने ठहर्दछ तापनि भाव बढिया हुनाले कर्मका बन्धन पाउँदैन) ।।

यस्य सर्वे समारम्भाः कामसंकल्पवर्जिताः ।।
ज्ञानाग्निदग्धकर्माणं तमाहुः पण्डितं बुधाः ।।१९।।

जो कर्मको शुरू गर्छ [2]काम-संकल्प-वर्जित ।
[3]ज्ञानले कर्म पोलेको त्यही हो योग्य [4]पण्डित ।।

जसका समारंभ अर्थात् उद्योगहरू फलको इच्छाबाट रहित छन् र जसका कर्म ज्ञानरूपी अग्निरूपले भस्म भएका छन्, त्यस्तो पुरूषलाई नै ज्ञानी पुरूषहरू 'पण्डित' भनेर बताउँदछन्।।

---

१. कर्मयोगी । २. फलको चाहनेवाला रहित । ३. ज्ञानरूपी अग्निले । ४. सत् र असत् छुट्याउन सक्ने बुद्धि भएको ज्ञानी ।

त्यक्त्वा कर्मफलासङ्गं नित्यतृप्तो निराश्रयः ।।
कर्मण्यभिप्रमृत्तोऽपि नैव किञ्चित्करोति सः ।।२०।।

छोडी [1]कर्मफलासक्ति, जो छ [2]तृप्त, [3]निराश्रय ।
त्यो गरोस् तापनी कर्म केही गर्दैन निश्चय ।।

कर्मफलको आसक्ति छोडेर जो संधै तृप्त र निराश्रय छ अर्थात् जो पुरुषकर्मफलका साधनको आश्रय गर्ने यस्तो बुद्धि राख्दैन कि फलानो कार्यको सिद्धिका निमित्त फलानो काम गर्दछु. तव भन्नुपर्दछ कि, त्यसले कर्म गर्न लागिरहेको भए पनि केही पनि गरेको ठहर्दैन ।।

निराशीर्यतचित्तात्मा त्यक्तसर्वपरिग्रहः ।
शरीरं केवलं कर्म कुर्वन्नाप्नोति किल्पिषम् ।।२१।।

चित्त बाँधी, फलासक्ति नली, छोडी [4]परिग्रह ।
देहले [5]कर्म गर्दैमा पापको हुन्न [6]निग्रह ।।

फलको कामना (वासना) छोड्ने चित्तलाई संयमन गर्ने र सारा संगलाई त्याग गर्ने यस्तो पुरुष, शरीर अर्थात् शरीर वा कर्मेन्द्रियहरूबाट कर्म गर्दैमा पापभागी हुँदैन ।।

यदृच्छालाभसन्तुष्टो द्वन्द्वातीतो विमत्सरः ।।
समः सिद्धावसिद्धौ च कृत्वाऽपि न निबध्यते ।।२२।।

जो जे मिले पनि खुसी छ, [7]द्वन्द्व-मात्सर्यशून्य छ ।
असिद्धि-सिद्धि [8]सम छ कर्मले त्यो [9]अबद्ध छ ।।

---

१. कर्मफलको कामना । २. परिपूर्ण । ३. यो फलानाले यो कार्य गर्छु भन्ने बुद्धि नलिने । ४. सङ्ग । ५. कर्मेन्द्रियहरूले गरिने कर्म । ६. सम्बन्ध । ७. सुखदुःखका झोंकी र रिस नभएको । ८. बराबर । ९. बन्धनले रहित ।

संयोगवशले जो कुछ आईपर्दछ त्यसैमा सन्तोष लिने, ठण्डा-गरम, सुख-दुख आदि द्वन्द्वहरूलाई सहने, रिस नलिने औ कर्मको सिद्धि र असिद्धिमा सम भाव राख्ने पुरुष कर्म गरेर पनि तिनका बन्धनबाट (पापपुण्यबाट) बाँधिने हुँदैन ।।

गतसंगस्य मुक्तस्य ज्ञानावस्थितचेतसः ।।
यज्ञायाऽऽचरतः कर्म समग्रं प्रविलीयते ।।२३।।

जो [1]मुक्त [2]संग छोडेर ज्ञानमा [3]स्थिरचित्त छ ।
त्यो यज्ञकर्म गर्नेको सबै कर्म बिलाउँछ ।।

रागद्वेषले रहित, साम्यबुद्धिरूप ज्ञानमा स्थिरचित्त र केवल यज्ञकै निमित्त मात्र कर्म गर्ने, पुरुषका सारा कर्महरू (कर्मबन्धन) बिलाएर जान्छन् अर्थात् बन्धन हुँदैन ।।

## धेरै यज्ञ र ज्ञानयोगको श्रेष्ठता -

ब्रह्माऽर्पणं ब्रह्महविर्ब्रह्माग्नौ ब्रह्मणा हुतम् ।।
ब्रह्मैव तेन गन्तव्यं ब्रह्मकर्मसमाधिना ।।२४।।

अर्पनु, होमिने, [4]अग्नि, [5]होम्ने यो ब्रह्म हुन् भनी ।
सर्व ब्रह्म लिई बुद्धि, ब्रह्मैमा मिल्दछन् मुनि ।।

अर्पण अर्थात् हवन गर्ने क्रिया ब्रह्म हो, हवि अर्थात् होमिने द्रव्य ब्रह्म हो ब्रह्म रूप अग्निमा ब्रह्म ले नै हवन गरिएको छ, यस प्रकारसंग जसका बुद्धिमा सबै कर्महरू ब्रह्ममय छन्, त्यसलाई ब्रह्म नै मिल्छ ।।

---

१. साम्य बुद्धि भएको पुरुष । २. आसक्ति । ३. एकाग्रचित्त । ४. आगो । ५. होम गर्ने ।

देवमेवाऽपरे यज्ञं योगिनः पर्युपासते ।।
ब्रह्माग्नावपरे यज्ञं यज्ञेनैवोपजुह्वति ।।२५।।

**देवोद्देश्य गरी कोही, योगी ता यज्ञ गर्दछन् ।**
**[१]ब्रह्माग्निमा पनी कोही, [२]यज्ञैले [३]यज्ञ गर्दछन् ।**

कोही कोही कर्मयोगीहरू ब्रह्मबुद्धिको सट्टामा देवता इत्यादिको उद्देश्यले यज्ञ गर्दछन् ,कोही योगी पूर्वोक्त प्रकारले यज्ञादि सब्ब कर्म, यज्ञरूप उपायको द्वारा ब्रह्मरुप अग्निमा हवन गरिदिन्छन् ।।

श्रोतादीनिन्द्रियाण्यन्ये संयमाग्निषु जुह्वति ।
शब्दादीन्विषयानन्ये इन्द्रियाग्निषु जुह्वति ।।२६।।

**कोही [४]संयम-आगोमा सारा इन्द्रिय होम्दछन् ।**
**कोही इन्द्रिय-आगोमा सारा विषय होम्दछन् ।**

औ कोही योगी श्रोतादि अर्थात् कान, आँखा इत्यादि इन्द्रियहरूलाई संयमरुप अग्निमा होम गर्दछन् ( रोक्तछन्), अरू कोही योगी इन्द्रियरूप अग्निमा इन्द्रियका शब्द आदि विषयलाई होम्दछन् अर्थात् -केही कुराको पनि चाहना गर्दैनन् ।।

सर्वाणीन्द्रियकर्माणि प्राणकर्माणि चाऽपरे ।।
आत्मसंयमयोगाग्नौ जुह्वति ज्ञानदीपिते ।।२७।।

**कोही इन्द्रियका [५]कर्म प्राणकर्म पनी सदा ।**
**होम्दछन् [६]ज्ञान-सन्दीप्त [७]आत्मसंयम-अग्निमा ।।**

---

१. ब्रह्मरूपी आगोमा । २. यज्ञरूपी भगवान्का शरीरस्वरूप सारा जगत्का पदार्थले । ३. पूजन । ४. रोक्नुरूपी आगोमा । ५. व्यापार । ६. ज्ञानले बलेको । ७. मन रोक्नुरूप योगाग्निमा ।

अरू कुनै योगीहरू ध्येय-विषयद्वारा (ज्ञानद्वारा) प्रज्वलित, अध्यात्मरुप, योगाग्निमा ज्ञानेन्द्रियहरूका र प्राणवायुका कर्महरू (व्यापारहरूलाई) हवन गर्दछन् ।।

द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथाऽपरे ।।
स्वाध्यायज्ञानयज्ञाश्च यतयः संशितव्रताः ।।२८।।

**धनले र तपस्याले, योगले, ज्ञानले अरू ।**
**कोही स्वाध्यायले यज्ञ, गर्दछन् ती [1]व्रतीहरू ।।**

अरू कुनै व्रतधारी, संयमी पुरुषहरू कोही द्रव्यदान या, कोही कृच्छ, चान्द्रायण आदि तपस्यारूप या, कोही चित्तवृत्ति निवारणद्वारा समाधिरूप यज्ञ, कोही नित्यकर्मानुष्ठानरूप पठन-पाठन यज्ञ, कोही ज्ञानरूप यज्ञ इत्यादि कैयौं यज्ञहरू गर्दछन् ।।

अपाने जुह्वति प्राणं प्राणेऽपानं तथापरे ।।
प्राणापानगती रुद्ध्व प्राणायामपरायणाः ।।२९।।

**प्राणापान-गती रोकी, [2]प्राणायामी [3]स्वदेहमा ।**
**[4]अपान प्राणमा होम्छन्, त्यस्तै [5]प्राण अपानमा ।।**

कुनै प्रयत्नशील, तीक्ष्णव्रतधारी, प्राणायामी योगीहरु अपानवायुमा प्राणवायुको हवन गरेर, पूरक त्यस्तै प्राणमा अपानवायुको हवन गरेर रेचक र प्राण औ अपान यो दुवैको गति (आवागमन) रोकेर कुम्भक नामका प्राणायाम गर्दछन् ।।

अपरे नियताहाराः प्राणान्प्राणेषु जुह्वति ।।
सर्वेऽप्येते यज्ञविदो यज्ञक्षपितकल्मषाः ।।३०।।

---

१. परमात्माको व्रत लिने । २. प्राणायाम गर्ने । ३. आफ्नु शरीरमा । ४. भित्री श्वासमा । ५. बाहिरी श्वास ।

होम्छन् अरु [1]मिताहारी प्राणमा प्राण अर्जुन ।
यज्ञ जान्ने यज्ञले नै, पाप नास्ने सबै जन ।।

अरु कुनै योगीहरू आहारलाई नियमित गरेर अन्तस्करणवृत्तिमा प्राणेन्द्रियहरुको आहुति दिन्छन् यी सबै यज्ञवेत्ता ज्ञानी यिनै यज्ञका द्वारा पापको नाश गर्दैं ।।

यज्ञशिष्टामृतभुजो यान्ति ब्रह्म सनातनम् ।।
नाऽयं लोकोऽस्त्ययज्ञस्य कुतोऽन्यः कुरूसत्तम ! ।।३१।।

[2]यज्ञ शेष-सुधा खाई पुग्छन् ब्रह्म [3]सनातन,
त्यस्का छैनन् [4]दुवै लोक, यज्ञ गर्दैन जो जन ।

'यज्ञशेष-रूप अमृत' खाएर, सनातन ब्रह्ममा प्राप्त हुन्छन् । हे कुरूश्रेष्ठ, अर्जुन ! यज्ञहीन (यज्ञ नगर्ने) व्यक्तिका निमित्त यो अल्पसुख भएको मनुष्यलोकमा पनि सफलता प्राप्त हुँदैन भने फेरि त्यसका निमित्त परलोकमा सुख कसरी मिल्नसकला ।।

एवं बहुविधा यज्ञा वितता ब्रह्मणो मुखे ।।
कर्मजान्विद्धि तान्सर्वानेवं ज्ञात्वा विमोक्ष्यसे ।।३२।।

यस्ता यज्ञहरू धेर वेदमा छन् , सबै खुला ।
ती कर्मैबाट निस्कन्छन् ,यो जानी मुक्ति पाउला ।।

यस्ता नानाप्रकारका यज्ञको वर्णन साक्षात् ब्रह्माका मुखबाट नै गरिएको हो । विचार राख कि, यी सबै यज्ञ कर्मबाट नै सिद्ध हुन्छन् ।। यो ज्ञान भएपछि तिमी मुक्त हुनेछौ ।।

---

१. परिमाणसँग खाने । २. यज्ञशेषरूप अमृत । ३. पहिलेदेखि नै भइरहेको नित्य । ४. यो लोक र परलोक ।

श्रेयान्द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परन्तप ! ।।
सर्वं कर्माऽखिलं पार्थ ! ज्ञाने परिसमाप्यते ।।३३।।

[1]द्रव्ययज्ञ-हरू-भन्दा, श्रेष्ठ ता ज्ञानयज्ञ छ ।
सबै किसिमको कर्म ज्ञानमा नै समाप्त छ ।।

हे परन्तप, पार्थ ! द्रव्यमय दैव आदि यज्ञभन्दा ज्ञानमय यज्ञ नै श्रेष्ठ छ, किनभने सबप्रकारका फलसहित यावत् कर्महरूको पर्यवसान (समाप्ति) ज्ञानमा नै हुन्छ ।।

ज्ञानसिक्नू र पाप पुण्यको नाश हुन्छ -

तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया ।।
उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्त्वदर्शिनः ।।३४।।

तिमीले सिक त्यो ज्ञान [2]सेवा-[3]प्रश्न-[4]प्रणामले ।
ज्ञानोपदेश गर्नेछन् ती ज्ञानी [5]तत्त्वदर्शिले ।।

यो मनमा राख कि, तिमी तत्त्वदर्शी ज्ञानीहरूको नगीच जाऊ र प्रणामप्रश्नसेवा गरेर ज्ञान सिक, तिनी तिम्रा भक्तिले प्रसन्न भएर तिमीलाई ज्ञानको उपदेश गर्नेछन् ।।

यज्ज्ञात्वा न पुनर्मोहमेवं यास्यसि पाण्डव ! ।।
येन भूतान्यशेषेण द्रक्ष्यस्यात्मन्यथो मयि ।।३५।।

जो जान्नाले तिमी यस्तै पर्दैनौ फेरि मोहमा ।
संपूर्ण आफुमा देख्छौ, देख्नेछौ अथवा ममा ।।

---

१. धनबाट गरिने यज्ञादि । २. चाकरी । ३. सोध्नी । ४. नमस्कार (भाउपर्नु) । ५. वास्तविक तत्व देख्ने पुरुषले ।

हे पाण्डव ! जुन ज्ञान पाएर फेरि तिमीलाई यस्तो मोह हुनेछैन, औ जुन ज्ञानको योगले सारा प्राणीलाई आफूबाट अभिन्न देखेर त्यसपछि सबैलाई ममा पनि देख्नेछौ ।।

अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः ।।
सर्वं ज्ञानप्लवेनैव वृजिनं संतरिष्यसि ।।३६।।

**पापीभन्दा पनी बढ्ता छौ भने पनि आखिर ।**
**ज्ञानरूपी [१]डुँगाले नै तरौला [२]पाप-सागर ।।**

सब पापीभन्दा यदि ज्यादा नै अधिक, पापकर्म गर्ने पापी छौ भने पनि त्यो ज्ञानरूपी डुँगाको सहाराले नै तिमी पापसागरको पार जानेछौ ।।

यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरूतेऽर्जुन ! ।।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरूते तथा ।।३७।।

**बलेका अग्निले जस्तो काठ सारा डढाउँछ ।।**
**[३]ज्ञानाग्निले पनि त्यस्तै [४]साराकर्मजलाउछ ।।**

हे अर्जुन ! बलेका अग्निले काठहरूलाई जसरी भस्म गर्दछ; त्यस्तै यो ज्ञानरूप अग्निले पनि सब कर्मकाई अर्थात् पापपुण्यरूप बन्धनहरूलाई जलाइदिन्छ ।।

## ज्ञान प्राप्तिका उपाय-

न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।।
तत्स्वयं योगसंसिद्धः कालेनाऽऽत्मनि विन्दति ।।३८।।

---

१. नाउ जहाजले। २. पापरूपी महासागर । ३. ज्ञानरूपी अग्निले ।
४. कर्मबन्धन ।

ज्ञान जस्तो कुनै छैन पवित्र यस लोकमा ।
त्यो ता [1]समयले योगी[2] आफै पाउँछ आफुमा ।।

यस संसारमा ज्ञानले समान पवित्र वस्तु अरू कुनै छैन । मोक्षको इच्छा राख्ने योगीलाई कर्मयोग सिद्ध भएपछि मौकाले आफसे आप त्यो आत्मज्ञान प्राप्त हुन आउँदछ ।।

श्रद्धावान् लभते ज्ञानं तत्परः संयतेन्द्रियः ।।
ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाऽधिगच्छति ।।३९।।

सधैं [3]तत्पर, श्रद्धालु, [4]संयमी ज्ञान पाउँछ ।
ज्ञान पाएपछि चाँडै ठूलो शन्ति उदाउँछ ।।

जो श्रद्धावान् पुरूष इन्द्रियहरूलाई वशमा गुरूजनका आज्ञाको पालन र सेवा गरी त्यही, ज्ञानको पछि लाग्दछ, त्यसले ज्ञान पाएर चाँडै नै शान्ति पाउँछ अर्थात् मुक्ति पाउँछ ।।

अज्ञश्चाऽश्रद्दधानश्च संशयात्मा बिनश्यति ।।
नाऽयं लोकोऽस्ति न परो न सुखं संशयात्मनः ।।४०।।

[5]श्रद्धा-विहीन, अज्ञानी [6]संशयीको विनाश छ,
न त्यस्को छ दुबै लोक, न त्यस्को सुख खास छ ।

परन्तु, ज्ञान र श्रद्धा नभएको शंकाधारी पुरूष नष्ट हुन्छ । सन्देह मात्रै व्यक्तिको यो लोक वा परलोक कहीं असल हुँदैन । त्यसलाई सुख पनि मिल्दैन ।।

---

१. टाइमले । २. निष्काम कर्म गरी सिद्ध भएको पुरुष। ३. एकाग्रता लिएको ।४. इन्द्रियहरूलाई बश गर्ने । ५. श्रद्धा नभएको । ६. आहोबाहोइन भनी मनमा सन्देह लिनेको ।

## दुवैयोगका आश्रयबाट युद्धोपदेश-

योगसन्न्यस्तकर्माणं ज्ञान संछिन्नसंशयम् ।।
आत्मवन्तं न कर्माणि निबध्नन्ति धनञ्जय ! ।।४१।।

**योगले [1]कर्म नासेको, ज्ञानले [2]नष्ट-संशय,**
**[3]आत्मज्ञलाई ती कर्म बन्ध छैनन् [4]धनञ्जय !**

हे धनञ्जय ! जसले कर्मयोगको आश्रय गरेर ईश्वरमा कर्महरू समर्पण गरेको छ, औ ज्ञानले जसका सब सन्देह मेटिएका छन् , त्यस्तो आत्मज्ञानी पुरूषलाई कर्मका पाप-पुण्यरूप बन्धनले बाँध्न सक्दैनन् ।।

तस्मादज्ञानसंभूतं हृत्स्थं ज्ञानासिनाऽऽत्मनः ।।
छित्त्वैनं संशयं योगमातिष्ठोत्तिष्ठ भारत ! ।।४२।।

**[5]तस्मात् अज्ञानले [6]जन्य सन्देह मनको सब ।**
**[7]ज्ञान-तर्वारले काटी योग [8]ली उठ पाण्डव ! ।।**

हे भारत ! यस निमित्त आफ्नो हृदयमा रहेको र अज्ञानबाट उत्पन्न भएको यो सन्देहलाई ज्ञानरूप तरवार ले काटेर कर्मयोगको आश्रय गरेर, अनि युद्धका निमित्त खडा होऊ अर्थात् तैयार होऊ ।

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे श्रीकृष्णार्जुन संवादे 'ज्ञान-कर्म-संन्यास-योगोनाम' चतुर्थोऽध्यायः

इति नेपाली भाषामा कोमलगीता 'ज्ञानकर्मसंन्यासयोग' चतुर्थोऽध्याय ।।४।।



---

१. कर्मबन्धन नष्ट भएको । २. मनको मैलापन नासियेको । ३. आत्मज्ञानीलाई । ४. उत्तरकुरूबाट धन जिती ल्याउने । ५. त्यसकारणले । ६. उत्पन्न भएको । ७. ज्ञानरूपी तलवारले । ८. निष्काम कर्मयोगली ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### कर्मसन्न्यास-योग ५

### सन्न्यासभन्दा कर्मयोग श्रेष्ठछ-

**अर्जुन उवाच-**

सन्न्यासं कर्मणां कृष्ण ! पुनर्योगं च शंससि ।।
यच्छ्रेय एतयोरेकं तन्मे ब्रूहि सुनिश्चितम् ।।१।।

[1]सन्न्यास, [2]कर्म-दोटैको गर्नुभो यो [3]प्रशंसन ।
यिन्मा एकै भलो जो छ, त्यो आज्ञा होस् जनार्दन ।।

अर्जुनले सोधे-हे कृष्ण ! कहिले सन्न्यास र कहिले कर्मयोग अर्थात् कर्म गरिरहनाको मार्गलाई नै उत्तम बताउनुहुन्छ, अब मलाई निश्चय गरेर कुनै मार्गको उपदेश गर्नुहोस् , जो यी दुइमा मेरा निमित्त ज्यादा नै श्रेयस्कर (कल्याण गर्ने) हुन्छ ।

**श्रीभगवानुवाच-**

सन्न्यासः कर्मयोगश्च निःश्रेयसकरावुभौ ।।
तयोस्तु कर्मसन्न्यासात्कर्मयोगो विशिष्यते ।।२।।

कर्मयोग र सन्न्यास दुवै छन् [4]मुक्ति-दायक ।
तर [5]सन्न्यासभन्दा त कर्मयोगै छ लायक ।।

---

१. ज्ञानयोग । २. कर्मयोग । ३. तारीफ । ४. मुक्ति दिने । ५. केही पनि कर्म नगरी हातखुट्टा बाँधेर चुपचाप रहनुरूप सन्न्यास ।

भगवान्ले भन्नुभयो - कर्मसंन्यास र कर्मयोग यी दुबै मार्ग मोक्ष प्राप्त गराउने हुँन् ; तर मोक्षतर्फको दृष्टिले दुबैको योग्यता समान भएमा पनि यो दुइमा कर्मसंन्यासभन्दा कर्मयोगको योग्यता विशेष छ ।

## तत्वबाट हुने योगको एकत्व-

ज्ञेयः स नित्य संन्यासी यो न द्वेष्टि न कांक्षति ।।
निर्द्वन्द्वो हि माहाबाहो! सुखं बन्धात्प्रमुच्यते ।।३।।

**[१]संन्यासी हो उही जस्मा न ता [२]द्वेष न चाह छ ।**
**त्यो [३]द्वन्द्वहीन योगीको सहजै बन्ध छुट्दछ ।।**

हे माहबाहु ! जो केहीको पनि द्वेष र केहीको प्रेम पनि गर्दैन, त्यस पुरूषलाई कर्म गरिरहे पनि नित्यसंन्यासी संझनुपर्दछ, किनभने जो सुखदुःख आदि द्वन्द्वधर्मबाट छुटेको होस् ता त्यो सहजैसित कर्मका सब बन्धनबाट मुक्त भएको हुन्छ ।।

साङ्ख्ययोगो पृथग्वालाः प्रवदन्ति न पण्डिताः ।।
एकमप्यास्थितः सम्यगुभयोर्विन्दते फलम् ।।४।।

**[४]सांख्य, योग पृथक् भन्ने [५]अज्ञ हुन्, विज्ञ[६] होइनन् ।**
**जान्ने राम्रो गरी यौटा दोटैको फल पाउँछन् ।।**

मूर्खहरू भन्दछन् कि सांख्य (कर्मसंन्यास) र योग (कर्मयोग) भिन्न भिन्न हुन् ; परन्तु पण्डितहरू यस्तो भन्दैनन् , कुनै पनि एकको राम्री आचरण गर्नाले दुबैको फल पाइन्छ ।।

---

१. कर्म गरे पनि खास संन्यासी । २. निन्दा रिस । ३. रिसराग भय दुःख सम्झने । ४. कर्मसंन्यास । ५. केटाकेटीका बुद्धि भएका मूढ । ६. विवेकी ज्ञानी पण्डित हुन् ।

यत्सांख्यैः प्राप्यते स्थानं तद्योगैरपि गम्यते ।।
एकं सांख्यं च योगं च यः पश्यति स पश्यति ।।५।।

सांख्यले पाइने [१]स्थान योगले पनि मिल्दछ ।
सांख्य, योग दुबै एकै जो देख्छ उहि देख्दछ ।।

जुन मोक्षस्थानमा सांख्यमत लिनेहरू पुग्दछन् , त्यहीं कर्मयोगी पनी पुग्दछन् , यस निमित्त यी दुबै मार्ग (सांख्य र योग) एकै हुन् ; जसले यस्तो जान्यो त्यसैले वास्तविक तत्त्व पनिजान्यो ।।

संन्यासस्तु महाबाहो ! दुःखमाप्तुमयोगतः ।।
योगयुक्तो मुनिर्ब्रह्म न चिरेणाऽधिगच्छति ।।६।।

कर्मयोग-बिना पार्थ ! हुन्छ संन्यास दुष्कर[२] ।
[३]योगयुक्त, मुनि, ज्ञानी ब्रह्म पाउँछ [४]सत्वर ।।

हे महाबाहु ! योग अर्थात् कर्मनगरी संन्यासलाई प्राप्त गर्न मुश्किल पर्दछ; जो मुनि कर्मयुक्त भयो, त्यसलाई ब्रह्म को प्राप्ति हुनामा विलंब लाग्दैन ।।

## इन्द्रिय कर्म गर्नें योगी छुट्टैछ-

योगयुक्तो विशुद्धात्मा विजितात्मा जितेन्द्रियः ।।
सर्वभूतात्मभूतात्मा कुर्वन्नपि न लिप्यते ।।७।।

मन, इन्द्रिय जो जित्छ, आत्मैमा सब देख्दछ ।
त्यो शुद्ध कर्मयोगी ता कर्म गर्दा [५]अलिप्त छ ।।

---

१. ब्रह्मपद । २. मुश्किलले गरीने । ३. निष्काम कर्मयोगी । ४. चाँडो । ५. बन्धनरहित ।

जो कर्मयोगले युक्त भएको छ, जसको अन्त;करण शुद्ध छ, जसले आफ्ना मन र इन्द्रियलाई जितिलिएको छ र सब प्राणीको आत्मा नै जसको आत्मा भएको छ, त्यो योगी, सब कर्म गरोस् तापनि, कर्मका पुण्य पापबाट अलिप्त (फरक) रहन्छ ।।

नैव किञ्चित्करोमीति युक्तो मन्येत तत्त्ववित् ।।
पश्यञ्छृण्वन्स्पृशञ्जिघ्रन्नश्नन्गच्छन्स्वपन्श्वसन् ।।८।।

**देखी, सुनी, सुँघी, छोई खाई, सास लिई, अनि ।**
**हिंडी, बोली, लिई, छाडी, चिंली, हेरी, सुती पनी ।।**

प्रलपन्विसृजन्गृह्णन्नुन्मिषन्निमिषन्नपि ।।
इन्द्रियाणीन्द्रियार्थेषु वर्तन्त इति धारयन् ।।९।।

**आफ्ना काम सबै गर्छन् यी इन्द्रिय, भनीकन ।**
**संझेर, [1]तत्त्ववित्, [2]योगी ठानोस् 'केही म गर्दिन' ।।**

योगयुक्त, तत्त्ववेत्ता पुरूषले सुझनुपर्दछ कि, 'म केही पनि गर्दिन' औ हेर्नु, सुन्नु, सुङ्नु, खानु, हिंड्नु, सुत्नु, सास फेर्नु, बोल्नु छोड्नु, पक्रनु, आँखाका पलक खोल्नु र बन्द गर्नु इत्यादिमा पनि यस्तो बुद्धिराखेर व्यवहार गरोस् कि, केवल इन्द्रियहरू आफ्ना-आफ्ना विषयहरूमा चलिरहेका छन् ।।

ब्रह्मण्याधाय कर्माणि सङ्गं त्यक्त्वा करोति यः ।।
लिप्यते न स पापेन पद्मपत्रमिवाऽम्भसा ।।१०।।

**ब्रह्ममा कर्म अर्पेर, फल छोडी, गरी सधैं ।**
**लिपिन्न पापले योगी, जलले [3]पद्मपत्र झैं ।**

---

१. तत्त्व जान्ने । २. कर्मयोगी । ३. कमलको पात

जुन योगी, ब्रह्ममा अर्पण गरेर आसक्तिरहित कर्म गर्दछ, त्यसलाई त्यस्तै गरी पाप टांसिन सक्दैन, जस्तो कि कमलका पातमा पानी टांसिदैन ।।

कायेन मनसा बुद्ध्या केवलैरिन्द्रियैरपि ।।
योगिनः कर्म कुर्वन्ति सङ्गं त्यक्त्वाऽऽत्मशुद्धये ।।११।।

**[1]देहेन्द्रिय-मनोबुद्धि सबले कर्म केवल ।**
**शुद्धि-खातिरमा योगी गर्छन् छोडी सबै फल ।।**

यस कारण, कर्मयोगी 'म गर्ने हुँ' भन्ने यस्तो अहंकारी बुद्धि नलिईकन खालि शरीरले, मनले, बुद्धिले र इन्द्रियहरूले पनि आसक्ति (कामना) छोडेर आत्मशुद्धिका निमित्त कर्म गरिरहन्छन् ।।

युक्तः कर्मफलं त्यक्त्वा शान्तिमाप्नोति नैष्ठिकीम् ।।
अयुक्तः कामकारेण फले सक्तो निबध्यते ।।१२।।

**योगी छोडी कर्मफल, ब्रह्मको शान्ति पाउँछ ।**
**फलेच्छा ली, गरी कर्म, कुयोगी बन्ध पाउँछ ।।**

जो योगयुक्त भएको छ, त्यो योगी कर्मका फल छोडेर अन्तःकरणमा पूर्ण-शान्ति पाउँदछ; जो योग युक्त छैन, त्यो कामनाले फलको विषयमा आसक्ति लिएर कर्म गर्दछ र पुण्यपापबाट बाँधिने हुन्छ ।।

सर्वकर्माणि मनसा संन्यस्याऽऽस्ते सुखं वशी ।।
नवद्वारे पुरे देही नैव कुर्वन्न कारयन् ।।१३।।

**मनले कर्म छोडेको, [2]वशी, [3]देही रमाउँछ ।**
**नौ ढोके शहरमा न गर्छ, न गराउँछ ।।**

---

१. शरीर-इन्द्रिय-मन-बुद्धि । २. मनले र इन्द्रियदमन गर्ने । ३. जीवात्मा ।

सब कर्महरूलाई प्रत्यक्षै बाहिरी तवरबाट होइन कि, मनले मात्र संन्यास (ईश्वरमा समर्पण) गरेर, जितेन्द्रिय, देहवान् , पुरूष नौढोका भएको यो शरीररूपी शहरमा न. केही गर्दछ, न त केही गराउँदछ र आनन्दपूर्वक बसिरहन्छ ।।

## कर्ता प्रकृति हो आत्मा होइन-

न कर्तृत्वं न कर्माणि लोकस्य सृजति प्रभुः ।।
न कर्मफलसंयोगं स्वभावस्तु प्रवर्तते ।।१४।।

**लोकको [१]कर्तृता, कर्म, [२]फलसंयोग [३]वस्तुतः ।**
**आत्माले सृष्टि गर्दैन स्वभावैले छ यो [४]स्वतः ।।**

आत्मा या परमेश्वरले जनहरूका कर्तृत्वलाई, तिनका कर्मलाई र तिनीहरूमा प्राप्त हुने कर्मफलका संयोगलाई पनि निर्माण (रचना) गर्दैन, स्वभाव अर्थात् प्रकृतिले नै सब कुछ गराउँदछ ।।

नादत्ते कस्यचित्पापं न चैव सुकृतं विभुः ।।
अज्ञानेनाऽऽवृतं ज्ञानं तेन मुह्यन्ति जन्तवः ।।१५।।

**कसैको धर्म वा पाप आत्माले लिन्न अर्जुन ।**
**छोपी अज्ञानले ज्ञान मोहमा छन् सबै जन ।।**

सर्वव्यापी परमात्माले कसैको पाप वा पुण्य पनि लिदैनन् , ज्ञानको माथि अज्ञानको पर्दा परिरहेको हुनाले (अर्थात् मायाले) सब प्राणीहरू केवल मोहमा लट्पटिएका छन् ।।

---

१. कर्तापन । २. कर्मफल जुटाउनु । ३. वास्तविक । ४. आफसे आप प्रकट ।

## अज्ञान हटेपछि पुनर्जन्महुन्न -

ज्ञानेन तु तदज्ञानं येषां नाशितमात्मनः ।।
तेषामादित्यवज्ज्ञानं प्रकाशयति तत्परम् ।।१६।।

**जस्को नासिन्छ अज्ञान आत्माका ज्ञानले सब ।**
**सूर्य झैं तिनको ज्ञान उज्यालो गर्छत्यो [१]पद ।।**

परन्तु ज्ञानले जसको यो अज्ञान नष्ट भएको छ, तिनका निमित्त तिनको ज्ञानले परमार्थ तत्वलाई सूर्यकै समान प्रकाशित गरिदिन्छ ।।

तद्‌बुद्धयस्तदात्मानस्तन्निष्ठास्तत्परायण ।।
गच्छन्त्यपुनरावृत्तिं ज्ञाननिर्धूतकल्मषाः ।।१७।।

**जो त्यही तत्वमा बुद्धि, मन [२]निष्ठादि राख्दछन् ।**
**ज्ञानले पाप फालेका ती ज्ञानी मुक्ति पाउँछन् ।।**

त्यस परमार्थ तत्त्वमा जसको बुद्धि रँगिएको छ, उहीं जसको अन्तःकरण रमाएको छ र जो तन्निष्ठ, त्यस्तै तत्परायण भएका छन्, तिनका पापहरू ज्ञानले सब धोइन्छन् र तिनीहरू फेरि जन्म लिंदैनन् ।।

विद्याविनयसंपन्ने ब्राह्मणे गवि हस्तिनि ।।
शुनि चैवश्वपाके च पण्डिताः समदर्शिनः ।।१८।।

**गाई, हात्ती र चाण्डाल, कुत्ता, [३]सर्वज्ञ बाहुन ।**
**ज्ञानीका [४]दृष्टिमा एकै ठहर्छन् बुझ अर्जुन* ।।**

---

१. मोक्षपदवी । २. स्थिति, इत्यादि । ३ सब जान्ने ज्ञानी ।
४. नजरमा

* पाठान्तर - विद्या विनयले युक्त विप्र, गो, हस्ति कुक्कुर ।
चाण्डालतकमा हुन्छन् समदर्शी यतीश्वर ।।

पण्डित अर्थात् ज्ञानीहरूको दृष्टि विद्या र नम्रता इत्यादि गुणले युक्त भएको ब्राह्मण, गाई, हात्ती, कुकुर र चाण्डाल-यी सबैका विषयमा समानै (एकनासै) रहन्छ ।।

इहैव तैर्जितः सर्गो येषां साम्ये स्थितं मनः ।।
निर्दोषं हि समं ब्रह्म तस्माद्ब्रह्मणि ते स्थिताः।।१९।।

**यहीं तिन्ले जिते [१]सृष्टि मन जो सम राख्तछन् ।**
**[२]समैछ ब्रह्म निर्दोषी, [३]तस्मात् ती [४]ब्रह्मनिष्ठ छन् ।।**

यसै गरी जसको साम्यावस्थामा स्थिर भएको छ, तिनी यहींको यहीं नै अर्थात् मरणको प्रतीक्षा नगरेर, मृत्युलोकलाई जित्छन्, किनभने ब्रह्म निर्दोशी र सम छ, यस कारण यी साम्यबुद्धि भएका पुरुष सधैं ब्रह्ममा रहेर यसै लोकमा ब्रह्मभूत (ब्रह्मरूप) हुन्छन् ।।

न प्रहृष्येत्प्रियं प्राप्य नोद्विजेत्प्राप्य चाऽप्रियम् ।।
स्थिरबुद्धिरसंमूढो ब्रह्मविद् ब्रह्मणि स्थितः ।।२०।।

**जो प्रिया-ऽप्रिय पाएमा न खुशी, न त दिक्क भो।**
**[५]स्थिरबुद्धि विवेकी त्यो [६]ब्रह्मवित् ब्रह्ममा रह्यो ।।**

जो प्रिय अर्थात् इष्ट वस्तु पाउँदा प्रसन्न पनि हुँदैन र अनिष्ठ आइपर्दा खिन्न पनि हुँदैन यसरी जसको बुद्धि स्थिर भएर मोहमा फसेको छैन, त्यही ब्रह्ममा रहेको भनी सझ ।।

बाह्यस्पर्शेष्वसक्तात्मा विन्दत्यात्मनि यत्सुखम् ।।
स ब्रह्मयोगयुक्तात्मा सुखमक्षयमश्नुते ।।२१।।

---

१. संसार । २. सबैमा समान छ । ३. त्यस कारण । ४. ब्रह्ममा रहेका । ५. स्थिरप्रज्ञः । ६. ब्रह्मतत्त्व जान्ने ।

[1]बहिर्विषयनिर्लोभी जो [2]आत्मसुख पाउँछ ।
त्यै ब्रह्मयुक्त योगीमा [3]अक्षय्य [4]सुख आउँछ ।।

बाह्य पदार्थहरुको इन्द्रियहरूसंग हुने संयोगमा अर्थात् विषयोपभोगमा जसको मन आसक्त छैन, त्यसलाई नै आत्मसुख मिल्दछ रत्यो ब्रह्मयुक्त पुरुष अक्षय सुखको अनुभव गर्दछ ।।

ये हि संस्पर्शजा भोगा दुःखयोनय एव ते ।।
आद्यन्तवन्तः कौन्तेय! न तेषु रमते बुधः ।।२२।।

बहिर्विषयका भोग दुखकारण छन् ठूला ।
आउने, नासिने यिन्मा कुन विद्वान् रमाउला ?।।

हे कौन्तेय! बाहिरी पदार्थहरुका संयोगबाट नै उत्पन्न हुने, सारासुख दुःखादि भोगको आदि र अन्त्य छ, अर्थात् आउनासाथ नासिन्छन् , यसैले तिनीहरु दुःखका नै कारण हुन्; तिनिहरुमा पण्डितहरु रमाउँदैनन् (त्यस्तोमा आसक्ति लिदैनन् ) ।।

शक्नोतीहैव यः सोढुं प्राक्शरीरविमोक्षणात् ।।
कामक्रोधोद्भवं वेगं स युक्तः स सुखी नरः ।।२३।।

जो काम क्रोधको वेग यो शरीर छँदातक ।
[5]सहन्छ, लोकमा त्यै हो [6]योगी र [7]सुखी साधक ।।

शरीर छुट्नुभन्दा पहिले अर्थात् मरणपर्यन्त कामक्रोधबाट उत्पन्न हुने वेगलाई वश लोकमा नै सहनुका इन्द्रियसंयमनद्वारा जो समर्थ हुन्छ त्यही पुरुष मुक्त (कर्मयोगी-युक्त) र त्यही सच्चा सुखी हो ।।

---

१. विषयभोगमा लोभ नगर्नेको । २. भित्री आनन्द । ३. कहिल्यै नरासिने । ४. मोक्ष । ५. इन्द्रियहरू रोकेर सहन समर्थ हुन्छ । ६. कर्मयोगी । ७. सुख सिद्ध गर्ने ।

## कर्मगरे पनी कर्मयोगी मुक्तछ-

योऽन्तः सुखोऽन्तरारामस्तथाऽन्तर्ज्योतिरेव यः ।।
स योगी ब्रह्मनिर्वाणं ब्रह्मभूतोऽधिगच्छति ।।२४।।

[१]भित्रै सुखी, खुशी जो छ, जो भित्री-ज्योति पाऊँछ ।
त्यै [२]ब्रह्मभूत [३]ब्रह्मज्ञ, [४]योगी [५]निर्वाण पाऊँछ ।।

यस प्रकार बाह्य सुखको अपेक्षा नगरेर, जो अन्तःकरणमा नै सुखी होला, जो आपसे आप आराम पाउन लाग्ला, यस्तै जनलाई भित्री ज्योति मिल्ला, त्यो कर्मयोगी ब्रह्मरूप हुन्छ, फेरि त्यसलाई नै ब्रह्मनिर्वाण अर्थात् ब्रह्ममा लीन हुनु रूप मोक्ष प्राप्त हुन्छ ।।

लभन्ते ब्रह्मनिर्वाणमृषयः क्षीणकल्मषाः ।।
छिन्नद्वैधा यतात्मानः सर्वभूतहितेरताः ।।२५।।

[६]द्वन्द्व छोडी, [७]यतात्मा भै, सबैको हित चाहने ।
[८]निष्पाप ऋषि हुन् खास ब्रह्मनिर्वाण पाउने ।।

जुन ऋषिहरूको द्वन्द्वबुद्धि छुटेको छ अर्थात् जसले यो तत्त्व जानेका छन् कि सब ठाउँमा परमेश्वर एकनास हुनुहुन्छ, जसका पाप नष्ट भएका छन् र जो आत्मसंयमबाट सब प्राणीको हित गर्नामा रत भएका छन् तिनीलाई यो ब्रह्मनिर्वाणरूप मोक्ष मिल्दछ ।।

कामक्रोधवियुक्तानां यतीनां यतचेतसाम् ।।
अभितो ब्रह्मनिर्वाणं वर्तते विदितात्मनाम् ।।२६।।

---

१. अन्तःकरणमा नै । २. ब्रह्मस्वरूप । ३. ब्रह्मज्ञानी ।
४. निष्काम कर्मगर्ने योगी । ५. ब्रह्ममा लीन हुने मोक्ष । ६. द्वित्व-बुद्धि ।
७. मन रोक्न सक्ने । ८. पाप नभएका ।

कामक्रोधादिले शून्य, [१]आत्मज्ञ, मन रोकने ।
मुनिको ब्रह्मनिर्वाण पासैमा हुन्छ आउने ।।

कामक्रोधले रहित, आत्मसंयम गर्ने, आत्मज्ञानले युक्त भएका, यति (मुनि) हरूले नगीचमा नै राखिएको जस्तो भएर बसी बसी ब्रह्मनिर्वाण मोक्ष पुगिने हुन्छ ।।

स्पर्शान्कृत्वा बहिर्बाह्यांश्चक्षुश्चैवाऽन्तरे भ्रुवोः ।।
प्राणापानौ समौ कृत्वा नासाऽभ्यन्तरचारिणौ ।।२७।।

बाहिरै [२]बाहिरी-स्पर्श, चक्षु [३]भ्रूमध्यमा गरी ।
मिलाई [४]नासिका भित्रै, प्राणा-ऽपान[५] बराबरी ।।

जितेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः ।।
विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ।।२८।।

दशेन्द्रिय-मनो-बुद्धि बाँधेको, [६]मुक्तितत्पर ।
[७]कामक्रोधादिले हीन, जो हो, त्यो मुक्त हो [८]नर ।।

इन्द्रियहरूका सुखदुःखदायक संयोगबाट अलग भएर, दुबै आँखीभौंको बीचमा दृष्टि जमाएर, नाकबाट बहने प्राण र अपानलाई सम गरेर, जसले इन्द्रिय, मन, र बुद्धिहरूलाई संयम (कायम) राखेको छ; त्यस्तै जसका डर इच्छा-क्रोध सब छुटेका छन् , त्यो मोक्षपरायण मुनि सदासर्वदा मुक्त नै हो ।।

---

१. आत्मज्ञानी । २. इन्द्रियका सुखदुख दिलाउने संयोग । ३. आखीभौंको बीचमा । ४. नाक । ५. भित्र र बहिरको प्राणवायु । ६. मुक्तिमा लागिपरेको । ७. कामना, रिस, डर । ८. मनुष्य ।

ईश्वरलाई सब संझनाकोफल-

भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्वरम् ।।
सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति ।।२९।।

तपस्या, यज्ञको [1]भोक्ता, यावत्कै मित्र [2]ईश्वर ।
मलाई संझने योगी पाउला शान्ति [3]सुस्थिर ।।

जो मलाई नै यज्ञहरू र तपस्याहरूको भोग गर्ने, स्वर्गादि सबै लोकको अधिपति, यस्तै सब प्राणीहरूको सुहृत् (भलो चाहने मित्र) पनि संझन्छ त्यस पुरूषले नै शान्ति पाउँछ ।

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे कर्मसँन्यासयोगोनाम
पञ्चमोऽध्यायः ।।५।।

इति नेपालीभाषामा कोमलगीता 'कर्मसंन्यासयोग'
पञ्चम अध्याय समाप्त ।।५।।



१. भोग गर्ने । २. स्वामी । ३. कहिल्यै नविग्रने ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### ध्यानयोग ६

### फलाशा छोडीकर्मगर्ने नै संन्यासीहो-

श्रीभगवानुवाच-

अनाश्रितः कर्मफलं कार्यं कर्म करोति यः ।।
स संन्यासी च योगी च न निरग्निर्न चाक्रियः ।।१।।

**[1]फल छोडी, [2]स्वकर्तव्य गर्ने, [3]'संन्यस्त' [4]'युक्त' हो ।**
**हुन्न योगी र संन्यासी [5]अग्नि-कर्तव्य छोड्छ [6]जो ।।**

भगवान्‌ले भन्नुभयो-कर्मफलको आश्रय नगरेर अर्थात् मनमा फलाशालाई टिक्न नदिएर, जो शास्त्र-अनुसार आफ्नो निहित कर्तव्य कर्म गर्दछ, त्यही संन्यासी र त्यही योगी हो अग्निहोत्रादि वा अरू केही कर्म नगरी चुपचापै बसिरहने पुरूष पनि सच्चा संन्यासी र योगी ठहर्दैन ।।

यं संन्यासमिति प्राहुर्योगं तं विद्धि पाण्डव ! ।।
न ह्यसंन्यस्तसंकल्पो योगी भवति कश्चन ।।२।।

**जस्लाई भन्छन् संन्यास 'योग' हो त्यहि अर्जुन ! ।**
**विना [7]संकल्पको त्याग योगी हुन्न कुनै जन ।।**

---

१. कामना । २. आफ्नो कर्तव्य कर्म । ३. संन्यासी । ४. योगी। ५. अग्निहोत्रादि र स्वकर्तव्य कर्म । ६. जुन-पुरुष । ७. फलेच्छाको ।

हे पाण्डव! जसलाई संन्यास भन्दछन् , त्यसैलाई कर्मयोग संझ, किन भने, संकल्प अर्थात् काम्यबुद्धिरूप फलाशालाई संन्यास (ईश्वरार्पण) नगरी कोही पनि कर्मयोगी हुन सक्दैन ।।

## शम र कर्मको कार्य कारणभाव-

आरुरुक्षोर्मुनेर्योगं कर्म कारणमुच्यते ।।
योगारूढस्य तस्यैव शमः कारणमुच्यते ।।३।।

**[1]योगेच्छु मुनिको निति कर्म हो [2]शम-कारण ।**
**योग सिद्ध भई त्यसको शम हो कर्म-कारण ।।**

कर्मयोगमा आरूढ हुन इच्छा राख्ने मुनिका निमित्त कर्मलाई शमको कारण अर्थात् साधन (सहाय) बताइएको छ, औ त्यही पुरुष योगरूढ अर्थात् पूर्णयोगी भइसकेमा त्यसका निमित्त शम (शान्ति) चाहिं कर्मको साधन हुन्छ भनेर बताइएको छ ।।

यदा हि नेन्द्रियार्थेषु न कर्मस्वनुषज्जते ।।
सर्वसंकल्पसन्यासी योगारूढस्तदोच्यते ।।४।।

**आसक्ति छोडला जस्ले [3]इन्द्रियार्थ र [4]कर्ममा ।**
**सारा [5]संकल्पले [6]हीन त्यो चढ्यो पूर्णयोगमा ।।**

किनभने, जब त्यो पुरुष इन्द्रियका शब्द-स्पर्श आदि विषयहरूमा र कर्महरूमा अनुषक्त (आसक्ति भएको हुँदैन) त्यस्तै सब संकल्प अर्थात्

---

१. योग लिन इच्छा गर्ने । २. पाठान्तर जस्तै

योगेच्छु मुनिले योग लिंदा कर्म छ कारण ।
योग पाएपछि त्यसको शम हो मुक्ति-कारण ।।

३. इन्द्रियहरूका विषय । ४. कर्मफलमा । ५. कामनाले । ६. रहित भएको ।

काम्यबुद्धिरूप फलाशाको (प्रत्यक्ष कर्मको होइन) संन्यास गर्दछ, तब त्यसलाई योगारूढ (योगमा चढिसकेको) भन्दछन् ।

## योगसिद्धिमा आफ्नू स्वतन्त्रता-

उद्धरेदात्मनाऽऽत्मानं नात्मानमवसादयेत् ।।
आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः ।।५।।

**गर्नू उद्धार आफैले आफूलाई नगाडनू ।**
**आफै हो आफ्नो मित्र, आफै हो शत्रु आफनू ।।**

मनुष्य आफ्नो उद्धार आफैले गरोस् , आफैले आफूलाई कहिल्यै गिर्न नदेओस् , किनभने हरेक मनुष्य आफै आफ्नो बन्धु अर्थात् सहायक मित्र अथवा आफै शत्रु पनि हुन्छ ।।

बन्धुरात्माऽऽत्मनस्तस्य येनाऽऽत्मैवाऽऽत्मना जितः ।।
अनात्मनस्तु शत्रुत्वे वर्तेताऽऽत्मैव शत्रुवत् ।।६।।

**त्यो आफ्नै [1]बन्धु हो आफै जो आफ्नै मन जित्तछ ।**
**जो आफुलाई जान्दैन त्यो आफ्नै शत्रु तुल्य छ ।।**

जो खुद आफै आफ्नो मन (अन्तःकरण) लाई जित्छ (वशमा राख्दछ) त्यो खुद आफै आफ्नो मित्रसमान छ, जसले मनलाई आफ्नो अधीनमा राख्न सकेको छैन, त्यो खुद आफै आफूसँग नै शत्रुसमान वैरभाव गर्दछ ।।

## समबुद्धिको श्रेष्ठता-

जितात्मनः प्रशान्तस्य परमात्मा समाहितः ।।
शीतोष्ण-सुखदुःखेषु तथा मानापमानयोः ।।७।।

---

१. मित्र ।

शीतोष्ण-दुःखसुखमा त्यस्तै मानापमानमा ।
[१]प्रशान्त, [२]विजितात्माको फुर्छ [३]ब्रह्म समाधिमा ।।

जसले शीत-उष्ण, सुख-दुःख र मान-अपमानमा समेत ए नास शान्ति लिएको छ र आफ्नो अन्तःकरणलाई पनि अधीनमा राखेक. छ, त्यस्ता योगीको समाधिमा परब्रह्मको स्फुरण (झल्का) अवश्यमेव पर्दछ ।।

ज्ञानविज्ञानतृप्तात्मा कूटस्थो विजितेन्द्रियः ।।
युक्त इत्युच्यते योगी समलोष्टाश्मकाञ्चनः ।।८।।

ज्ञान विज्ञानले [४]तृप्त, [५]कूटस्थ, [६]नियतेन्द्रिय ।
[७]शिला-स्वर्ण समै देख्ने, हो योगी [८]युक्त [९]चिन्मय ।।

जसको आत्मा (अन्तःकरण) ज्ञान र विज्ञान (विविध ज्ञान) ले तृप्त भएको होस् , जसले आफ्ना इन्द्रियहरूलाई जितेको होस् , जो मूलप्रकृतिमा पुगेर माटो सुन र पत्थरमा भेदभाव नदेख्ने होस् , त्यही कर्मयोगी पुरूषलाई 'युक्त' अर्थात् सिद्धावस्थामा पुगेको भनी बताउँछन् ।।

सुहृन्मित्रार्युदासीनमध्यस्थद्वेष्यबन्धुषु ।।
साधुष्वपि च पापेषु समबुद्धिर्विशिष्यते ।।९।।

मित्र, बैरी, [१०]उदासीन[११]मध्यस्थ, [१२]द्वेष्य, बन्धुमा ।
पापी र साधुमा [१३]तुल्यै देख्ने हो श्रेष्ठ लोकमा ।।

---

१. शान्ति लिने । २. मन जितेको । ३. परमात्मा । ४. परिपूर्ण। ५. मूल प्रकृतिमा पुगेको । ६. इन्द्रियसविजयी । ७. ढुंगो र सुन। ८. योगमा चढेको । ९. चिद्ब्रह्मस्वरूप । १०. भलो बुरा के ही नचाहने । ११. भलो चाहने । १२. निन्दा गर्नयोग्यमा । १३. समान ।

सुहृत् , मित्र, शत्रु, उदासीन, मध्यस्थ, द्वेष्य, बान्धव, साधु, दुष्टहरूको विषयमा पनि जसको बुद्धि सम भएको छ (बराबर ठान्दछ) त्यही पुरूष विशेष योग्यताको ठहर्दछ ।

## योगको साधन क़सरी गर्नू-

योगी युञ्जीत सततमात्मानं रहसि स्थितः ।।
एकाकी यतचित्तात्मा निराशीरपरिग्रहः ।।१०।।

**आशा [१]संग्रह छोडेर, राखी चित्त अधीनमा ।**
**एकान्तमा वसी योगी गरोस् अभ्यास योगमा ।।**

योगीले एकान्तमा एकलै बसेर चित्त र अन्तःकरणलाई संयम गरोस् , कुनै पनि काम्यवासनाहरूलाई नराखेर, परिग्रह अर्थात् नाशवान्लाई छोडी, निरन्तर आफ्नो योगाभ्यासमा लागिपरोस् ।।

शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः ।।
नात्युच्छ्रितं नाऽतिनीचं चैलाजिनकुशोत्तरम् ।।११।।

**न त अग्लो, न ता होचो, [२]चैल-च्रर्म-कुशोत्तर ।**
**[३]पवित्र-स्थानमा राखी आफ्नो आसन [४]सुस्थिर ।।**

योगाभ्यासी पुरूषले पवित्र स्थानमा आफ्नो स्थिर आसन राखोस, जो कि न त ज्यादा ऊँचा होस् न त नीचो; त्यसमा पहिले कुश, त्यसमाथि मृगछाला र त्यसमाथि वस्त्र (तन्ना) बिछ्याओस् ।।

तन्नैकाग्रं मनः कृत्वा यतचित्तेन्द्रियक्रियः ।।
उपविश्याऽऽसने युञ्ज्याद्योगमात्मविशुद्धये ।।१२।।

---

१. नाश हुने पदार्थ । २. कुशमाथि मृगचर्म र त्यसमाथि कपड़ा भएको । ३. शुद्ध ठाउँमा । ४. मजबूत ।

चित्त-इन्द्रियका [1]वृत्ति रोकी [2]उस्मा बसीकन ।
[3]आत्म-शुध्यर्थमा योग गरोस् एकाग्र ली मन ।।

त्यही चित्त र इन्द्रियहरूका व्यापार (चेष्टा) हरूलाई रोकेर, अनि मनलाई पनि एकाग्र गरी, आत्मशुद्धिका निमित्त आसनमाथि बसेर, योगाभ्यास गरोस् ।।

समं कायशिरोग्रीवं धारयन्नचलं स्थिरः ।।
संप्रेक्ष्य नासिकाग्रं स्वं दिशश्चाऽनवलोकयन् ।।१३।।

सम-निश्चल राखेर देह घाँटी तथा शिर ।
दिशा नहेरी, [4]नासाग्र हेर्दै भैकन सुस्थिर ।।

प्रशान्तात्मा विगतभीर्ब्रह्मचारिव्रते स्थितः ।।
मनः संयम्य मच्चित्तो युक्त आसीत मत्परः ।।१४।।

शान्त भै डर छोडेर, रहँदै [5]ब्रह्मचर्यमा ।
मन रोकेर, [6]मच्चित्त [7]युक्त होस् सर्वदा ममा ।।

पिठ्यु, शिर र गर्दनलाई सम गरेर अर्थात् सीधा एकै रेखामा सोझो राखेर, स्थिर हुँदै, यताउति नहेर्दै, आफ्ना नाकको टुप्पोमा दृष्टि जमाएर निर्भय भई, शान्त अन्तःकरणले ब्रह्मचर्य व्रतपालन गर्दै, त्यस्तै मनलाई रोक्तै ममा नै चित्त लगाई, मत्परायण हुँदै (मबाहेक अरुको संझना नगर्दै) 'युक्त' होस् ।।

---

१. व्यापार । २. आसनमा । ३. अन्तःकरण शुद्धि निमित्तमा । ४. नाकको टुप्पो । ५. हृदयदेखि नै ब्रह्मचर्यव्रत मा । ६. ईश्वरमा मन दिएको । ७. योगलिएको ।

युञ्जन्नेवं सदाऽऽत्मानं योगी नियतमानसः ।।
शान्तिं निर्वाणपरमां मत्संस्थामधिगच्छति ।।१५।।

यो [१]आत्मलयको योग गर्ने जो [२]यतचित्त छ ।
त्यो मैमा रहने [३]मुक्ति-दायिनी शान्ति पाउँछ ।।

यसप्रकार सधैं आफ्नो योगाभ्यास गरिरहनाले मन वशमा भएको कर्मयोगीलाई मैमा रहने र आखिरमा निर्वाणपद अर्थात् मेरै स्वरूपमा लीन गराउने शान्ति हुन आउँदछ ।।

नाऽत्यश्नतस्तु योगोऽस्ति न चैकान्तमनश्नतः ।।
न चाऽतिस्वप्नशीलस्य जाग्रतो नैव चाऽर्जुन !।।१६।।

न [४]योग खन्चुवाको छ न, [५]निराहारको छ त्यो ।
न त त्यो छ सुताहाको, जाग्रामीको न ता छत्यो ।।

हे अर्जुन!अति धेरै खाने, अथवा कत्ति पनि नखाने र ज्यादा नै सुत्ने, या सदा जागरण गरिरहने यस्ता पुरुषलाई यो योग (कर्मयोग) कदापि सिद्ध हुँदैन ।।

युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु ।
युक्तस्वप्नावबोधस्य योगो भवति दुःखहा ।। १७।।

जस्ले [६]विहार-आहार-[७]कर्म-[८]स्वप्न-[९]प्रबोधन ।
ठीक राख्यो, उसैको छ, योग त्यो [१०]दुःखनाशन ।।

---

१. परमात्मा लीन हुनाका निमित्तको । २. जितेन्द्रिय । ३. मुक्ति दिलाउने । ४. कर्मयोग । ५. केही नखानेको । ६. घुमफिर गर्नु । ७. काम शुरू गर्नाको व्यापार । ८. सुत्नु । ९. बिउँझनु । १०. दुःख नाश गर्ने ।

जसको आहार र विहार नियमित छ, कर्महरूको आचरण पनि ठीक ठीक छ र सुत्नु उठ्नु कालमा परिमित हुन्छ, यसैलाई योग दुःख हरण गर्ने अर्थात् सुख दिने हुन्छ ।।

## आत्यन्तिक सुखको वर्णन-

यदा विनियतं चित्तमात्मन्ये वाऽवतिष्ठते ।।
निस्पृहः सर्वकामेभ्यो 'युक्त' इत्युच्यते तदा ।।१८।।

**समालिएको त्यो चित्त आत्मामा जब बस्तछ ।**
**कामना केहि गर्दैन, अनि योगी ठहर्दछ ।।**

जब रोकिएको मन, आत्मामा नै स्थिर रहन्छर कुनै पनि उपभोगको इच्छा रहँदैन, तब भन्दछन् कि, त्यो पुरुष युक्त भयो ।।

यथा दीपो निवातस्थो नेङ्गते सोपमा स्मृता ।।
योगिनो यतचित्तस्य युञ्जतो योगमात्मनः ।। १९।।

**[1]निवातस्थानको दीप जस्तो हुन्छ सदा स्थिर ।**
**[2]यतचित्त, [3]लयाभ्यासी हुन्छ यस्तै [4]यतीश्वर ।।**

जस्तो हावा नलाग्ने ठाउँमा राखिएका बत्तीको ज्योति, निश्चल (नडग्ने) हुन्छ,, त्यही रुपमा चित्तलाई रोकेर योगाभ्यास गर्ने योगीलाई पनि दिइन्छ।।

यत्रोपरमते चित्तं निरूद्धं योगसेवया ।।
यत्र चैवाऽऽत्मनात्मानं पश्यन्नात्मनि तुष्यति।।२०।।

---

१. हावा नलाग्ने ठाउँको । २. मन रोक्ने । ३. लय योगको अभ्यास गर्ने । ४. मुनीश्वर ।

योगा-ऽवरुद्ध[1] यो चित्त जहाँ [2]विश्राम पाउँछ ।
आफैमा आफु देखेर जहाँ आफै रमाउँछ ।।

योगानुष्ठानले रोकिएको चित्त, जुन ठाउँमा रमाउँछ औ जहाँ खुद आत्मालाई देखेर आफसे आप सन्तुष्ट पनि रहन्छ ।।

सुखमात्यन्तिकं यत्तद्बुद्धिग्राह्यमतीन्द्रियम् ।।
वेत्ति यत्र न चैवाऽयं स्थितश्चलति तत्वतः ।।२१।।

[3]जहाँ आत्यन्तिक-सुख, [4]बुद्धिग्राह्य [5]अतीन्द्रिय ।
प्राप्त हुन्छ जहाँ योगी, हुन्छ निश्चल [6]तन्मय ।।

जहाँ खालि बुद्धिले मात्र थाहा पाइने र इन्द्रियहरुको गति नपुग्ने, अत्यन्त सुखको उसलाई अनुभव हुन्छ र जहाँ त्यो योगी एकबार स्थिर भयो भने, परमार्थ तत्वबाट कहिल्यै डग्दैन ।।

यं लब्ध्वा चाऽपरं लाभं मन्यते नाऽधिकं ततः ।।
यस्मिन्स्थितो न दुःखेन गुरुणापि विचाल्यते ।।२२।।

जो पाएपछि गन्दैन बढी लाभ अरू कुनै ।
जहाँ पुग्दा कडा दुःख सकदैनन् डगाउनै ।।

जुन स्थितिलाई पाउनाले त्योभन्दा अर्को ठूलो लाभ कुनै जँच्दैन र जहाँ स्थिर रहनाले कुनै पनि ठूलो दुःखले त्यस योगीलाई उसबाट डगाउन पनि सक्दैन ।।

---

१. योगले रोकिएको । २. शान्ति । ३. कहिल्यै ननाशिने आत्मसुख । ४. साम्यबुद्धिले पाइन सकिने । ५. अरू इन्द्रियको गति

तं विद्याद्दु:खसंयोग वियोगं योगसंज्ञितम् ।।
स निश्चयेन योक्तव्यो योगोऽनिर्विण्णचेतसा ।।२३।।

त्यै जानोस् [१]दुःखसंयोग विनाशी, 'योग' नामक ।
गर्नैपर्दछ त्यो पक्का गराई चित्त [२]उत्सुक ।।

त्यसैलाई दु:खको संबन्ध नाश गर्ने अर्थात् दु:खको स्पर्शबाट अलग रहेको 'योग' नामको स्थिति बताउँछन् । औ यस योगको आचरण मनलाई हड्बडाउन नदिई निश्चयले गनुपर्दछ ।।

## मनलाई कसरी रोक्नु ?

सङ्कल्पप्रभवान्कामांस्त्यक्त्वा सर्वानशेषतः ।।
मनसैवेन्द्रियग्रामं विनियम्य समन्ततः ।।२४।।

[३]सङ्कल्पजन्य संपूर्ण-[४]कामना छोडि [५]सर्वतः ।
मनले [६]इन्द्रिय-ग्राम रोकेर अनि भारत ।।

सङ्कल्पबाट उत्पन्न हुनु सब कामना अर्थात् विषय-वासनालाई नि:शेष (बाकी नराखी) त्याग गरेर मनले नै सारा इन्द्रियलाई विशेषदेखि जतातत्तैबाट रोकावट गरी ।।

शनै शनैरुपरमेद् बुद्ध्या धृतिगृहीतया ।।
आत्मसंस्थं मन:कृत्वा न किञ्चिदपि चिन्तयेत ।।२५।।

धीरे धीरे [७]धैर्यवती बुद्धिले शान्त भैदिनू ।
[८]आत्मलीन गरी चित्त फेरि केही नसंझनू ।।

---

१. दु:ख संबन्ध नाश गर्ने । २. उत्कण्ठित । ३. मनोव्यापारबाट उत्पन्न । ४. विषय-वासना । ५. जतातत्तैबाट । ६. इन्द्रियहरूको

धैर्ययुक्त बुद्धिले बिस्तार बिस्तार शान्त हुँदे जाओस् र मनलाई आत्मामा स्थिर गरेर अरू कुनै विचार आउनै नदेओस् ।।

यतो यतो निश्चरति मनश्चञ्चलमस्थिरम् ।।
ततस्ततो नियम्यैतदात्मन्येव वशं नयेत् ।। २६ ।।

**जता जता यो निस्कन्छ मन चञ्चल [1]अस्थिर ।**
**ल्याई उता उताबाट आत्मैमा त्यो गरोस् स्थिर ।।**

यस रीतले चित्तलाई एकाग्र गर्दै; चञ्चल र अस्थिर मन जहाँ जहाँ बाहिर जान्छ, उहाँबाट रोकेर त्यसलाई आत्माको नै स्वाधीनता गराओस् ।।

## योगिनैब्रह्मरूपछ-

प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम् ।।
उपैति शान्तरजसं ब्रह्मभूतमकल्मशम् ।।२७।।

**[2]शान्तचित्त [3]रज:शून्य, निष्पाप, [4]ब्रह्मतन्मय ।**
**यस्तो यो कर्मयोगीमा सुख आउँछ अक्षय ।।**

यसो गर्नाले शान्तचित्त, रजोगुणले रहित, निष्पाप र ब्रह्मभूत यस योगीलाई उत्तम सुख (अक्षय सुख) प्राप्त हुन्छ ।।

युञ्जन्नेवं सदाऽऽत्मानं योगी विगतकल्मषः ।।
सुखेन ब्रह्मसंस्पर्शमत्यन्तं सुखमश्नुते ।।२८।।

**यस्तो आत्मलयाभ्यासी योगी निष्पाप बन्दछ ।**
**सहजै [5]ब्रह्मसंबन्धी अत्यन्त सुख भोग्दछ ।।**

---

१. एकाग्र स्थिर नभएको । २. शान्त मन भएको । ३. रजोगुणले रहित । ४. ब्रह्मजस्तै भएको । ५. ब्रह्ममा रहेको ।

यस प्रकारसंग निरन्तर आफ्नो योगाभ्यास गर्ने कर्मयोगीलेपाप बाट छुटेर, ब्रह्मसंयोगले पाइने अत्यन्त - सुखको आनन्द अर्थात् ब्रह्मानन्द उपभोग गर्दछ (पाउँछ) ।।

## योगीको आत्मौपम्यबुद्धि-

सर्वभूतस्थमात्मानं सर्वभूतानि चाऽऽत्मनि ।
ईक्षते योगयुक्तात्मा सर्वत्र समदर्शनः ।।

**आफैभित्र सबै प्राणी, आफै प्राणीहरूमहाँ ।**
**देख्दछन् योगले युक्त [१]समदर्शी जहाँतहाँ ।।२९।।**

यसरी जसको आत्मा योगयुक्त भएको छ, त्यसको दृष्टि समभावमा प्राप्त हुन्छ र त्यसलाई सर्वत्र यस्तो भान हुन लाग्दछ कि, 'म सब प्राणीमा छु औ यी सब प्राणी ममा छन् ।।

यो मां पश्यति सर्वत्र सर्वञ्च मयि पश्यति ।
तस्याऽहं न प्रणस्यामि स च मे न प्रणश्यति ।।३०।।

**सबैमा जो मलाई र ममा ने सब देख्तछ ।**
**न छू म [२]दूरमा त्यसको, मेरो त्यो न त दूर छ ।।**

जसले परमेश्वर, परमात्मा मलाई सब ठाउँमा र सबैलाई ममा रहेका देख्तछ, न त त्यसबाट म कहिल्यै बिछोड हुन्छु; न त त्यो पुरुष मबाट बिछोड हुन सक्तछ ।।

सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः ।
सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते ।।३१।।

---

१. समान देख्ने पुरुष । २. टाढामा ।

[१]सर्वव्यापी मलाई जो [२]एकत्व लिइ भज्दछ ।
जे गरोस् तापनी मैमा त्यो योगी नित्य लीन छ ।।

जो एकत्वबुद्धि अर्थात् सर्वभूतात्मैक्यबुद्धिलाई मनमा राखेर् सब प्राणीमा रहने म परमेश्वरलाई भज्दछु, त्यो कर्मयोगी जे जस्तो बर्ताव गरोस् तापनि ममा नै रहेको हुन्छ ।।

आत्मौपम्येन सर्वत्र समं पश्यति योऽर्जुन ! ।
सुखं वा यदि वा दुःखं स योगी परमो मतः ।।३२।।

आफनै तुलनाद्वारा सुख-दुःखादि [३]लोकको ।
समानै सबमा देख्ने, योगी हो उच्चकोटिको ।।

हे अर्जुन ! सुख होस् या दुःख, 'मलाई जस्तै अरूलाई पनि हुन्छ' जो यस्तो आत्मौपम्य दृष्टिले सर्वत्र देख्न लाग्दछ, तब त्यो कर्मयोगी सब भन्दा श्रेष्ठ भनेर मानिन्छ ।।

## अभ्यास र वैराग्यले मन रोक्नुपर्छ-

### अर्जुन उवाच-

योऽयं योगस्त्वया प्रोक्तः साम्येन मधुसूदन ! ।।
एतस्याऽहं न पश्यामि चञ्चलत्वात्स्थितिं स्थिराम् ।।३३।।

जो यस्तो [४]समता-योग आज्ञा भो मधुसूदन ।
चित्त-चाञ्चल्यले त्यस्को स्थिरता म त देख्तिनँ ।।

अर्जुतले बिन्ती गरे-हे मधुसूदन ! साम्यबुद्धिले प्राप्त हुने जो यो

---

१. सबलाई ढाकेर रहेको । २. एकाग्र । ३. मुख्य दर्जाको । ४. समबुद्धिले पाइने योग ।

म.।योग हजूरबाट आज्ञा भयो, त्यो मनको चंचलताले गर्दा स्थिर रहन ।।फ्ला भने जस्तो म त ठहराउँदिनँ ।।

चंचलं हि मनः कृष्ण ! प्रमाथि बलवद्दृढम् ।
तस्याऽहं निग्रहं मन्ये वायोरिव सुदुष्करम् ।।३४।।

जबर्दस्त, [1]बली, [2]चित्त साह्रै चञ्चल ठान्दछु ।
[3]बन्ध यस्को हवाको झैं कृष्ण ! मुश्किल मान्दछु ।।

किनभने, हे कृष्ण ! यो मन चंचल हठी, बलवान् र दृढ छ हावाकै समान अर्थात् हावाको कुम्लो बाँध्नु जस्तै यसलाई रोक्नु म त अत्यन्त मुश्किल ठहराउँदछु ।।

श्री भगवानुवाच -

असंशयं महाबाहो ! मनो दुर्निग्रहं चलम् ।
अभ्यासेन तु कौन्तेय ! वैराग्येण च गृह्यते ।।३५।।

कसै नरोकिसक्नू छ चञ्चले मन निश्चय ।
[4]वैराग्याऽभ्यासले किन्तु[5] यो रोकिन्छ धनञ्जय ।।

भगवान्ले आज्ञा गर्नुभयो हे महाबाहु, अर्जुन ! यस कुरामा सन्देह छैन कि, यो मन चंचल छ औ त्यसलाई निग्रह गर्नु (रोक्नु) 'कठिन छ, परन्तु हे कौन्तेय ! अभ्यास र वैराग्यले त्यो वश गर्न सकिन्छ' ।।

असंयतात्मना योगो दुष्प्राप इति मे मतिः ।।
वश्यात्मना तु यतता शक्योऽवाप्तुमुपायतः ।।३६।।

---

१. बलियो । २. मन । ३. रोकबाट । ४. वैराग्यका अभ्यासले । ५. तर ।

**जस्ले यो मन रोक्तैन, त्यस्को [१]दुर्लभ योग छ ।**
**[२]यत्न गर्ने, [३]वशी, योगी [४]युक्तिले लिन सक्तछ ।।**

म त ठान्दछु कि, जसको अन्तःकरण वशमा छैन, त्यसलाई यो साम्यबुद्धिरूप योग प्राप्त हुनु मुश्किलै छ, तर अन्तःकरणलाई कब्जामा राखेर बराबर प्रयत्न गर्दै रहेमा पुरूषले उपायद्वारा यो योग पाउन संभव छ ।।

## योगभ्रष्टको धेरै जन्ममा सिद्धि-

### अर्जुन उवाच-

अयतिः श्रद्धयोपेतो योगाच्चलितमानसः ।।
अप्राप्य योगसंसिद्धिं कां गतिं कृष्ण ! गच्छति ।।३७।।

**श्रद्धालु [५]अधुरो योगी योगबाट छुट्यो भने ।**
**योगसिद्धिबिना कृष्ण ! त्यस्ले के गति पाउने ?**

अर्जुनले सोधे -हे कृष्ण ! श्रद्धा भने छ, परन्तु प्रकृति-स्वभावले पूरा मेहनत र रोकावट हुन नसक्नाले जसको मन साम्यबुद्धिरूप कर्मयोगबाट चुक्न गयो, त्यो पुरूष योगसिद्धि नपाएपछि कुन गतिमा पुग्न जान्छ (त्यसको के गति हुन्छ) ।।

कच्चिन्नोभयविभ्रष्टश्छिन्नाभ्रमिव नश्यति ।
अप्रतिष्ठो महाबाहो ! विमूढो ब्रह्मणः पथि ।।३८।।

---

१. पाउन मुश्किल । २. कोशिश । ३. इन्द्रियनिग्रही । ४. उपाय (जुक्ति) ले । ५. पूर्ण हुन नपाएको ।

मोहले भुलदा ब्रह्म-प्राप्ति-मार्ग छुटीकन ।
[1]मेघ झैं उभय[2]-भ्रष्ट नासिन्छ कि जनार्दन ।।

हे महाबाहु कृष्ण ! त्यो पुरूष मोहग्रस्त भएर, ब्रह्मप्राप्तिको मार्गमा स्थिर रहन नसक्नाले दुबै तर्फबाट भ्रष्ट भई, छिन्न-भिन्न बादलको समान बीचमा नै नाश त हुन जाँदैन कि ।।

एतन्मे संशयं कृष्ण ! छेत्तुमर्हस्यशेषतः ।
त्वदन्यः संशयस्यास्य छेत्ता न ह्युपपद्यते ।।३९।।

यो मेरो सब सन्देह हर्नुहोस् मधुसूदन ।
बिना हजूर यो शंका कस्ले सक्छ हटाउन ।।

हे कृष्ण ! मेरो यस सन्देहलाई तपाईले नै निर्मूल गरेर हटाइदिनुपर्दछ, किनभने तपाईबाहेक यो सन्देह मेटिदिने अर्को कोही पुरूष यो लोकमा पाइँदैन ।।

श्री भगवानुवाच-

पार्थ ! नैवेह नामुत्र विनाशस्तस्य विद्यते ।
न हि कल्याणकृत्कश्चिद्दुर्गतिं तात ! गच्छति ।।४०।।

दुबै लोकविषे त्यस्को छँदैछैन कुनै [3]क्षति ।
[4]शुभ गर्ने कुनै [5]व्यक्ति पार्थ ! पाउन्न [6]दुर्गति ।।

भगवान्ले भन्नभयो - हे पार्थ ! के यस लोकमा, के परलोकमा के यस्ता पुरूषको कहिल्यै पनि विनाश छँदै छैन, किनभने, हे बाबु ! कल्याणकारक कर्म गर्ने कुनै पुरूषको पनि दुर्गति हुनै सक्दैन ।।

---

१. बादल । २. दूलोमा मिल्नको इच्छाले आफ्नो स्थान छोडेपछि, न उसलाई भेटाउँछ, न पहिलो आफ्नो स्थान पाउँछ त्यस्तो । ३. नोक्सान-नाश । ४. भलाई । ५. पदार्थ (जन) । ६. अगति

प्राप्य पुण्यकृमां लोकानुषित्वा शाश्वतीः समाः ।
शुचीनां श्रीमतां गेहे योगभ्रष्टोऽभिजायते ।।४१।।

[१]पुण्यात्माका लोकमा गै धेरै वर्ष रहन्छ र ।
त्यो योगभ्रष्ट[२] जन्मन्छ पवित्र धनिका घर ।।

धर्मात्मा पुरूषहरूले पाउने स्वर्गादि लोक पाई, त्यहाँ धेरै वर्षसम्म रहेर, फेरि त्यो कर्मयोगबाट भ्रष्ट भएको पुरूष, पवित्र श्रीमानहरूका घरमा जन्म लिन जान्छ ।।

अथवा योगिनामेव कुले भवति धीमताम् ।
एतद्धि दुर्लभतरं लोके जन्म यदीदृशम् ।।४२।।

यद्वा सुयोग्य योगीका कुलमा हुन्छ [३]संभव ।
यस्तो यो लोकमा जन्म पाउनू नै छ दुर्लभ ।।

अथवा बुद्धिमान् कर्मयोगीहरूकै कुलमा जन्म पाउँदछ, यस किसिमको जन्म, यस लोकमा पाउनु बडो दुर्लभ छ ।।

तत्र तं बुद्धिसंयोगं लभते पौर्वदेहिकम् ।
सतते च ततो भूयः संसिद्धौ कुरूनन्दन ! ।।४३।।

त्यहाँ अघिल्ला जुनिको [४]बुद्धि-संस्कार पाउँछ ।
फेरी पनि त्यसैले त्यो सिद्धिमा चित्त लाउँछ ।।

हे कुरूनन्दन ! यस प्रकारसँग प्राप्त भएका जन्ममा त्यसले पूर्वजन्मको बुद्धिसंस्कार पाउँछ र त्यो उसभन्दा बढी योगसिद्धि पाउनाको प्रयत्न (मेहनत) पनि गर्दछ ।।

---

१. धर्मात्माहरूका । २. योगबाट गिरेको । ३. जन्म । ४. बुद्धिको वासना ।

पूर्वाभ्यासेन तेनैव ह्रियते ह्यवशोऽपि सः ।।
जिज्ञासुरपि योगस्य शब्दब्रह्मातिवर्तते ।।४४।।

त्यै [१]पूर्वाऽभ्यासले [२]उस्मा जबर्दस्ती लगिन्छ त्यो ।
छ भने [३]योगजिज्ञासु [४]शब्दब्रह्म सबै जित्यो ।।

आफ्नो पूर्वजन्मको अभ्यासले नै त्यसको इच्छा नरहेमा पनि, त्यो पूर्णसिद्धतर्फ नै तानिन्छ नसलाई कर्मयोगको जान्न मात्र ईच्छा रहोस् त्यो पनि शब्दब्रह्म (वेदका कर्महरू) भन्दा ज्यादै पर पुग्दछ ।।

प्रयत्नाद्यतमानस्तु योगी संशुद्धकिल्विषः ।।
अनेकजन्मसंसिद्धस्ततोयातिपरां गतिम् ।।४५।।

[५]यत्नका साथ उद्योग गर्दै [६]निष्पाप भैकन ।
भई क्यै जन्मले [७]सिद्ध लिन्छ त्यो गति [८]पावन ।।

यसरी कोशीशसाथ उद्योग गर्दा गर्दै पापबाट शुद्धभई, कर्मयोगी पुरूष धैरै जन्मपछि सिद्धि पाएर, आखिरमा उत्तम गति अर्थात् मोक्ष पाउँछ ।।

## सवभन्दा कर्मयोगी श्रेष्ठछ -

तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिकः ।।
कर्मिभ्यश्चाधिको योगी तस्माद्योगी भवार्जुन ! ।।४६।।

---

१. पूर्व जन्मको अभ्यासले । २. पूर्णसिद्धिमा । ३. योग जान्नमात्र इच्छा भएको । ४. वेदका सात्विकादिकर्म । ५. मेहनतका । ६. निर्मल । ७. योग-सिद्धि । ८. पवित्र गति (मुक्ति) ।

[1]तपस्वी र तथा [2]ज्ञानी [3]कर्मीभन्दा ठुलो भनी ।
[4]योगी मानिन्छ, यै निति बन योगी तिमी पनी ।।

हे अर्जुन ! तपस्वीहरू, ज्ञानीहरू र कर्मकाण्डीहरू भन्दा योगीनै श्रेष्ठ मानिएको छ । यस निमित्त तिमी योगी अर्थात् - कर्मयोगी नै बन (होऊ) ।।

योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना ।।
श्रद्धावान्भजते यो मां स मे युक्ततमो मतः ।।४७।।

योगीमा पनि त्यै योगी साह्रै युक्त ठहर्दछ ।
जो [5]अन्तरात्मा मैमा दी श्रद्धाले भक्ति गर्दछ ।।

सब कर्मयोगीहरूमा पनि म उसैलाई सर्वोत्तम युक्त अर्थात् उत्तम कर्मयोगी संझन्छु, जो ममा अन्तःकरण राखेर श्रद्धापूर्वक मेरो नै भजन गर्दछ ।। (२८०)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे ध्यानयोगो' नाम
षष्ठोऽध्यायः ।।६।।

इति नेपालीभाषामा कोमलगीता 'ध्यानयोगोनाम' षष्ठोऽध्यायः ।।६।।



१. जङ्गलमा घुम्दै शरीरलाई क्लेश दिई हठयोग आदि गर्ने । २. सांख्ययोगानुसार संन्यास लिई केही कर्म न गर्ने । ३. कर्मकाण्डानुसार फलको इच्छा लिई काम गर्ने । ४. कर्मफलको इच्छा नराखी कर्म गर्ने । ५. भित्री मन ।

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### ज्ञान-विज्ञान-योग ७

### ज्ञानविज्ञान जान्नाको आवश्यक

**श्रीभगवानुवाच-**

मय्यासक्तमनाः पार्थ ! योगं युञ्जन्मदाश्रयः ।।
असंशयं समग्रं मां यथा ज्ञास्यसि तच्छृणु ।।१।।

मैमा [1]आसक्ति-आधार गर्दै, [2]योग लिईकन ।
[3]मलाई जसरी [4]पूर्ण जानौला त्यो सबै सुन ।।

भगवान्ले आज्ञा गर्नुभयो-हे पार्थ ! ममा चित्त लगाएर औ मेरो आश्रय न गरी, कर्मयोगको आचरण गर्दा तिमीलाई जुन प्रकारले या जुन विधिले मेरो सन्देहरहित ज्ञान पूर्णतः हुन्छ, त्यो सब सुन ।।

ज्ञानं तेऽहं सविज्ञानमिदं वक्ष्याम्यशेषतः ।।
यज्ज्ञात्वा नेह भूयोऽन्यज्ज्ञातव्यमवशिष्यते ।।२।।

तिमीलाई [5]सविज्ञान-ज्ञान भन्छु सबै सुन ।
जुन जानेपछि जान्न बाँकी क्यै हुन्न अर्जुन ।।

---

१. भक्ति । २. कर्मयोग । ३. ईश्वरलाई । ४. सन्देह-रहित ज्ञानपूर्ण स्वरूप । ५. व्यष्टि-समष्टिरूप ज्ञान । (भिन्नत्व र एकत्वको ज्ञान)।

विज्ञानले सहित यो पूर्णज्ञान मतिमिलाई बताउछु जुनजानीलिनाले यस लोकमा त्योभन्दा बढ़ी जान्नाको निमित्त बाँकी रहेको अरू केही कुरा पनि हुँदैन ।।

मनुष्याणां सहस्त्रेषु कश्चिद्यतति सिद्धये ।।
यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्वतः ।।३।।

हजारौं जनमा कोही [1]सिद्धिको [2]यत्न गर्दछ ।
हजारौं सिद्धमा यौटा साँचै मकन जान्दछ ।।

हजारौं मनुष्यमा केही एकाधले सिद्धि पाउनामा यत्न गर्दछ, औ यत्न गर्ने (लागिपर्ने) अनेक सिद्ध पुरूषका मध्यमा पनि एकाधलाई नै मेरो सच्चा ज्ञान हुन्छ ।।

## आत्माका दूई प्रकृतिबाट संसार-

भूमिरापोऽनलो वायुः खंमनो बुद्धिरेव च ।।
अहंकार इतायं मे भिन्ना प्रकृतिरष्टधा ।।४।।

पृथ्वी, पानी, हवा, अग्नि, आकाश, मन, बुद्धि र ।
[3]अहन्ता, यी आठ थरी-मेरो प्रकृति हो जड ।।

पृथ्वी, जल, अग्नि, वायु, आकाश यी पाँच सूक्ष्मभूत र मन; बुद्धि, अहंकार यी तीन समेत जम्मा आठ किसिम मेरो प्रकृति बाँडिएको छ ।।

अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम् ।।
जीवभूतां महाबाहो ! ययेदं धार्यते जगत् ।।५।।

[4]'अपरा' यो प्रकृति हो, मेरी [5]जीव-स्वरूपिणी ।
[6]'परा' प्रकृति अर्को छ, थाम्दछे जो जगत् पनी ।।

---

१. योगसिद्धिको । २. कोशिश । ३. अहङ्कार । ४. जडस्वरूपिणी । ५. प्राणस्वरूप लिने । ६. ज्ञानस्वरूपिणी ।

यो अपरा अर्थात् कम्ती दर्जाको प्रकृति हो । हे महाबाहु, अर्जुन! तिमि संझ कि, योभन्दा बाहेक जगतलाई धारण गर्ने, परा अर्थात् उच्चश्रेणीकी, जीवरूपिणी, मेरी अर्की प्रकृति पनि छ ।।

एतद्योनीनि भूतानि सर्वाणीत्युपधारय ।।
अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा ।।६।।

सारा प्राणी यिनैबाट छन् उत्पन्न धनञ्जय ।
[1]उत्पत्ति-प्रलय-स्थान [2]यावत्को छु म [3]अव्यय ।।

यो ख्याल राख कि, यिनै दुइ प्रकृतिबाट सब प्राणी उत्पन्न हुन्छन् । सारा जगत्को प्रभाव अर्थात् मूल उत्पत्ति स्थान र प्रलय अर्थात् अन्त्य पनि मैं हुँ ।

मत्तः परतरं नान्यत्किञ्चिदस्ति धनञ्जय ! ।।
मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव ।।७।।

अरू केही छँदैछैन मभन्दा पर पाण्डव ।
धागोमा मणि झैं मैमा उनिएको छ यो सब ।।

हे धनञ्जय ! मभन्दा पर (श्रेष्ठ अरू केही छैन। जस्तो एक धागोमा सारा मणि उनिन्छन् , त्यस्तै यो सब चराचर जगत् म एउटामा नै गाँथिएको छ ।।

## आत्माबाट हुने सात्विकादिभाव -

रसोऽहमप्सु कौन्तेय! प्रभास्मि शशिसूर्ययोः ।।
प्रणवः सर्ववेदेषु शब्दः खे पौरुषं नृषु ।।८।।

---

१. जन्मस्थान र लयस्थान । २. सबैको । ३. अविनाशी ।

रसहूँ जलमा, कान्ति चन्द्र-सूर्य-विषे महुँ।
ॐ वेदमा, [१]खमा शब्द, [२]नरमा [३]पुरुषार्थ हुँ ।।

हे कौन्तेय! जलमा रस मैं हुँ, चन्द्र-सूर्यको प्रभा मैं हुँ, सब वेदमा प्रणव अर्थात् ॐकार मैं हुँ, आकाशमा शब्द मैं हुँ, र सब पुरुषको पौरुषत्व (पौरख) पनि मैं हुँ ।

पुण्यो गन्धः पृथिव्यां च तेजश्चास्मि विभावसौ ।।
जीवनं सर्वभूतेषु तपश्चास्मि तपस्विषु ।।९।।

[४]पुण्य-गन्ध म पृथ्वीमा, अग्निमा तेजनै म हुँ ।
प्राणीमा जीवनै मैं हुँ, तपस्वीमा तपै म हुँ ।।

पृथ्वीमा पुण्यगन्ध अर्थात् सुगन्ध मै हूँ, अग्निको तेज मैं हुँ, सब प्राणीको जीवनशक्ति र तपस्वीको तप पनि मै हुँ ।।

बीजं मां सर्वभूतानां विद्धि पार्थ! सनातनम् ।।
बुद्धिर्बुद्धिमतामस्मि तेजस्तेजस्विनामहम् ।।१०।।

संपूर्ण [५]भूतको जाँन मै सनातन [६]बीज हुँ ।
बुद्धिमान्‌को म हूँ बुद्धि, तेजस्वीको म तेज हुँ ।।

हे पार्थ ! मलाई सब प्राणीको सनातन बीज संझ, बुद्धिमान्‌हरूको बुद्धि र तेजस्वीहरूको तेज पनि मलाई नै जान ।।

बलं बलवताचाहं कामरागविवर्जितम् ।। ।।
धर्माविरूद्धो भूतेषु कामोऽस्मि भरतर्षभ ! ।।११।।

---

१. आकाशमा । २. मानिसमा । ३. पौरख । ४. सुवासना । ५. प्राणीको । ६. आदिकारण ।

बलवान्‌को बलै मै छु [1]काम-राग-विवर्जित ।
धर्म पूर्वकको [2]काम प्रणीको मै छु भारत ।।

कामवासना र राग अर्थात् विषयासक्ति यी दुइलाई छोडेर, बलवान्‌हरूको बल पनि मै हुँ, हे भरतश्रेष्ठ ! प्राणीहरूमा धर्मको विरूद्ध नजाने कामदेव पनि मै हुँ ।।

ये चैव सात्विका भावा राजसास्तामसाश्च ये ।।
मत्त एवेति तान्विद्धि न त्वहं तेषु ते मयि ।।१२।।

मैबाट सब निस्कन्छन् [3]सात्विकादि [4]पदार्थ ती,
म तिनमा कहिल्यै छैन, ममा छ तिनको [5]स्थिति ।।

यो पनि संझ कि, जो कुछ सात्विक, राजस वा तामस भाव अर्थात् पदार्थहरू छन् , ती मवाटै भएका हुन् ; परन्तु ती ममा छन् , म तिनमा छैन ।।

## आत्माकोशरण ले माया बाट छुट्कारा-

त्रिभिर्गुणमयैर्भावैरेभिः सर्वमिदं जगत् ।।
मोहितं नाभिजानाति मामेभ्यः परमव्ययम् ।।१३।।

त्रिगुणी [6]भावले मोह पारेको [7]लोक अर्जुन ।
बुझ्दैन [8]गुणातीत मेरो [9]अव्ययताकन ।

सत्व, रज, तम यी त्रिगुणी-भाव (पदार्थ) ले मोहित भएर, सारा

---

१. कामवासना र विषयप्रेमले रहित । २. कामदेव । ३. सात्विक-राजस-तामस । ४. चीज । ५. रहनु । ६. पदार्थले । ७. दुनियाँ । ८. गुणभन्दा पर रहेको । ९. अविनाशी पनालाई ।

लोक, यीभन्दा पर रहेको अर्थात् निर्गुण म अव्यय (अविनाशी) परमेश्वरलाई जान्न सक्दैन ।।

दैवी ह्येषा गुणमयी मम माया दुरत्यया ।।
मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते ।।१४।।

**[1]दैवी [2]गुणमयी मेरी यो माया छ [3]दुरत्यय ।**
**मेरै शरण जो पर्छन् माया तर्छन्ति निश्चय ।।**

मेरी यो गुणात्मक र दिव्य मायाबाट पार हुनलाई मुश्किल छ, यस कारण यो मायालाई तिनै पुरुषले पार गरेर जान्छन् , जो मेरो नै शरणमा आउँदछन् ।।

न मां दुष्कृतिनो मूढाः प्रपद्यन्ते नराधमाः ।।
माययाऽपहृतज्ञाना आसुरं भावमाश्रिताः ।।१५।।

**मायाले ज्ञान नासेका, पापी, मूर्ख, [4]नराधम ।**
**मेरो शरण पर्दैनन् [5]भाव ली दैत्यकै सम ।।**

मायाले जसको ज्ञान नाश गरिदिएको छ, यस्ता मूढ र दुष्कर्मी नराधमहरू आसुरी (राक्षसी) बुद्धिको अवलम्बन गरेर मेरो शरणमा आउँदैनन् ।।

चारभक्त मा ज्ञानी श्रेष्ठछ-

चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन ! ।।
आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ ! ।।१६।।

**रोगी, [6]जिज्ञासु [7]अर्थार्थी, [8]ज्ञानी हे पार्थ ! जौन छन् ।**
**यी चार थरि पुण्यात्मा मेरो भजन गर्दछन् ।।**

---

१. दिव्य । २. गुणस्वरूप । ३. दुर्लङ्घ्य । ४. मानिसमा अधम । ५. अभिप्राय । ६. ज्ञान चाहने । ७. धन चाहने । ८. ईश्वरबाहेक अरू केही मनमा नराख्ने ।

हे भरतश्रेष्ठ, अर्जुन ! (१) रोगले पीडित, (२) ज्ञानप्राप्तिको इच्छा गर्ने, (३) द्रव्य आदि काम्यवासनालाई मनमा राख्ने, (४) परमेश्वरको ज्ञान पाएर फेरि केही प्राप्त गर्नुपर्ने छैन तापनि निष्कामबुद्धिले भक्ति गर्ने यी ४ प्रकार पुण्यवान्हरू मेरो भक्ति गरिरहन्छन् ।।

तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते ।।
प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः ।।१७।।

**[1]अनन्यभक्त [2]युक्तात्मा, ज्ञानी तिन्मा [3]विशिष्ट छ ।**
**त्यस्को म हद्द प्यारो छु मेरो त्यो प्रिय हद्द छ ।।**

यी चारका मध्यमा अनन्यभाव (मबाहेक अरू केही चिन्तन नगर्नु) ले मेरो भक्ति गर्ने र निष्काम बुद्धिले रहने ज्ञानीको योग्यता विशेष छ । किनभने, ज्ञानीको म अत्यन्तै प्यारो छु, मेरो ज्ञानी पनि अत्यन्तै प्यारो छ ।।

उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम ।।
आस्थितः स हि युक्तात्मा मामेवानुत्तमां गतिम् ।।१८।।

**भले हुन् सब यी किन्तु ज्ञानी मेरो स्वरूप हो ।**
**सर्वोच्च-गति मैमा त्यो युक्तात्मा भै सदा रह्यो ।।**

यी सबैभक्त उदार अर्थात् असलै हुन् , परन्तु मेरो मत छ कि तिनमा ज्ञानी ता मेरो आत्मा नै हो, किनभने सब भन्दा उत्तमोत्तम, गतिस्वरूप, भलाई नै त्यसले ठहराएको हुन्छ ।।

बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते ।।
वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः ।।१९।।

---

१. निष्कामभक्ति गर्ने । २. उच्चश्रेणीको । ३. सबभन्दा उत्तम गतिस्वरूप ।

धेरै जन्म पछी सारा [1]बासुदेव-स्वरूप छ ।
ज्ञानी, पुग्छ ममा योगी, त्यो [2]महात्मा छ दुर्लभ ।।

अनेकौं जन्म भएपछि अनुभव हुनाले 'जो कुछ छ, त्यो सब वासुदेव (परमेश्वरको स्वरूप) हो' भन्ने जानी, ज्ञानवान्ले मलाई पहिचान्दछ, यस्तो महात्मा हुनु अत्यन्त दुर्लभ छ ।।

सबफल आत्मानै दिन्छ ।।

कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः ।।
तं तं नियममास्थाय प्रकृत्या नियताः स्वया ।।२०।।

आफ्ना प्रकृतिले [3]बन्ध, [4]कामनाले [5]हताशय ।
मूर्ख लाखौं नियम ली गर्छन् [6]अन्य-सुराश्रय ।।

आफ्नो आफ्नो प्रकृतिको नियमानुसार भिन्न-भिन्न स्वर्गादि फलका कामवासनाले पागल जस्ता भएका मानिसहरू, अलग अलग उपासनाका नियम पालन गर्दै, अरू अरू देवताको सेवा गर्दछन् ।।

यो यो यां यां तनुं भक्तः श्रद्धयाऽर्चितुमिच्छति ।।
तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम् ।।२१।।

श्रद्धाले भक्त जो जस्तो [7]मूर्ति चाहन्छ पूजन ।
त्यसको [8]निश्चल त्यो श्रद्धा पुऱ्याईदिन्छु, अर्जुन ! ।।

जुन भक्त, जुन जुन रूपको अर्थात् मूर्तिको श्रद्धाले उपासना (पूजा) गर्न चाहन्छ, त्यसको त्यही श्रद्धालाई म स्थिर गराइदिन्छु ।।

---

१. परमेश्वर स्वरूप नै रहेछ । २. मन वश गरी आत्मा पहिचान्ने । ३. बाँधिएका । ४. फलेच्छारूप बासनाले । ५. मन बिग्रेका । ६. अरू देवताको सेवा । ७. स्वरूप । ८. अटल ।

स तया श्रद्धया युक्तस्तस्याराधनमीहते ।
लभते च ततः कामान्मयैव विहितान्हि तान ।।२२।।

त्यही श्रद्धा लिई जस्ले त्यस्को पूजन गर्दछ ।
त्यो [1]त्यसैबाट मैले नै दिएका फल पाउँछ ।।

अनि त्यही श्रद्धाले युक्त भएर, त्यो पुरूष उही मूर्तिको आराधना गर्न लाग्दछ र त्यसलाई मैले नै कल्पना गरिएका कामफल अर्थात् इच्छामाफिकका फल प्राप्त हुन्छन् ।।

अन्तवत्तु फलं तेषां तद्भवत्यल्पमेधसाम् ।।
देवान्देवयजो यान्ति मद्भक्ता यान्ति मामपि ।।२३।।

ती [2]अल्पबुद्धिको हुन्छ नासिने त्यो [3]फलादिक ।
देवैमा देवको भक्त मिल्छन् [4]मद्भक्त मैसँग ।।

परन्तु, यी अल्पबुद्धिहरूले पाइने फलहरू नाशवान् छन् अर्थात् मोक्ष सरहमा हुँदैनन्, किनभने देवतालाई भज्नेहरू उनैकहाँ (स्वर्गलोकमा) जान्छन् , औ मेरा भक्त मैं कहाँ (मोक्षमा) आइपुग्छन् ।।

मायाहटेमा आत्मस्वरूप जानिन्छ-

अव्यक्तं व्यक्तिमापन्नं मन्यन्ते मामबुद्धयः ।।
परं भावमजानन्तो ममाव्ययमनुत्तमम् ।।२४।।

मेरो [5]अव्यक्त सर्वोच्च नजानी [6]भाव अव्यय ।
मलाई [7]व्यक्त हो भन्ने ठान्छन् मन्द [8]दुराशय ।।

---

१. कामबाट । २. फल चिताउने बुद्धि भएको । ३. मोक्षरूप फल। ४. निष्काम कर्म गर्ने मेरो भक्त । ५. सितिमिति जान्न नसकिने । ६. रूप । ७. सहजै पाउन सकिने । ८. निर्बुद्धि

अल्पबुद्धि अर्थात् मूर्खहरू मेरो श्रेष्ठ, उत्तमोत्तम र कहिल्यै ननासिने भाव (रूप) लाई नजानेर, म अव्यक्तलाई व्यक्त भएको भन्ने ठान्दछन् ।।

नाहं प्रकाशः सर्वस्य योगमायासमावृतः ।।
मूढोऽयं नाभिजानाति लोको मामजमव्ययम् ।।२५।।

**ढाकिंदा [१]योगमायाले सबैले [२]दृश्य छैन म ।**
**पुग्दैन [३]अज, [४]नित्यात्मा ममा [५]दुर्बुद्धिको [६]गम ।।**

म आफ्नो योगरूप मायाले ढाकिएर रहन्छु, अतः सबैलाई झट्टै आफ्नो स्वरूपले देखिले हुन्न 'म अज (नजन्मने) र अव्यय, अर्थात् कहिल्यै ननासिने हुँ' यस्तो मूर्खहरू जान्दैनन् ।।

वेदाहं समतीतानि वर्तमानानि चार्जुन ! ।।
भविष्याणि च भूतानि मां तु वेद न कश्चन ।।२६।।

**प्राणीहरू भएका र भैरहेका, हुने पनि ।**
**जान्दछू म, मलाई ता छैन जान्ने कुनै पनि ।।**

हे अर्जुन ! भूत, वर्तमान, भविष्य (भइसकेको, भइरहेको, पछि हुने) सब प्राणीलाई म जान्दछु, परन्तु मलाई कोही पनि जान्दैन ।।

इच्छाद्वेषसमुत्थेन द्वन्द्वमोहेन भारत ! ।।
सर्वभूतानि संमोहं सर्गे यान्ति परन्तप ! ।।२७।।

---

१. योगशक्तिले । २. देखिने । ३. नजन्मने । ४. अविनाशी स्वरुप। ५. काम बुद्धि भएको । ६. विचार ।

[१]द्वन्द्वमोह [२]उठेको छ [३]कामना द्वेषले गरी ।
त्यसैले सृष्टिमा प्राणी रल्लिंदा छन् सबै थरी ।।

किनभने, हे शत्रुलाई ताप दिलाउने, भरतवंशी वीर ! इन्द्रियहरूका इच्छा र द्वेषबाट उब्जने, सुख-दुःख आदि द्वन्द्वका मोहले यस सृष्टिमा सारा प्राणीहरू भ्रममा फसेकाछन् ।।

येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम् ।।
ते द्वन्द्वमोहनिर्मुक्ता भजन्ते मां दृढव्रताः ।।२८।।

नासियो जुन [४]धर्मात्मा जनको [५]पापसंहति ।
द्वन्द्वमोह छुटेका ती ममा हुन्छन् [६]दृढव्रती ।।

परन्तु, जुन पुण्यात्माहरूका पापको नाश भएको छ, तिनी सुख-दुःख आदि द्वन्द्वका मोहबाट छुटेर दृढ भई मेरो भक्ति गर्दछन् !

ब्रह्म जान्नाले अन्त्यमा ज्ञानसिद्धि-

जरामरणमोक्षाय मामाश्रित्य यतन्ति ये ।।
ते ब्रह्म तद्विदुः कृत्स्नमध्यात्मं कर्म चाखिलम् ।।२९।।

जो [७]जरा-मृत्यु-नाशार्थ [८]मद्व्रती [९]यत्न गर्दछन् ।
तिन्ले त्यो 'ब्रह्म' वा 'कर्म' 'अध्यात्म' सब जान्दछन् ।।

---

१. लाभालाभको भ्रम । २. उत्पन्न भएको। ३. कामक्रोधले । ४. शुभकर्म गर्ने । ५. पापको समुदाय । ६. दृढव्रत गर्नेहरू । ७. बुढ्यौंली र मृत्युको नाशकानिंति । ८. मेरो भक्ति लिने हरू। ९. कोशिश ।

यस प्रकारसँग, जो मेरो आश्रय गरेर, जरामरण अर्थात् पुनर्जन्मको चक्करवाट छुट्नाको प्रयत्न गर्दछन् , तिनले त्यो 'ब्रह्म' आध्यात्म' र 'कर्म पनि जान्दछन् ।।

साधिभूताधिदैवं मां साधियज्ञं च ये विदुः ।।
प्रयाणकालेऽपि च मां ते विदुर्युक्तचेतसः ।।३०।।

**मै 'साधिभूत,' मै 'साधि-यज्ञ,' मै 'साधिदैवत,'**
**जान्ने [1]सुयोगी संझन्छन् मलाई [2]अन्त्यमा [3]स्वतः ।।**

अनि 'अधिमूत,' 'अधिदैवत्' र 'अधियज्ञ' ले सहित मलाई नै जान्दछन् , ती युक्तचित्त योगीले मरणकालमा पनि मलाई नै संझन्छन् ! (३१०)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'ज्ञानविज्ञानयोगो' नाम
सप्तमोऽध्यायः ।।७।।

इति नेपालीभाषामा कोमलगीता 'ज्ञानविज्ञानयोग'
सप्तम अध्याय समाप्त ।।७।।



---

१. परमात्मामा दृढ चित्त भैसकेकाहरू । २. मर्ने बेलामा । ३. आफसे आप ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### अक्षरब्रह्म-योग ८

### ब्रह्म आदि प्रश्नको उत्तर-

अर्जुन उवाच-

किं तद्ब्रह्म किमध्यात्मं किं कर्म पुरूषोत्तम ! ।।
अधिभूतं च किं प्रोक्तमधिदैवं किमुच्यते ।।१।।

कुन हो 'ब्रह्म' ? 'अध्यात्म' कुन हो ? 'कर्म' हो कुन?
'अधिभूत' अनि त्यस्तै 'अधिदैव पनी कुन?

अर्जुनले सोधे-हे पुरूषोत्तम ! त्यो ब्रह्म भनेको के हो ! अध्यात्म के हो ? कर्मको माने के हो ? अधिभूत केलाई भन्नुपर्दछ ? औ अधिदैव कसलाई भन्दछन् ? ।।

अधियज्ञः कथं कोऽऽत्र देहेऽस्मिन्मधुसूदन ! ।।
प्रयाणकाले च कथं ज्ञेयोऽसि नियतात्मभिः ।।२।।

'अधियज्ञ' छ को? कृष्ण ! देहमा बस्छ के गरी ?
अन्त्यमा चित्त रोकेले जानिने प्रभु के गरी ?

हे मधुसूदन ! अधियज्ञ कस्तो छ? यस देहमा रहने अधिदेह कुन हो? अन्त्यकालमा इन्द्रिय निग्रह गर्ने पुरूषहरूले तपाईलाई कसरी पहिचान गर्दछन् ।

श्रीभगवानुवाच-

अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते ।।
भूतभावोद्भवकरो विसर्गः कर्मसंज्ञितः ।।३।।

[1]अक्षय्य तत्त्व नै 'ब्रह्म' हो, 'अध्यात्म' [2]स्वभाव हो ।
[3]भूत-प्रपञ्च-विस्तारी, [4]बिसर्गै मुख्य 'कर्म' हो ।।

भगवान्ले भन्नुभयो-सब भन्दा श्रेष्ठ, अक्षर अर्थात् कहिल्यै ननासिने तत्त्व 'ब्रह्म' हो; प्रत्येक वस्तुको मूलभाव (स्वभाव) अध्यात्म' भनिन्छ, अक्षर ब्रह्मबाट भूत मात्रा आदि चराचर पदार्थलाई उत्पत्ति गर्ने, सृष्टि-व्यापारलाई 'कर्म' भनेर बताउँछन् ।।

अधिभूतं क्षरो भावः पुरूषश्चाधिदैवतम् ।।
अधियज्ञोऽहमेवात्र देहे देहभृतां वर ।।४।।

'अधिभूत' [5]विनाशी हो 'अजिदैवत'[6]पूरूष ।
[7]'अधियज्ञ' पनि मै हुँ यो[8]देह-बिच भारत ।।

उत्पन्न भएका सब प्राणीको नाम रूपात्मक, नाशवान्, स्थिति अधिभूत' हो, औ यस पदार्थमा जो पुरूष अर्थात् सचेतन अधिष्ठाता छ, त्यही 'अधिदैवत' हो, जसलाई 'अधियज्ञ' अर्थात् सब यज्ञको अधिपति भन्दछन्, त्यो मै हुँ । हे देहधारीमा श्रेष्ठ, अर्जुन ! यस देहमा रहने अधिदेह पनि मै हुँ ।।

अन्त्यकालमा जे संझ्यो उहीहुन्छ-

अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम् ।।
यः प्रयाति स मद्भावं याति नास्त्यत्र संशयः ।।५।।

जस्ले संझेर मैलाई [9]अन्त्यमा देह छोड्दछ ।
सन्देह छैन, त्यो मैमा [10]मुक्त भै मिल्न आउँछ ।।

---

१. अविनाशी । २. मुलप्रकृति । ३. चराचर फैलाउने । ४. सृष्टि व्यापार । ५. नाश हुने जाति । ६. प्राण पुरुष । ७. यज्ञको स्वामी । ८. अधि देह छु । ९. मरने-समयमा । १०. जन्ममरणबाट छुटेको ।

अन्त्यकालमा आर्थात् मरणकालमा जसले मेरो स्मरण गर्दै देह त्याग्दछ, त्यो पुरूष मेरै स्वरूपमा नै आएर मिल्दछ, यसमा सन्देह छैन ।।

यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम् ।।
तं तमेवैति कौन्तेय ! सदा तद्भावभावित: ।।६।।

प्राणी जो [1]भाव संझेर अन्त्यमा देह छोड्दछ ।
त्यै [2]भाववश भै फेरि त्यै त्यैमा मिल्न पुग्दछ ।।

अथवा, हे कौन्तेय ! सधैं अर्थात् जन्मभर त्यसैमा रँगिएको हुँदा मनुष्य जुन भावको (पदार्थ) स्मरण गर्दै अन्त्यकालमा शरीर त्याग्दछ, त्यही भावनामा मिल्न जान्छ ।।

तस्मात्सर्वेषु कालेषु मामनुस्मर युद्ध्य च ।।
मय्यर्पितमनोबुद्धिर्ममिवैष्यस्यसंशयम् ।।७।।

तसर्थ संझी मैलाई सदा, युद्ध पनी गर ।
मन बुद्धि ममा [3]अर्पे मैमा मिल्छौ सरासर ।।

यस निमित्त, सर्बदा मलाई नै संझँदै रहू । र युद्ध पनि गर, ममा मन र बुद्धि अर्पण गर्नाले युद्ध गरे पनि तिमि अवश्यमेव ममा नै आएर मिल्नेछौ ।।

अभ्यासयोगयुक्तेन चेतसाऽनान्यगामिना ।।
परमं पुरूषं दिव्यं याति पार्थानुचिन्तयन् ।।८।।

अभ्यास-युक्त एकाग्र चित्तले दिव्य-पूरूष ।
संझँदा-संझँदै पुग्छ उसैमा भक्त पूरूष ।।

---

१. पदार्थ (चीज) ।२. अभिप्रायको अधीन । ३. अर्पण गरे ।

हे पार्थ ! चित्तलाई अर्कातर्फ जान नदिएर, अभ्यासको सहायताले उसलाई स्थिर गर्दै, दिव्य परम पुरूषको ध्यान गरिरहनाले मानिस उही दिव्य परमात्मपुरूषमा गएर मिल्दछ ।।

कविं पुराणमनुशासितार- मणोरणीयांसमनुस्मरेद्यः ।।
सर्वस्य धातारमचिन्त्यरूप-मादित्यवर्णं तमसः परस्तात् ।।९।।

[१]कवि, स्वयं [२]शासक, हद सानो ।
[३]अचिन्त्य, [४]धाता, सबको पुरानो,
परै रहेको [५]तमदेखि खास,
श्रीसूर्य झैं [६]पूर्णतर-प्रकाश-

सर्वज्ञ, पुरातन, शिक्षक, परमाणुभन्दा पनि सानो सबको पालक, या आधार अथवा कर्ता, अचिन्त्यरूप र अज्ञानरूपी अन्धकारदेखि पर रहेको, सूर्यसमान देदीप्यमान, (यस्तो परब्रह्म छ ।।)

प्रयाणकाले मनसाऽचलेन भक्त्यायुक्तो योगबलेन चैव ।।
भ्रुवोर्मध्ये प्राणमावेश्य सम्यक् स तं परं पुरूषमुपैति दिव्यम् ।।१०।।

जो भक्त यस्तो [७]विभुलाइ अन्त्यमा
लगाउँ दै निश्चलचित्त योगमा
[८]भ्रू-मध्यमा प्राण पुऱ्याइ संझला ।
त्यो, दिव्य त्यै ब्रह्म अवश्य पाउला ।।

---

१. सब ज्ञानले युक्त ।२. शिक्षा गर्ने ।३. मनले पनि चिन्तन गर्न नसकिने । ४. कर्ता र पालक । ५. अज्ञानबाट । ६. पूर्ण प्रकाश भएको। ७. व्यापक परमात्मालाई । ८. दुइ आँखभौंको माझमा ।

जुन मनुष्य, अन्त्यकालमा इन्द्रिय निग्रहरूपयोगको सामर्थ्यले युक्त भएर, मनलाई स्थिर गरी, दुबै आँखीभौंको बीचमा प्राणलाई ठीक किसिमसँग राखेर त्यही पुरूष (ब्रह्म) लाई स्मरण गर्दछ, त्यो मानिस त्यही दिव्य, परमपुरूषमा मिल्दछ ।

यदक्षरं वेदविदो वदन्ति
विशन्ति यद्यतयो वीतरागाः ।।
यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति
तत्ते पदं संग्रहेण प्रवक्ष्ये ।।११।।

[१]वेदज्ञले [२]अक्षर जो भनिन्छ ।
जस्मा विरागी मुनिले पुगिन्छ ।।
जो चाहँदा गर्दछन् ब्रह्मचर्य ।
भन्छू केही [३]पद त्यै वीरवर्य ।।

वेद जान्नेहरू जसलाई अक्षर (ननासिने) भन्दछन्, वैराग्ययुक्त यति (मुनि) हरू जसमा प्रवेश गर्दछन् र जसमा पुग्नाको इच्छाले ब्रह्मचर्य व्रतको आचरण गर्दछन् , त्यो पद अर्थात् ॐ कारब्रह्म तिमीलाई संक्षेपले वर्णन गर्दछु ।।

सर्वद्वाराणि संयम्य मनो हृदि निरूध्य च ।।
मूर्ध्न्याधायात्मनः प्राणमास्थितो योगधारणाम् ।।१२।।

सबै [४]द्वार गरी बन्द, रोकी हृदयमा मन ।
[५]प्राण [६]मस्तकमा राखी, योगको गरि धारण ।।

---

१. वेद जान्नेहरूले । २. सदा एक स्वरूपले रहने । ३. ॐकार ब्रह्मपद । ४. शरीरका नौछिद्र । ५. भित्री बाहिरी श्वास । ६. ब्रह्मरन्ध्रम ।

ॐ इत्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् ।
यः प्रयाति त्यजन्देहं स याति परमां गतिम् ।।१३।।

**ॐ यो एकाक्षरी ब्रह्म जप्दै, संझेर मैकन ।**
**जो देह छोड्छ, त्यो पुग्छ [१]कैवल्य-गति अर्जुन ।।**

सब इन्द्रियरूपी द्वारहरूलाई बन्द गरी, मनलाई हृदयमा रोकेर, मस्तकमा प्राण लगी समाधि योगमा रहेर अनि ॐ कारको जप र मेरो स्मरण गर्दै जो मनुष्य देह छोडेर जान्छ, त्यसलाई उत्तमगति (त्यही ब्रह्ममा मिल्नरूप मुक्ति) मिल्दछ ।।

## ब्रह्माका लोक तक अनित्यगति -

अनन्यचेता; सततं यो मां स्मरति नित्यशः ।।
तस्याहं सुलभः पार्थ ! नित्ययुक्तस्य योगिनः ।।१४।।

**एकाग्र भई जो मेरो सधैं गर्दछ चिन्तन ।**
**त्यो [२]नित्य-युक्त, योगीको [३]सुलभै छु म, अर्जुन ! ।।**

हे पार्थ ! अनन्यभावले जो सदासर्वदा मेरो नित्य स्मरण गर्दछ त्यस नित्ययुक्त कर्मयोगीलाई ममा पुग्नु सहजै हुन सक्दछ ।।

मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्वतम् ।।
नाप्नुवन्ति महात्मानः संसिद्धिं परमां गताः ।।१५।।

**ममा पुगी ठुला सिद्धि पाएका जुन [४]धीर छन् ।**
**अनित्य, दुःखको स्थान, पुनजन्म ति छोड्दछन् ।।**

---

१. मोक्षपदमा । २. अविनाशी तत्वमा मन दृढ गरी कर्म गर्ने । ३. सहजै पाइन सकिने । ४. ज्ञानीहरू ।

ममा मिलेपछि परमसिद्धि पाएका महात्माहरू पुनर्जन्म पाउँदैनन् जो दुःखहरूको मुख्य घर र अनित्य पनि छ ।।

आब्रह्मभुवनाल्लोकाः पुनरावर्तिनोऽर्जुनः ।। ।।
मामुपेत्य तु कौन्तेय! पुनर्जन्म न विद्यते ।।१६।। ।।

छन् ब्रह्मलोक-पर्यन्त फर्कने-परने सब ।
ममा पुगेपछि हुन्छ पुनर्जन्म असंभव ।।

हे अर्जुन ! ब्रह्मलोक लगायत स्वर्गलोक आदि जति लोक छन् , त्यहाँबाट कहिले न कहिले यस लोकमा फर्केर आउनुपर्दछ, परन्तु, हे कौन्तेय ! ममा मिल्न गएमा पुनर्जन्म हुँदै हुँदैन ।।

ब्रह्माका दिनमा सृष्टि रातमालय-

सहस्रयुगपर्यन्तमहर्यद्ब्रह्मणो विदुः ।।
रात्रिं युगसहस्रान्तां तेऽहोरात्रविदो जनाः ।।१७।।

हजार हजार युगका ब्रह्माका [1]दिन-रात छन् ।
भनी जो जान्दछन् विद्वान् ती [2]अहोरात्र जान्दछन् ।।

अहोरात्रलाई तत्त्वपूर्वक जान्नेहरू भन्दछन् कि, सत्य, त्रेता, द्वापर, कलि यी ४ युगको एक महायुग हुन्छ, यस्तै हजार महायुगको काल ब्रह्माजीको एक दिन र यत्तिकै कालले उनको एक रात्री पनि हुन्छ ।।

अव्यक्ताद्व्यक्तयः सर्वाः प्रभवन्त्यहरागमे ।।
रात्र्यागमे प्रलीयन्ते तत्रैवाव्यक्तसंज्ञके ।।१८।।

---

१. एक अहोरात्र । २. दिन र रात ।

[१]अव्यक्तबाट यी [२]व्यक्ति [३]दिनमा जन्म पाउँछन् ।
त्यही अव्यक्तमा फेरि [४]रातमा ती [५]बिलाउँछन् ।।

ब्रह्माजीका दिनको आरंभमा अव्यक्तबाट (प्रकृतिबाट) सब व्यक्त पदार्थ निर्मित (सृष्टि) हुन्छन् र रात्री भएमा त्यही पूर्वोक्त अव्यक्तमा लीन (प्रलय) हुन्छन् ।।

भूतग्रामः स एवायं भूत्वा भूत्वा प्रलीयते ।।
रात्र्यागमेऽवशः पार्थ ? प्रभवत्यहरागमे ।।१९।।

[६]प्राणि-प्रपंच यो तेही निस्की निस्की सगौरव ।
नासिन्छ राति [७]लाचार, [८]देखिन्छ दिनमा सब ।।

हे पार्थ ! भूत (प्राणी) को यही समुदाय कसरी बारंबार उत्पन्न हुँदै रहन्छ, अर्थात् इच्छा होस् या नहोसु, रात हुनासाथ लीन (प्रलय) हुन्छर दिन हुनासाथ फेरि जन्म (सृष्टि) हुन्छ ।।

भक्तिले अव्यक्त तत्वको ज्ञान -

परस्तस्मात्तु भावोऽन्योऽव्यक्तोऽव्यक्तात्सनातनः ।।
यः स सर्वेषु भूतेषु नश्यत्सु न विनश्यति ।।२०।।

अव्यक्तभन्दा पर जो [९]पदार्थ छ सनातन ।
त्यो नासिन्न, कबै प्राणी नासिंदा पनि अर्जुन ! ।।

परन्तु, यो माथि बताइएको अव्यक्तभन्दा पर रहेको, अर्को

---

१. जान्न नसकिने प्रकृतिबाट । २. हेरिने चीज जति ३. ब्रह्माको दिनमा । ४. ब्रह्माको रातमा । ५. लीन हुन्छन् । ६. प्राणीको सृष्टि । ७. प्रकृतिको वश । ८. प्रकट हुन्छ । ९. प्रकृतिभन्दा पर रहेको अविनाशी परमात्मा ।

सनातन 'अव्यक्त' पदार्थ छ, जो कि, सारा चराचर नै नासिएमा पनि नष्ट हुँदैन।

अव्यक्तोऽक्षर इत्युक्तस्तमाहुः परमां गतिम् ।।
यं प्राप्य न निवर्तन्ते तद्धाम परमं मम ।।२१।।

**अव्यक्त जो [१]अक्षर हो, जो परंगति-नाम हो ।**
**जहाँ पुगी फर्कदैनन् त्यो मेरो उच्च [२]धाम हो ।।**

जुन अव्यक्तलाई 'अक्षर' पनि भन्छन् , जो परम गति पनि कहिन्छ र जसलाई प्राप्त गरेपछि जन्म लिनालाई फेरि फर्केर आउनुपर्दैन, त्यही मेरो परम स्थान हो ।।

पुरूषः स परः पार्थ ! भक्तया लभ्यस्त्वनन्यया ।।
यस्यान्तः स्थानि भूतानि येन सर्वमिदं ततम् ।।२२।।

**त्यो [३]परात्मा त एकाग्र भक्तिले मात्र मिल्दछ ।**
**जोभित्र सारा प्राणी छन् जस्ले यो सब व्याप्त छ ।।**

हे पार्थ ! जसभित्र सारा भूतहरू छन् , जसले यो सारालाई फैलाएको या व्याप्त गरिराखेको छ, त्यो परपुरूष (परब्रह्म) अनन्य भक्ति अर्थात् एकाग्रभक्तिले मात्र पाउन सकिन्छ ।।

## शुक्लरकृष्णमार्ग -

यत्र काले त्वनावृत्तिमावृत्तिं चैव योगिनः ।।
प्रयाता यान्ति तं कालं वक्ष्यामि भरतर्षभ ।।२३।।

**त्यो काल भन्छु अहिले जस्मा योगीहरू भरी ।**
**यहाँ जन्मन आउन्नन् अथवा आउँछन् झरी ।।**

---

१. कहिल्यै ननासिने । २. स्थान । ३. सबभन्दा पर रहेको ब्रह्म ।

हे भरतश्रेष्ट ! अब म तिमीलाई त्यो काल बताउँछु कि, जुन कालमा कर्मयोगीहरू मरे भनें, यस लोकमा जन्मलिन फर्केर आउँदैनन् र जुन कालमा मरण हुँदा जन्म लिन फर्केर आउँदछन् ।।

अग्निर्ज्योतिरहः शुल्कः षण्मासा उत्तरायणम् ।।
तत्र प्रयाता गच्छन्ति ब्रह्म ब्रह्मविदो जनाः ।।२४।।

**आगो, [१]ज्वाला, [२]शुक्ल, दिन, [३]छ-मैह्ना, उत्तरायण-**
**यिन्मा गएका [४]ब्रह्मज्ञ, पुग्छन् ब्रह्म [५]सनातन ।।**

अग्नि, ज्योति अर्थात् ज्वाला, दिन, शुक्ल पक्ष र उत्तरायणका छ-महिमाना गएका (मरेका) ब्रह्मवेत्ताहरू ब्रह्ममा पुग्छन् र फर्केर आउँदैनन् ।।

धूमो रात्रिस्तथा कुष्णः षण्मासः दक्षिणायनम् ।।
तत्र चान्द्रमसं ज्योतिर्योगी प्राप्य निवर्तते ।।२५।।

**धूवाँ, रात्री, कृष्ण-पक्ष, छ-मैह्ना, [६]दक्षिणायन-**
**यिन्मा गई चन्द्रलोक पुगी आउछ जन्मन ।।**

धुमिएको आगो, रात्री, कृष्णपक्ष र दक्षिणायनको छ महीनमा गएको (मरेको) कर्मयोगी चन्द्रका तेजमा अर्थात् लोकमा पुगेर पुण्यको अंश सकिए यछि फर्केर यहाँ जन्म लिन आउँदछ ।।

शुक्लकृष्णे गती ह्येते जगतः शाश्वते मते ।।
एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः ।।२६।।

---

१. प्रकाश । २. शुक्लपक्ष । ३. माघ आदि छ महीना । ४. ब्रह्मज्ञानी । ५. अविनाशी । ६. श्रावण आदि छ महीना ।

[1]शुक्ल [2]कृष्ण दुवै मार्ग जगत्का छन् [3]सनातन ।
यौटा फर्कन पर्दैन, अर्कोले पर्छ फर्कन ।।

यस प्रकारले जगत्का शुक्ल र कृष्ण अर्थात् प्रकाशमय र अन्धकारमय दुइ नित्यगति या स्थिर मार्ग छन्-एक बाटोबाट जानाले फर्कनुपर्दैन, अर्को बाटोबाट जानाले फर्कनुपर्दछ ।।

दुईमार्गको तत्वजानी कर्म गर्नू-

नैते सृती पार्थ ! जानन् योगी मुह्यति कश्चन ।।
तस्मात्सर्वेषु कालेषु योगयुक्तो भवाऽर्जुन? ।।२७।।

यी दुई गति जानेको योगी फस्दैन मोहमा ।
तस्मात् तिमि पनि योगी होऊ लौ सब कालमा ।

हे पार्थ ! यिनै दुइ मार्गलाई तत्वपूर्वक जान्ने कुनै पनि कर्मयोगी मोहमा फँस्दैन, अतएव, हे अर्जुन ! तिमी सदा सर्वदा कर्मयोगयुक्त होऊ ।।

वेदेषु यज्ञेषु तपस्सु चैव
दानेषु यत्पुण्यफलं प्रदिष्टम् ।।
अत्येति तत्सर्वमिदं विदित्वा
योगी परं स्थानमुपैति चाद्यम् ।।२८।।

---

१. देवयान वा अर्चिरादि मार्ग-यसमा मरेको देह अग्निमा जलाउनाले अग्निदेवबाटनै ती पूर्वोक्त नाम भएका मार्गको शुरू हुन्छ र योगी फेरि जन्म लिन आउँदैन । २. पितृयान वा धूम्र आदि मार्ग-यसमा मरेकाको देह पूर्वोक्त नाम हूँदै चन्द्रलोक तर्फ पुगेर पुण्य सिद्धियेपछि त्यसले फर्केर जन्म लिन आउनुपर्दछ । ३. नभई नछोड्ने ।

जाने पछी [1]यो, तप, यज्ञ, दान,
वेदादिमा जो छ [2]फल-प्रधान,
सोझै गरी लंघन त्यो तमाम।
[3]ब्रह्मज्ञले पाउँछ [4]आदि-धाम ।।

यो कहिएको तत्वलाई जानिलिनाले वेद, यज्ञ, तपस्या र दानहरूमा जो पुण्यफल बयान गरिएको छ, कर्मयोगीले ती सबलाई नाघेर तीमन्दा परको आद्य-स्थान (मुक्ति) लाई प्राप्त गर्दछ । (३३८)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'अक्षरब्रह्मयोगो' नाम
अष्टमोऽध्यायः ।।८।।

इति नेपालीभाषामा कोमलगीता 'अक्षरब्रह्मयोगोनाम'
अष्टम अध्याय समाप्त ।।८।।



१. पहिले कहिएको तत्व । २. मुख्य फल । ३. ब्रह्मवेत्ता कर्मजोगीले । ४. पहिला स्थान (मुक्ति) ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### राजविद्या-राजगुह्ययोग ९

ज्ञानविज्ञान भक्तिमार्ग राजमार्गहो-

श्रीभगवानुवाच-

इदं तु ते गुह्यतमं प्रवक्ष्याम्यनसूयवे ।।
ज्ञानं विज्ञानसहितं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ।।१।।

**विज्ञान-युक्त यो ज्ञान भन्छु जो [1]अतिगुह्य छ ।**
**[2]दोषदर्शी नभै जान, यस्ले पाप छुटाउँछ ।।**

भगवान्‌ले भन्नुभयो-अब तिमी दोषदर्शी भएका छैनौ, यसनिमित्त गुप्तभन्दा पनि गुप्त, विज्ञानले सहित ज्ञान तिमीलाई बताउँछु, जो जान्नाले पाप (मोह) बाट मुक्त हुनेछौ ।।

राजविद्या राजगुह्यं पवित्रमिदमुत्तमम् ।।
प्रत्यक्षावगमं धर्म्यं सुसुखं कर्तुमव्ययम् ।।२।।

**[3]विद्या र गुह्यको राजा यो श्रेष्ठ र पवित्र छ ।**
**[4]प्रत्यक्ष सुख-बोधादि दिने अक्षय्य धर्म छ ।।**

यो ज्ञान, संपूर्ण गुह्यहरूमा राजा (श्रेष्ठ) छ, यो राजविद्या

---

१. ज्यादा नै रहस्य । २. दोषदृष्टिले नहेर्ने । ३. जान्न लायक कुरा । ४. तत्कालैसामन्नेमा । ५. सुख र ज्ञान ।

अर्थात् सब विद्यामा श्रेष्ठ, पवित्र र प्रत्यक्ष बोध गराउने यस्तो छ, यसको आचरण सुखकारक, कहिल्यै ननासिने र धर्मयुक्तछ ।।

अश्रद्दधानाः पुरूषा धर्मस्याऽस्य परन्तप ! ।।
अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि ।।३।।

**हे पार्थ ! जसले श्रद्धा राख्तैनन् यस धर्ममा ।**
**ममाती नपुगी झर्छन् [१]मृत्यु-संसार-मार्गमा ।।**

हे परन्तप ! यसमा श्रद्धा नराख्ने पुरूषहरूले मलाई पाउन सक्दैनन् , तिनीहरू मर्नुपर्ने यस संसारका मार्गमा फर्केर आउँदछन् , अर्थात् तिनीलाई मोक्ष मिल्दैन ।।

## आत्माको योगसामर्थ्य-

मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना ।।
मत्स्थानि सर्वभूतानि न चाऽहं तेष्ववस्थितः ।।४।।

**अव्यक्तरूपी मैले नै यो जगत् [२]परिपूर्ण छ ।**
**ममा छन् यी सबै प्राणी, मा तिन्मा छैन [३]संस्थित ।।**

मैले आफ्नो अव्यक्तस्वरूपले यो समग्र जगत्लाई व्याप्त गरेको छु, ममा सब प्राणीहरू छन् , परन्तु म तिनीहरूमा रहेको छैन ।।

न चमत्स्थानि भूतानि पश्य मे योगमैश्वरम् ।।
भूतभृन्न च भूतस्थो ममाऽऽत्मा भूतभावनः ।।५।।

**छैनन् प्राणी ममा पार्थ ! हेर यो योग-[४]ऐश्वर ।**
**पैदा मै गर्छु , मै धर्छु, म छैन तिनमा तर ।।**

---

१. मृत्यु हुने यो संसारी मार्गमा । २. ढाकिएको । ३. रहेको । ४. यस्तो रहेछ भनी ठेगाना गर्न नसकिने ईश्वरीशक्ति ।

सब प्राणीहरू ममा रहेका पनि छैनन् ! हेर, ईश्वरको यो कस्तो चमत्कार या योगसामर्थ्य छ? प्राणीलाई उत्पन्न गर्ने भएको, मेरो आत्मा तिनीलाई पालन धारण गरेर पनि फेरि तिनैमा रहेको छैन ।।

यथाऽऽकाशस्थितो नित्यं वायुः सर्वत्रगो महान् ।।
तथा सर्वाणि भूतानि मत्स्थानीत्युपधारय ।।६।।

[१]सर्वत्र घुमने वायु जस्तो आकाशभित्र छ ।
त्यस्तै प्राणीहरू सारा ममा छन् बुझ्नुपर्दछ ।।

सर्वत्र घुम्ने, यो महान्, वायु जस्तै सधैं आकाशमा नै रहेको हुन्छ, त्यस्तै यी सब भूत-प्राणी ममा रहेका छन्, यस्तो तिमीले संझना राख ।।

## मायाबाट सृष्टिस्थितिलयः-

सर्वभूतानि कौन्तेय ! प्रकृतिं यान्ति मामिकाम् ।।
कल्पक्षये, पुनस्तानि कल्पादौ विसृजाम्यहम् ।।७।।

मेरै प्रकृतिमा प्राणी छिप्छन् [२]प्रलयकालमा ।
मै फेरि सिर्जना तिन्को गर्छु [३]कल्पादिकालमा ।।

हे कौन्तेय ! कल्पको अन्त्यमा (प्रलयकालमा) सब भूत (प्राणिसमुदाय) मेरै प्रकृतिमा आएर लीन हुन्छन् औ कल्पको आरम्भमा अर्थात् ब्रह्माका दिनको आरंभमा म नै फेरि तिनलाई उत्पन्न गर्दछु ।।

प्रकृतिं स्वामवष्टभ्य विसृजामि पुनः पुनः ।।
भूतग्राममिमं कृत्स्नमवशं प्रकृतेर्वशात् ।।८।।

मेरी प्रकृतिको [४]वश्य यो सम्पूर्ण चराचर ।
उसैलाई लिई साथ सृष्टि गर्छु बराबर ।।

---

१. जतातते । २. ब्रह्माको रात्रीमा । ३. ब्रह्माको दिनभरमा । ४. अधीन भएको ।

म आफ्नो प्रकृतिलाई हात लिएर, आफ्ना आफ्ना कर्महरूले बाँधियेका प्राणीको यो समग्र समुदायलाई बराबर निर्माण गर्दछु जो कि, त्यही प्रकृतिको कब्जामा रहेको हुनाले पराधीन छ।

न च मां तानि कर्माणि निबध्नन्ति धनञ्जय! ।।
उदासीनवदासीनमसक्तं तेषु कर्मसु ।।९।।

[१]उदासीन सरी बस्छु, तिन्मा आसक्ति गर्दिन ।
त्यसैले कर्म ती पार्थ! हुन्नन मकन बन्धन ।।

परन्तु, हे धनञ्जय! यो सृष्टि रचना गर्ने कामना मेरो आसक्ति छैन, म उदासीन (भए नभएमा समान) यस्तो भइरहेको छु, यसै कारण ती कर्महरू मलाई बन्धन गर्ने हुँदैनन् ।।

मयाध्यक्षेण प्रकृतिः सूयते स चराचरम ।।
हेतुनानेन कौन्तेय! जगद्विपरिवर्तते।।१०।।

गर्छे प्रकृतिले सृष्टि मै [२]अध्यक्ष लिईकन ।
यसैले यो जगत्को छ सदा [३]संहार-सिर्जन ।।

म अध्यक्ष अर्थात् मालिक भएर प्रकृतिबाट सारा चराचरको सृष्टिलाई उत्पन्न गराउँछु, यसैले हे कौन्तेय! यो जगत्को बन्नु र भत्कनु बराबर नै भइरहेको छ ।।

## ईश्वरको निन्दागर्ने आसुरी प्रकृतिका-

अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम् ।।
परं भावमजानन्तो मम भूतमहेश्वरम् ।।११।।

---

१. समभाव राख्ने । २. ठूलो मालिक । ३. नाश र उत्पत्ति ।

[१]महेश-भाव यो मेरो सर्वोच्च नबुझीकन ।
मानिसै हो भनी मूर्ख गर्दछन् [२]अपहेलन ।।

मूढहरू मेरो परम (उत्तम) स्वरूपलाई पहिचान्दैनन्, जो कि सब प्राणीको महान् ईश्वर छ, तिनि मलाई मनुष्यको शरीर धारण गर्ने अर्थात् मनुष्य संझेर मेरो अपहेलन गर्दछन् ।।

मोघाशा मोघकर्माणो मोघज्ञाना विचेतसः ।।
राक्षसीमासुरीं चैव प्रकृतिंमोहिनी सृताः ।।१२।।

ती मूढ जनका आशा, ज्ञान, कर्म फजूल छन् ।
[३]मोह गर्ने, राक्षसी र [४]आसुरी-भाव धर्दछन् ।।

तिनको आशा व्यर्थ छ, कर्म फजूल छ, ज्ञान निरर्थक छ, औ चित्त पनि भ्रम छ, जो मोहात्मक राक्षसी र आसुरी स्वभावको सदा आश्रय गरिरहन्छन् ।।

ज्ञानयज्ञले भज्ने दैवीप्रकृतिका-

महात्मानस्तु मां पार्थ ! दैवीं प्रकृतिमाश्रिताः ।।
भजन्त्यनन्यमनसो ज्ञात्वा भूतादिमव्ययम् ।।१३।।

[५]दैवी प्रकृतिका धीर महात्माहरू मैकन ।
[६]आद्य, [७]अव्यय संझेर भज्छन [८]एकत्व लीकन ।।

परन्तु, हे पार्थ ! दैवी प्रकृतिको आश्रय गर्ने, महात्माहरू कहिल्यै पनि नमासिने, सब प्राणीको आदिस्थान मलाई नै पहिचानेर एकत्व भावले मेरै भजन गर्दछन् ।।

---

१. महेश्वरपना । २. हेला । ३. अज्ञान । ४. दैत्यको पन । ५. सत्त्वगुणी । ६. शवभन्दा पहिले । ७. नाश नहुने । ८. एकाग्रभावले।

सततं कीर्तयन्तो मां यतन्तश्च दृढव्रताः ।।
नमस्यन्तश्च मां भक्त्या नित्ययुक्ता उपासते ।।१५।।

भक्ति-साथ सदा गर्दै [१]यत्न, [२]वन्दन, [३]कीर्तन ।
दृढव्रती सबै योगी मेरै गर्छन् [४]उपासन ।।

अरू यत्नवान् कर्मयोगीहरू दृढव्रत लिई, योगयुक्त भएर, सधैं मेरो कीर्तन र नमस्कार गर्दै, भक्तिपूर्वक मेरै उपासना गरिरहन्छन् ।

ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते ।।
एकत्वेन पृथक्त्वेन बहुधा विश्वतोमुखम् ।।१५।।

[५]बिश्वतोमुख, मैलाई [६]द्वैत-[७]अद्वैत-भावले ।
गर्छन् सेवा कुनै योगी अनेकौं ज्ञान-यज्ञले ।।

यस्तै अरू कुनै पुरूषहरू एकत्व अर्थात् अभेद भावले र पृथकत्व अर्थात् भेदभावले अथवा अनेक प्रकार ज्ञानयज्ञले पूजा गरेर, सर्वतोमुख (जहाँ तहीं रहेको) मेरो नै उपासना गर्दछन् ।।

## ईश्वर सर्वत्र छ-

अहं क्रतुरहं यज्ञः स्वधाहमहमौषधम् ।।
मन्त्रोऽहमहमेवाज्यमहमग्निरहं हुतम् ।।१६।।

म हूँ क्रतु, म हूँ यज्ञ, स्वधा हूँ, औषधी म हूँ ।
म हूँ मन्त्र, म हूँ आज्य, म हूँ अग्नि, म होम[८] हूँ

---

१.पाउन कोशिश । २. नमस्कार । ३. भजन । ४. सेवा । ५. जताततै मुख भएको । ६. भिन्न भिन्न छ भन्ने बुद्धिले । ७. एक मात्र छ भन्ने बुद्धिले । ८. हवनक्रिया ।

क्रतु (श्रौतयज्ञ) म हुँ, यज्ञ (स्मार्तयज्ञ) म हुँ, स्वधा अर्थात् श्राद्धमा पितृहरूलाई अर्पण गरिने अन्न म हुँ, औषध अर्थात् वनस्पतिबाट यज्ञका निमित्त उत्पन्न भएको अन्न म हुँ, यज्ञमा हवन गर्दा पढिने मन्त्र म हुँ, घिउ, अग्निमा चढाइएको आहुँति पनि म हुँ ।।

पिताहमस्य जगतो माता धाता पितामहः ।।
वेद्यं पवित्रमोङ्कार ऋक्साम यजुरेव च ।।१७।।

**यो लोकको पिता, माता, बाजे, धाता म हूँ सब ।**
**पवित्र, [1]वेद्य, ओङ्कार, ऋक् , यजुस्, साम, मै सब ।।**

यस जगत्को पिता, माता, धाता (आधार), पितामह (बाज्ये) म हुँ, जो केही पवित्र र जो केही जान्न योग्य छ त्यो र ॐकार, ऋग्वेद, सामवेद र यजुर्वेद पनि मै हुँ ।।

गतिर्भर्त्ता प्रभुः साक्षी निवासः शरणं सुहृत ।।
प्रभवः प्रलयस्थानं निधानं बीजमव्ययम् ।।१८।।

**साक्षी, भर्ता, गति, स्वामी, [2]रक्षिता, मित्र, वास हुँ ।**
**मै सृष्टि नाशको स्थान, कारणी [3]नित्य बीज हुँ ।।**

सबको गति, सबको पोषक, प्रभु साक्षी, वासस्थान, शरण, संगी, उत्पत्ति, प्रलय पालन गर्ने, कारण र कहिल्यै ननासिने, बीजस्वरूप पनि मै हुँ ।।

तपाम्यहमहं वर्षं निगृह्णाम्युत्सृजामि च ।।
अमृतं चैव मृत्युश्च सदसच्चाहमर्जुन ! ।।१९।।

---

१. जान्न लायक । २. शरण लिने । ३. कहिल्यै ननासिने ।

मै तपाउँछु, मै वर्षा रोक्छु, म वृष्टि गर्दछु ।
मै छु [1]अमृत, मै मृत्यु, [2]सत् [3]असत्, यो सबै म छु

हे अर्जुन ? मै गर्मी दिन्छु, मैं पानीलाई रोक्दछु र वर्षाउँछु, अमृत अथवा मृत्यु पनि मैं छु, अनि सत् (ननासिने) र असत् (नासिने) पनि केवल मैं छु ।।

यज्ञका स्वर्गादिफल अनित्यछन्

त्रैविद्या मां सोमपाः पूतपापा
यज्ञैरिष्ट्वा स्वर्गतिं प्रार्थयन्ते ।।
ते पुण्यमासाद्य सुरेन्द्रलोक-
मश्नन्ति दिव्यान् दिवि देवभोगान् ।।२०।।

[4]वेद-ज्ञाता, [5]सोम पी, पाप फाली
मेरै गर्दै यज्ञ [6]स्वर्गैषणा ली,
जान्छन् [7]पुण्य-प्राप्य त्यो स्वर्ग पाई,
भोग्छन् नाना देवको भोगलाई ।

जो त्रैविद्य अर्थात् ऋक् यजु साम-यी तीनै वेदका कर्म गर्ने र सोमलता पान गर्ने अर्थात् सोमयाजी, पापले रहित, पुरूषहरू यज्ञद्वारा मेरो पूजा गरेर स्वर्गलोक प्राप्तिको इच्छा गर्दछन्, ती सबैले इन्द्रको पुण्य लोकमा (स्वर्गमा) पुगेर देवताका अनेक, दिव्य, भोगहरू उपभोग गर्दछन् ।।

ते तं भुक्त्वा स्वर्गलोकं विशालं
क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति ।।

---

१. अमृतरूप (नमर्ने)। २. सधैं भइरहने । ३. कहिल्यै नहुने । ४. वेद जान्नेहरू । ५. सोमलता । ६. स्वर्गको इच्छा गर्ने । ७. पुण्यले पाइने ।

एवं त्रयीधर्मनुप्रपन्ना
गतागतं कामकामा लभन्ते ।।२१।।

भोगी ठूलो पुण्यको [1]स्वर्गलोक,
झर्छन् [2]पुण्यक्षीण भै मर्त्यलोक,
यस्तै जानू आउनू नित्य हुन्छन् ,
[3]कामेच्छा ली जो [4]त्रयी-धर्म गर्छन् ।

अनि त्यो विशाल स्वर्गलोकको उपभोग गरेर, पुण्य सकिएपछि तिनी फेरि जन्म लिनलाई मृत्युलोकमा (मनुष्यलोकमा) आउँदछन्, यस तरहले त्रयीधर्म अर्थात् वेदत्रयका यज्ञयाग आदि श्रौतधर्मको पालन गर्नेहरू र फलेच्छा अर्थात् काम्य उपभोगको इच्छा गरी कर्म गर्नेहरूलाई स्वर्गमा जानु र यहाँ आउनु बराबर परिरहन्छ ।।

### भक्तिबाटसबैहुन्छ

अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते ।।
तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ।।२२।।

[5]एकत्व-साथ जो मेरो गर्छन् भजन-चिन्तन ।
दिन्छु ती कर्मयोगीमा मै [6]योग-[7]क्षेम-[8]साधन ।।

जो, अरू कसैको आश्रय नगर्ने, जनहरू मेरै चिन्तन गरी मलाई भज्दछन्, ती नित्ययोगयुक्त पुरूषलाई योगक्षेम (सांसारिक नित्य निर्वाह) पनि म गराइदिन्छु ।।

---

१. इन्द्रलोक । २. पुण्य सकिनु । ३. फलको चाहना । ४. तीनै वेदका धर्म । ५. एकाग्रतासंग । ६. नपाएको कुरा जुराउनु । ७. पाइएका चीजको रक्षा । ८. सामग्री ।

## भावनानुसारले देवतारफल-

येऽप्यन्यदेवता भक्ता यजन्ते श्रद्धयान्विताः ।।
तेऽपि मामेव कौन्तेय ! यजन्त्यविधि पूर्वकम् ।।२३।।

जो अरू देवमा भक्ति श्रद्धा राखेर भज्दछन् ।
ती पनी विधि छोडेर मेरै पूजन गर्दछन् ।।

हे कौन्तेय ! श्रद्धायुक्त भएर, अरू देवताहरूको भक्त बनी, जो मानिस पूजन गर्दछन्, ती पनि विधिपूर्वक नहोस् सही, एक किसिमले मेरो नै पूजा गर्दछन् ।।

अहं हि सर्वयज्ञानां भोक्ता च प्रभुरेव च ।।
न तु मामभिजानन्ति तत्वेनातश्च्यवन्ति ते ।।२४।।

संपूर्ण यज्ञको भोक्ता, मै स्वामी पनि, अर्जुन ! ।
न जानीकन यो मेरो तत्व, गिर्छन [1]तिनी जन ।।

किनभने, सब यज्ञको भोक्ता र मालिक पनि मै हुँ, किन्तु तिनीहरू मलाई तत्वपूर्वक जान्दैनन् , यसै उसले ती पतन भइजान्छन् ।।

यान्ति देवब्रता देवान्पितृन्यान्ति पितृव्रता ।।
भूतानि यान्ति भूतेज्या यान्ति मद्याजिनोऽपि माम् ।।२५।।

[2]देव-पूजक देवैमा, पितृमा पितृ-पूजक ।
भूत-पूजक भूतैमा, जान्छन् मैमा म-पूजक ।।

देवताहरूको व्रत गर्नेहरू उनैको साथ (स्वर्गलोकमा), पितृहरूको व्रत गर्नेहरू पितृका साथ (पितृलोकमा), भिन्न-भिन्न भूतहरूलाई पुज्नेहरू

---

१. फल चाहना गरी कर्म गर्ने । २. देवता मान्ने ।

भूतहरूकै साथ (भूतलोकमा) र मेरो पूजा गर्नेहरू मेरै साथ (वैकुण्ठमा) आउँदछन् ।।

## भक्तिलेजे अर्प्योउसैमा ईश्वरखुश-

पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति ।।
तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ।।२६।।

[१]भक्तिमान् ले [२]पत्र, [३]पुष्प, फल, पानी, समर्पण ।
जे गर्छ भक्तिको भेट लिन्छु त्यो सब अर्जुन ।।

जो भक्त मलाई भक्तिले केही पात, फूल, फल, अथवा यथाशक्ति अलिकति पानी मात्र समर्पण गर्दछ भने पनि, त्यस नियत चित्त पुरूषका भक्तिको भेटलाई म खुशीसाथ ग्रहण गर्दछु ।।

## सबैकर्म गर्दा ईश्वरार्पण गर्नू-

यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत् ।।
यत्तपस्यसि कौन्तेय ! तत्कुरूष्व मदर्पणम् ।।२७।।

तिमी जे गर्दछौ, खान्छौ, दिन्छौ वा होम गर्दछौ ।
मैमा त्यो [४]अर्प संपूर्ण पार्थ ! जो तप गर्दछौ ।।

हे कौन्तेय ! तिमी जो कुछ गर्दछौ, जो खान्छौ, जो होम गर्दछौ जो दान गर्दछौ अनि जो तप गर्दछौ, त्यो सब मलाई नै अर्पण गर्ने गर ।।

शुभाशुभफलैरेवं मोक्ष्यसे कर्मबन्धनैः ।।
संन्यासयोगयुक्तात्मा विमुक्तो मामुपैष्यसि ।।२८।।

---

१. अभियुक्त पुरूषले । २. पात । ३. फूल । ४. अर्पण गर ।

शुभाशुभ दिने कर्म-बन्धबाट यसो गरी ।
उम्की, भै [१]योग-युक्तात्मा मैमा मिल्छौ सरासरी ।।

यसरी बर्तनाले कर्म गरेर पनि कर्महरूका शुभ-अशुभ फलरूप बन्धनहरूबाट तिमी अलग रहनेछौ र कर्मफलहरूको संन्यास गर्ने यो योगले युक्तात्मा अर्थात् शुद्ध अन्तःकरण भएको बनेर मुक्त भई ममा नै मिल्नेछौ ।।

भक्तजति सबैको एकै गति-

समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः ।।
ये भजन्ति तु मां भक्तया मयि ते तेषु चाप्यहम् ।।२९।।

[२]प्रियाप्रिय कुनै छैनन् समान सबमा म छु ।
तर भक्तहरू मेरा ममा छन्, तिनमा म छु ।।

म सबैमा एकनास छु, न मलाई कुनै द्वेष्य (अप्रिय) छ, न कोही प्रिय छ, तर, भक्तिले जो मेरो भजन गर्दछन्, ती ममा छन्, औ म पनि तिनैमा छु ।।

अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् ।।
साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः ।।३०।। ।

[३]दुरात्मा पनि एकत्व लिई [४]मदभक्त भो भने ।
साधु हो-[५]व्यवसायै छ त्यस्को पार लगाउने ।।

ज्यादा नै दुराचारी पो किन नहोस्, यदि त्यो मलाई अनन्यभावले

---

१. संन्यासले शुद्ध अन्तःकरण भएको । २. प्यारो नप्यारो । ३. पहिले दुराचरण गर्ने पुरूष । ४. मेरो भक्त । ५. बढ़िया कुरामा लागिपरेको बुद्धि नै ।

भजन गर्दछ भने, त्यसलाई ठूलो साधु (महात्मा) नै संझनुपर्दछ, किनभने, अब त्यसको बुद्धिको ठेगान असल लागिरहेछ ।।

क्षिप्रं भवति धर्मात्मा शश्वच्छान्तिं निगच्छति ।।
कौन्तेय! प्रतिजानीहि न मे भक्तः प्रणश्यति ।।३१।।

चाँडै त्यो हुन्छ [१]धर्मात्मा, सर्वदा शान्ति पाऊँछ ।
पार्थ! यो संझना राख भक्तको के विनाश छ ? ।।

त्यो चाँडो नै धर्मात्मा हुन जान्छ र नित्य शान्ति पनि पाउँदछ । हे कौन्तेय! तिमीले यो कुरा मनमा बहुतै दृढ गरी राख कि, मेरो भक्त कहिल्यै पनि नासिदैन ।।

मां हि पार्थ! व्यपाश्रित्य येऽपि स्युः पापयोनयः ।।
स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति परां गतिम् ।।३२।।

मेरो आश्रय गर्नाले [२]पापयोनि अनेकन ।
स्त्री, बैश्य शूद्र संपूर्ण पाउँछन् [३]गति अर्जुन ! ।।

किनभने, हे पार्थ! मेरो आश्रय (शरण) गर्नाले स्त्रीहरू, वैश्यहरू, शूद्रहरू र अन्त्यज आदि जो पापयोनि (नीचयोनि) छन् , ती पनि परमगति पाउँदछन् ।।

किं पुनर्ब्राह्मणाः पुण्या भक्ता राजर्षयस्तथा ।।
अनित्यमसुखं लोकमिमं प्राप्य भजस्व माम् ।।३३।।

धर्मात्मा [४]विप्र, [५]राजर्षि भक्तको के कुरा छ र ।
दुःखी अनित्य चोलामा मेरो सेवा सधैं गर ।।

---

१. धर्ममा मन भएको । २. अन्त्यजाति । ३. परमगति (मुक्ति) । ४. ब्राह्मण । ५. राजर्षि (क्षत्रिय)।

अब पुण्यात्मा ब्राह्मणहरूको, मेरा भक्त राजर्षि क्षत्रियहरूको ता कुरा नै के भन्नुपर्ला? तिमी यो अनित्य र दुःखकारक मृत्युलोकमा छौ, यस कारण मेरो भजन सदा सर्वदा गरिरहू ।।

## ईश्वरार्पण कर्मयोगको उपदेश-

मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरू ।।
मामेवैष्यसि युक्त्वैवमात्मानं मत्परायणः ।।३५।।

**ममा मन, ममा भक्ति, मेरै यज्ञ र [1]वन्दन ।**
**गर, यै योगले मिल्छौ मैमा [2]तन्मय भैकन ।।**

ममा मन लगाऊ, मेरो भक्त बन, मेरो पूजन गर, मलाई नै नमस्कार गर, यस प्रकारले मत्परायण हुँदै योगको अभ्यास गर्नाले मलाई (ईश्वरलाई) नै प्राप्त गर्नेछौ (पाउनेछौ) । (३७३)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे श्रीकृष्णार्जुनसंवादे 'राजविद्या-राजगुह्ययोगो' नाम नवमोऽध्यायः ।।९।।इति नेपालीभाषामा कोमलगीता 'राजविद्या-राजगुह्ययोगो' नाम

नवम अध्याय समाप्त ।।९।।



१. नमस्कार । २. त्यही स्वरूप ।

ॐ

# श्रीमद्‌भगवद्‌गीता

## कोमलगीता

### विभूति-योग १०

देवता ऋषिसबको आदि ब्रह्म हो -

श्रीभगवानुवाच-

भूय एव महाबाहो! शृणु मे परमं वचः ।।
यत्तेऽहं प्रीयमाणाय वक्ष्यामि हितकाम्यया ।।१।।

**मेरा वचनले [1]तुष्ट तिमिलाई म अर्जुन ! ।**
**हिताोतिरमा भन्छु फेरि [2]श्रेष्ठ कुराकन ।।**

भगवान्ले भन्नुभयो - हे महाबाहु ! मेरो भाषणबाट सन्तुष्ट हुने तिमीलाई, तिम्रै हितका निमित्त म फेरि एक असल कुरा भन्दछु, त्यो सुन ।।

न मे बिदुः सुरगणाः प्रभवं न महर्षयः ।।
अहमादिर्हि देवानां महर्षीणां च सर्वशः ।।२।।

**उत्पत्ति जान्दछन् मेरो न [3]महर्षि, न देवता ।**
**देवता-ऋषि साराको मै छु [4]आदि जगत्पिता ।।**

---

१. खुशी भएका । २. बहुतै उम्दा । ३. ज्ञानवान् ठूला ठूला ऋषि ४. पहिलो कारण ।

देवताहरू र महर्षिहरू पनि मेरो उत्पत्ति जान्दैनन् किनभने, देवता र महर्षिको सब प्रकारबाट मै आदिकारण छु ।।

योमामजमनादिं च वेत्ति लोकमहेश्वरम् ।।
असंमूढः स मर्त्येषु सर्वपापैः प्रमुच्यते ।।३।।

[1]अनादि, [2]अज, [3]लोकेश मलाई जुन जान्दछ ।
त्यै ज्ञानी नरमा सारा पापदेखि [4]विमुक्त छ ।।

मैं पृथ्वी आदि लोकको ठूलो ईश्वर हुँ औ मेरो जन्म र त्यस्तै आदि पनि कोही छैन' भनेर जो जान्दछ, मानिसमा श्रेष्ठ त्यहीज्ञानी पुरूष मोहले रहित भएर सब पापबाट मुक्त हुन्छ ।।

## बुद्धि आदिर प्रजा ईश्वर बाटै हुन्छन्-

बुद्धिर्ज्ञानमसंमोहः क्षमा सत्यं दमः शमः ।।
सुखं दुःखंभवो भावो भयं चाभयमेव च ।।४।।

बुद्धि, ज्ञान, [5]असंमोह, सुख, सत्य, [6]क्षमा, [7]दम ।
दुःख, सृष्टि तथा [8]नाश, [9]भयाभय, तपस्, [10]शम, ।।

अहिंसा, समता, तुष्टिस्तपो दानं यशोऽयशः ।।
भवन्ति भावा भूतानां मत्त एव पृथग्विधाः ।।५।।

अकीर्ति, कीर्ति, समता, [11]तुष्टि, दान, [12]अहिंसन-
प्राणीका यी [13]पृथक् [14]भाव हुन्छन् मैबाट अर्जुन ।।

---

१. जोभन्दा पहिले कोही छैन यस्तो । २. नजन्मने । ३. लोकको मालिक । ४. छुटकारा पाएको । ५. बेहोश नहुनु । ६. सहनशीलता । ७. इन्द्रियदमन । ८. प्रलय । ९. डर र निडर । १०. शान्ति । ११. खुशियाली । १२. विघात नगर्नु । १३. भिन्न-भिन्न । १४. अवस्था ।

बुद्धि, ज्ञान, असंमोह, क्षमा, सत्य, दम, शम, सुख, दुःख, भव (उत्पत्ति), अभाव, (नाश), भय, अभय, अहिंसा, समता, तुष्टि (सन्तोष), तप, दान, यश, अयश इत्यादि अनेक प्रकारका सारा प्राणी का भाव (शरीरका र बुद्धि अवस्था) मबाट नै उत्पन्न हुन्छन् ।।

महर्षयः सप्तपूर्वे चत्वारो मनवस्तथा ।।
मद्भावा मानसा जाता येषां लोक इमाःप्रजाः ।।६।।

**महर्षि [1]सात, पैलेका [2]चार, [3]चौध मनूहरू ।**
**जन्मे मेरा मनैबाट जस्का छन् यी [4]प्रजाहरू ।।**

सात महर्षि, तीभन्दा पहिलेका चार र अरू चौध मनुहरू मेरै मनबाट उत्पन्न गरिएका भाव हुन् , जसबाट लोकमा यो सारा प्रजाबर्ग उत्पन्न भएको छ ।।

### भक्तमायोगसिद्धि-

एतां विभूतिं योगं च मम यो वेत्ति तत्वतः ।।
सोऽविकंपेन योगेन युज्यते नात्र संशयः ।।७।।

**[5]विभूति, [6]योग यी मेरा जस्ले जान्दछ तत्वले ।**
**संबद्ध हुन्छ त्यै योगी पक्का निश्चल योगले ।।**

जसले, मेरो यो विभूति-विस्तार र योग अर्थात्- विस्तार गर्ने शक्ति या सामर्थ्यको तत्वलाई जान्दछ, त्यस पुरूषमा अवश्यमेव स्थिर कर्मयोग प्राप्त हुन्छ, यसमा सन्देह छैन ।।

---

१. मरीचि, अंगिरा, अत्रि, पुलस्त्य, पुलह, क्रतु, वशिष्ठ । २. वासुदेव, संकर्षण, प्रद्युम्न, अनिरूद्ध : ३. स्वायंभुवआदि सात र सावर्णि आदि सात। ४. जगत् चराचर सब । ५. फैलावट । ६. योगसामर्थ्य ।

अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते ।।
इति मत्वा भजन्ते मां बुधा भावसमन्विताः ।।८।।

मै जन्मस्थान साराको , सारा मैबाट चल्दछन ।
यो संझी बुद्धिमान व्यक्ति [१]भक्तिका-साथ भज्दछन् ।।

मैं सबको उत्पत्ति-स्थान र मबाट नै सब वस्तुको प्रवृति हुन्छ, यस्तो जानेर ज्ञानीं पुरूषहरू भावयुक्त अर्थात् भक्तियुक्त भएर मलाई नै भजन गर्दछन् ।।

मच्चित्तामद्गतप्राणा बोधयन्तः परस्परम् ।।
कथयन्त श्च मां नित्यं तुष्यन्ति च रमन्ति च ।।९।।

दिलो-ज्यान दिई मैमा [२]परस्पर बुझाउँदै ।।
खालि मेरै कुरा गर्दै, खुशी हुन्छन् रमाउँदै ।।

ती भक्त ममा मन लगाएर, दिलोज्यान दिई परस्परमा बोध गराउँदै, मेरै कथा कहँदै त्यसैमा सन्तुष्ट भएर, सर्वदा रमाइरहन्छन् ।।

तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम् ।।
ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ।।१०।।

प्रीतिका-साथ भजने, तिन्लाई भक्त हुन् भनी ।
[३]बुद्धियोग म त्यो दिन्छु जस्ले पुग्छन् ममा तिनी ।।

यस प्रकारले सदैव योगयुक्त भएर जो मलाई प्रीतिपूर्वक भज्दछन् , तिनीलाई म यस्तो साम्यबुद्धिको योग दिन्छु कि, जसको सहायताले तिनी मलाई पाउन सक्दछन् ।।

---

१. भावनाले युक्त भएर । २. आपसमा । ३. समताबुद्धिरूप योग।

तेषामेवाऽनुकंपार्थमहमज्ञानजं तमः ।।
नाशयाम्यात्मभावस्थो ज्ञानदीपेन भास्वता ।।११।।

दयाले तिनकै [१]भित्री आत्मामा वास गर्दछु ।
उज्यालो [२]ज्ञान-बत्तीले [३]अज्ञान-तम हर्दछु ।।

यिनीहरूको उपर अनुग्रह गर्नाका निमित्तले नै म तिनका अन्त:करणमा बसेर उज्यालो ज्ञानरूप बत्तीले तिनका अज्ञानमूलक अन्धकारको नाश गरिदिन्छु ।।

## अर्जुनको विभूतियोगमा प्रश्न ।

### अर्जुन उवाच-

परं ब्रह्म परं धाम पवित्रं परमं भवान् ।।
पुरूषं शाश्वतं दिव्यमादिदेवमजं विभुम् ।।१२।।

परं ब्रह्म, परं [४]धाम, पवित्र [५]परम, प्रभु ।
[६]अजादिदेव, [७]पुरूष, दिव्य, [८]नित्य तथा [९]विभु ।।

आहुस्त्वामृषय: सर्वे देवर्षिर्नारदस्तथा ।।
असितो देवलो व्यास: स्वयं चैव ब्रवीषि मे ।।१३।।

प्रभुलाई सबै भन्छन्-व्यास, देव, नारद ।
असितादि पनी कृष्ण? आज्ञा भो प्रभुले तक ।।

अर्जुनले बिन्ती गरे-हजूर नै पर ब्रह्म, श्रेष्ठ स्थान र परम पवित्र वस्तु हुनुहुन्छ, सब ऋषिहरू, त्यस्तै देवर्षि नारद, असित, देवल र व्यास

---

१. अन्त:करणमा । २. ज्ञानरूपी बत्तीले । ३. अज्ञानरूपी अन्धकार। ४. स्थान । ५. श्रेष्ठ । ६. अजन्म । ७. सबभन्दा पहिलेका देवता । ८. अविनाशी । ९. सबमा व्यापक ।

पनि तपाईलाई दिव्य शाश्वत-पुरूष, आदिदेव, अजन्मा र सर्वव्यापी भनी बताउँथे, अहिले खुद आफै पनि मलाई त्यही सब आज्ञा गर्नुहुन्छ ।।

सर्वमेतदृतं मन्ये यन्मां वदसि केशव ।।
न हि ते भगवन्! व्यक्तिं विदुर्देवा न दानवाः ।।१४।।

**जो भन्नुभो, सबै साँचो ठान्दछु म त केशव ।**
**जान्दैनन् [१]प्रभुको व्यक्ति न त देव, न [२]दानव ।।**

हे केशव ! हजूरबाट मलाई जो आज्ञा भयो, त्यो सब मैले साँचो ठहन्याएको छु, हे भगवन् ! हजूरको व्यक्ति अर्थात्-मूलतत्व देवताहरू र दानवहरूलाई पनिविदित छैन ।।

स्वयमेवात्मनात्मानं वेत्थ त्वं पुरूषोत्तम ।।
भूतभावन, भूतेश, देवदेव, जगत्पते ।।१५।।

**[३]भूतभावन, [४]भूतेश, [५]लोकेश, [६]पुरूषोत्तम !**
**[७]आफूलाई स्वयं आफै जान्नुहुन्छ [८]सुरोत्तम ।।**

सब भूत-प्राणीलाई उत्पन्न गर्ने, हे भूतेश? हे देवदेव हे जगत्पते हे पुरूषोत्तम? खुद हजूर नै आफूले आफूलाई जान्नुहुन्छ ।।

वक्तुमर्हस्यशेषेण दिव्या ह्यात्मविभूतयः ।।
याभिर्विभूतिभिर्लोकानिमांस्त्वं व्याप्य तिष्ठसि ।।१६।।

**आज्ञा होस् लौ ममा आफ्ना विभूतिकन केशव?**
**ढाकेर रहनू हुन्छ जस्ले यो जगतै सब ।।**

---

१. उत्पत्ति । २. दैत्य । ३. जगत्का सृष्टिकर्ता । ४. चराचरका स्वामी । ५. लोकका मालिक । ६. पुरूषमा श्रेष्ठ । ७. खुद । ८. देवता का पनी देवता ।

यस कारण हजूरका जो दिव्य विभूतिहरू छन्, जुनले यी सारा लोकलाई व्याप्त गरेर रहनुभएको छ ती विभूतिहरूलाई हजूरले नै मेरो उपर कृपा गरेर बताइबक्सियोस् ।।

कथं विद्यामहं योगिस्त्वां सदा परिचिन्तयन् ।।
केषु केषु च भावेषु चिन्त्योऽसि भगवन् मया ।।१७।।

हे [1]योगेश! सदा मैले संझी जानूँ कसो गरी ।
[2]पदार्थ कुनमा भज्नू हजूरकन हे हरि ।।

हे योगिन् ! मलाई यो आज्ञा गर्नुहोस् कि, सर्वदा हजूरको चिन्तन गरेर हजूरलाई कसरी पहिचानूँ । हे भगवन् ! म कुन कुन पदार्थमा हजूरको चिन्तन गरूँ ? ।

विस्तरेणात्मनो योगं बिभूतिं च जनार्दन ! ।।
भूयः कथय तृप्तिर्हि शृण्वतो नास्ति मेऽमृतम् ।।१८।।

फेरि बिस्तारले योग बिभूति सब आफना ।
आज्ञा होस् त्यो [3]सुधा-वाणी तृप्ति छैन कसै ममा ।।

हे जनार्दन ! आफ्ना विभूति र योग मलाई फेरि विस्तारसँग वर्णन गर्नुहोस्, किनभने अमृत-तुल्य हजूरको भाषण जति सुने पनि मलाई तृप्ति कत्ति हुँदैन ।।

## कृष्णाबाट मुख्य मुख्य विभूतिवर्णन-

### श्री भगवानुवाच-

हन्त ते कथयिष्यामि दिव्या ह्यात्मविभूतयः ।।
प्राधान्यतः कुरूश्रेष्ठ ! नास्त्यन्तो विस्तरस्य मे ।।१९।।

---

१. हे योगका स्वामी । २. चीज । ३. अमृत जस्तो बोली ।

हुन्छ, क्यै भन्दछू मुख्य आफ्ना दिव्य विभूति म ।
मेरा विस्तारको [१]अन्त्य छैन, यो मनमा गम ।।

भगवान्‌ले आज्ञा गर्नुभयो - हुन्छ लौ, अब हे कुरूश्रेष्ठ ! मेरा दिव्य विभूतिहरूका मध्यमा तिमीलाई मुख्य मुख्य मात्र केही बताउँछु । मेरा विभूतिका फैलाबटको अन्त्य छँदै छैन अर्थात् - बताइसकिंदैन ।।

अहमात्मा गुडाकेश ! सर्वभूताशयस्थितः ।।
अहमादिश्च मध्यं च भूतानामन्त एव च ।।२०।।

[२]अन्तर्यामी म हूँ आत्मा सबैको [३]हृदय-स्थित ।
मै आदि, मध्य प्राणीको अन्त्य मै जान, भारत ।।

हे गुडाकेश ! सब प्राणीका अन्तःकरणमा रहने आत्मा म हुँ, अनि सब प्राणीको आदि, मध्य र अन्त्य पनि मै हुँ ।।

आदित्यानामहं विष्णुर्ज्योतिषां रविरंशुमान् ।।
मरीचिर्मरूतामस्मि नक्षत्राणामहं शशी ।।२१।।

आदित्यमा म हूँ विष्णु, तेजिलोमा म सूर्य हूँ ।
मरीचि हूँ मरुतमा, चन्द्र [४]नक्षत्रमा म हूँ ।।

बाह्र आदित्यका मध्यमा विष्णु म हुँ, तेजिलाहरूमा किरणले शोभायमान भएको सूर्य म हुँ, उनन्चास मरूत्‌मा मरीचि र नक्षत्रहरूमा चन्द्रमा म हुँ ।।

वेदानां सामवेदोऽस्मि देवानामस्मि वासवः ।।
इन्द्रियाणां मनश्चास्मि भूतानामस्मि चेतना ।।२२।।

---

१. टुङ्गो । २. ज्ञानदृष्टिले जानिने । ३. अन्तःकरणमा रहेको । ४. नक्षत्रगणमा ।

**वेदमा हूँ सामवेद, देवतामा म इन्द्र हूँ ।**
**मन इन्द्रियमा म हूँ , प्राणीमा चेतना[1] म हूँ ।।**

म वेदहरूमा सामवेद हुँ देवताहरूमा इन्द्र हुँ, इन्द्रियहरूमा मन हुँ, अनि प्राणीहरूमा चेतना अर्थात् प्राणको चलन शक्ति म हुँ ।।

रूद्राणां शंकरश्चास्मि वित्तेशो यक्षरक्षसाम् ।।
वसूनां पावकश्चास्मि मेरूः शिखरिणामहम् ।।२३।।

**रूद्रमा शंकर महूँ, [2]यक्षादीमा कुबेर हूँ ।**
**बसुमा पावक म हूँ, मेरू पर्वतमा म हूँ ।।**

एकादश रूद्रमा शंकर म हुँ, यक्ष र राक्षसहरूमा कुबेर महुँ, अष्टवसुमा पावक (अग्नि) म हुँ, अनि सात पर्वतमा सुमेरू म हुँ।

पुरोधसां च मुख्यं मां विद्धि पार्थ! वृहस्पतिम् ।।
सेनानीनामहं स्कन्दः सरसामस्मि सागरः ।।२४।।

**पुरोहितमहाँ मुख्य वृहस्पति पनी म हुँ ।**
**हुँ [3]सेनापतिमा स्कन्द, तलाउमा समुद्र हूँ ।।**

हे पार्थ! पुरोहितहरुमा मुख्य वृहस्पति पनि मलाई संझ, म सेनापतिहरुमा स्कन्द (स्वामिकार्तिक) र तलाउहरूमा समुद्र हूँ ।।

महर्षीणां भृगुरहं गिरामस्म्येकमक्षरम् ।
यज्ञानां जपयज्ञोऽस्मि स्थावराणां हिमालयः ।।२५।।

---

१. जीवनशक्ति । २. यक्ष र राक्षसमा । ३. फौजी कम्याण्डरहरूकामध्यमा ।

महर्षिमा भृगु म हुँ, [१]वाणीमा ॐ, पनि म हूँ ।
यज्ञमा हूँ जाप-यज्ञ, स्थिर[२]मा म हिमाल हूँ ।।

महर्षिहरुमा भृगु हुँ, बोलीमा एकाक्षर अर्थात् ॐकार म हुँ, यज्ञहरुमा जप यज्ञ म हुँ, स्थावर अर्थात् स्थिर पदार्थहरुमा हिमालय म हुँ ।।

अश्वत्थः सर्ववृक्षाणां देवर्षीणां च नारदः ।।
गन्धर्वाणां चित्ररथः सिद्धानां कपिलो मुनिः ।।२६।।

देवर्षिमा नारद हूँ, वृक्षमा पिप्पलै म हूँ ।
गन्धर्वमा चित्ररथ, सिद्धमा कपिलैम हूँ ।।

सारा वृक्षमा अश्वत्थ (पिप्पल) म हुँ, देवर्शिहरुमा नारद म हुँ, गन्धर्वहरुमा चित्ररथ र सिखहरुमा कपिल मुनि पनि म हुँ ।

उच्चैः श्रवसमश्वानां विद्धि माममृतोद्भवम् ।।
ऐरावतं गजेन्द्राणां नराणां च नराधिपम् ।। २७।।

घोडामा [३]अमृतोत्पन्न जान उच्चैश्रवाः म हूँ ।
हूँ एरावत हात्तीमा, राजा मानिसमा म हूँ ।।

घोडाहरुमा अमृत मन्थन गर्दा निस्केको उच्चैश्रवाः मलाई नै जान श्रेष्ठ हात्तीहरुमा ऐरावत र मानिसहरुमा राजा पनि म हुँ ।।

आयुधानामहं वज्रं धेनूनामस्मि कामधुक् ।।
प्रजनश्चाऽस्मि कन्दर्पः सर्पाणामस्मि, वासुकिः ।।२८।।

हूँ हतीयारमा वज्र, गाईमा कामधेनु हूँ ।
उत्पत्ति गर्ने हूँ [४]काम, सर्पमा वासुकी म हूँ ।।

---

१. बोलीमा । २. नडग्नेहरुमा । ३. अमृतको निमित्त समुद्र मन्थन गर्दा जन्मे को । ४. कामदेव ।

म हतियारमा ब्रज्र हुँ, गाइहरुमा कामधेनु र प्रजा उत्पन्न गर्नेमा कामदेव हूँ, सर्पहरूमा वासुकि म हुँ ।।

अनन्तश्चास्मि नागानां वरुणो यादसामहम् ।।
पितृणामर्यमा चास्मि यमः संयमतामहम् ।।२९।।

शेष हूँ नागमा, [1]यादो-गणमा वरुणै म हूँ ।
पितृमा अर्यमा मै हूँ, हुकुमीमा यमै म हूँ ।।

नागहरुमा अनन्त (शेष) म हुँ, जलचर प्राणीहरुमा वरुण र पितृहरुमा अर्यमा म हुँ, हुकुम गर्नेहरुमा यमराज म हुँ ।।

प्रह्लादश्चास्मि दैत्यानां कालः कलयतामहम् ।।
मृगाणां च मृगेन्द्रोऽहं वैनतेयश्च पक्षिणाम् ।।३०।।

प्रह्लाद दैत्यमा मै हूँ, काल [2]ग्रासकमा म हूँ ।
[3]मृगेन्द्र [4]मृगमा मैं हूँ, पक्षीमा गरूडै म हूँ ।।

म दैतयहरुमा प्रह्लाद हुँ, म ग्रास गर्नेहरुमा काल हुँ, पशुहरुमा मृगेनद्र (सिंह) हुँ, पक्षीहरूमा गरूड पनि म हुँ ।।

पवनः पवतास्मि रामः शस्त्रभृतामहम् ।।
झषाणां मकरश्चास्मि स्रोतसामस्मि जान्हवी ।।३१।।

राम हूँ शस्त्रधारीमा, वेगवान्मा म वायु हूँ ।
म हूँ [5]मकर माछामा, नदीमा [6]जाह्नवी म हुँ ।।

म वेगवान्मा वायु हुँ, शस्त्रधारीमा म राम हुँ, माछाहरुमा ग्राह र नदीहरुमा जाह्नवी (भागीरथी गंगा) म हुँ ।।

---

१. जलमा रहने प्राणीहरूमा । २. गफ्का हाल्नेहरूमा । ३. सिंह । ४. सब जनाबरहरूमा । ५. ग्राहक । ६. भागीरथी ।

सर्गाणामादिरन्तश्च मध्यं चैवाहमर्जुन ।।
अध्यात्मविद्या विद्यानां वादः प्रवदतामहम् ।।३२।।

आदि मध्य तथा अन्त्य यो सारा सृष्टिमा म हुँ ।
[1]अध्यात्मविद्या [2]विद्यामा [3]वादीमा वाद नै म हूँ ।।

हे अर्जुन! सृष्टिको आदि, अन्त्य र मध्य पनि मैं हुँ, विद्याहरूम. अध्यात्मविद्या अर्थात् दर्शनशास्त्र र झगड़ा गर्नेहरूको बाझ्ने कुरा म हुँ।

अक्षराणामकारोऽस्मि द्वन्द्वः सामासिकस्य च ।।
अहमेवाक्षयः कालो धाताहं विश्वतोमुखः ।।३३।।

समासमा म हुँ द्वन्द्व, [4]वर्णमा म अकार हूँ ।
चतुर्मुखी म हूँ ब्रह्मा, मै त्यो अक्षय काल हूँ ।।

म अक्षरहरुमा आकार र समासहरुमा उभय पद प्रधान द्वन्द्व हुँ, निमेष मुहुर्त आदि ननासिने काल र सर्वतोमुख अर्थात् चारौंतर्फ मुख भएको ब्रह्मा पनि मैं हुँ ।

मृत्युः सर्वहरश्चाहमुद्भवश्च भविष्यताम् ।।
कीर्तिः श्रीर्वाक्च च नारीणां स्मृतिर्मेधा धृतिः क्षमा ।।३४।।

हुनेको जन्मने स्थान, [5]सर्वहर्ता म मृत्यु हूँ ।
स्त्रीमा श्री, कीर्ति वाक, मेधा, धृति, स्मृतिः क्षमा म हूँ ।।

सवलाई नाश गर्ने मृत्यु (प्राण हरण गर्ने शक्ति) र पहिले जन्मलिनेहरूको उत्पत्तिस्थान म हुँ, स्त्रीहरूमा कीर्ति, श्री वाणी, स्मृति मेधा, धृति, क्षमा पनि म हुँ ।।

---

१. आत्मविबेचन गर्ने वेदान्तशास्त्र । २. जान्न योग्य कुरामा । ३. झगड़ा गर्नेमा । ४. अक्षरमा । ५. सबैलाई हर्ने ।

बृहत्साम तथा साम्नां गायत्री छन्दसामहम् ।।
मासानां मार्गशीर्षोऽहमृतूनां कुसुमाकरः ।।३५।।

[1]साममा हूँ [2]बृहत्साम, गायत्री छन्दमा म हूँ ।
बसन्त हूँ म ऋतुमा, मैह्लामा मार्गशीर्ष हूँ ।।

साम अर्थात् गाउन योग्य स्तोत्रहरुमा बृहत्साम र छन्दहरूमा गायत्री छन्द म हुँ, महीनाहरूमा मार्गशीर्ष र ऋतुहरुमा वसन्त पनि म हुँ।।

द्यूतं छलयतामस्मि तेजस्तेजस्विनामहम् ।।
जयोऽस्मि व्यवसायोऽस्मि सत्वं सत्ववतामहम् ।।३६।।

कपटीमा म जूवा हूँ, तेजस्वीमा म तेज हूँ ।
जय हूँ, निश्चय म हूँ, [3]सत्ववान्को म सत्वहूँ ।।

म छलीहरुमा जूवा हुँ, तेजस्वीहरुको तेज, विजयशाली पुरुषहरुको जितबाजी, निश्चयी पुरुषहरुको निश्चय र सत्यवान्हरुको सत्व अर्थात् शक्ति पनि म हुँ ।।

वृष्णीनां वासुदेवोऽस्मि पाण्डवानां धनञ्जयः ।।
मुनीनामप्यहं व्यासः कवीनामुशना कविः ।।३७।।

हूँ अर्जुनै पाण्डवमा, [4]वृष्णिमा [5]वासुदेव हूँ ।
मुनिमा व्यासजी मै हूँ, कविमा उशना म हूँ ।।

यादवहरुमा वासुदेव (कृष्ण) पाण्डवहरुमा धनञ्जय (अर्जुन) मुनिहरुमा वेदव्यास र कविहरुमा शुक्राचार्य पनि म हुँ ।

---

१. वैदिक स्तोत्रमा । २. सामवेदको स्तोत्र । ३. सत्वगुणी पुरुषको । ४. यदुवंशमा । ५. श्रीकृष्ण ।

दण्डो दमयतास्मि नीतिरस्मिजिगीषताम ।।
मौनं चैवास्मि गुह्यानां ज्ञानं ज्ञानवतामहम् ।।३८।।

दण्ड हूँ वश-गर्नेमा, [१]जयैषी-बीच नीति[२] हूँ ।
हूँ [३]गुप्तहरूमा मौन[४], ज्ञान ज्ञानीविषे म हूँ ।।

म दमन गर्नेहरुको दण्ड, जितबाजी इच्छा गर्नेहरुको नीति र गुप्त कुराहरुको मौन (चुप लाग्नु) म हूँ, ज्ञानीहरुको ज्ञान पनि म हूँ ।

यच्चापि सर्वभूतानां बीजं तदहमर्जुन ।।
न तदस्ति बिना यस्तास्यान्मया भूतं चराचरम् ।।३९।।

जो यावत् भूतको बीज [५]होला त्यो मै छु, अर्जुन ! ।
[६]चरा-चर बिना मैले बनेको छैन यो गुन ।।

यस्तै गरी हे अर्जुन ! सारा भूत (प्राणी) को जो कुछ बीज छ, त्यो मैं हुँ, यस्तो कुनै चराचर भूत (पदार्थ) छैन जो कि, मैले छोडिएको (मबेगरको) होस् ।।

नान्तोऽस्ति मम दिव्यानां विभूतीनां परन्तप ।।
एष तूद्देशतः प्रोक्तो विभूतेविस्तरो मया ।।४०।।

अन्त्य छैन कुनै पार्थ ! मेरा दिव्य विभूतिको ।
कहें संक्षेपले मात्र यो विस्तार विभूतिको ।।

हे परन्तप! मेरा दिव्य विभूतिहरुको अन्त पर्यवसान छैन विभूतिहरूको यो विस्तार (वर्णन) मैले केवल दिग्दर्शनका निमित्त मात्र गरेको हुँ ।।

---

१. जित्न चाहनेमा । २. न्याय । ३. गुप्त उपाय (जुक्ति) । ४. चुपचाप । ५. उत्पन्न गर्ने शक्ति । ६. हिड्ने र नहिंड्ने ।

## सबैमा मेरो एक-एक अंशछ-

यद्यद्विभूतिमत्सत्वं श्रीमदूर्जितमेव वा ।।
तत्तदेवाऽवगच्छ त्वं मम तेजोऽशसंभवम् ।।४१।।

जो जो [1]बल-विभूति-श्री-युक्त देखिन्छ अर्जुन ! ।
त्यो[2] मेरै तेजको अंश पाएको हो भनी गुन ।।

जुन चीज ऐश्वर्ययुक्त शोभायुक्त र प्रभावले युक्त छ, त्यसलाई मेरा तेजको अंशबाट उत्पन्न भएको हो भनी तिमि जान ।।

अथवा बहुनैतेन किं ज्ञानेन तवार्जुन ।।
बिष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगत् ।।४२।।

अथवा यो धेर जानी तिम्रो के छ [3]प्रयोजन? ।
[4]एकांशले जगत् ढाकी रहेकोछु म, अर्जुन! ।।

अथवा, हे अर्जुन! तिमिलाई यो धेर जानेर के गर्नुछ? संक्षेपमा बताइदिन्छु कि, म आफ्नो एक एक अंशले सारा जगत्लाई नै व्याप्त गरेर (ढाकेर) रहेको छु ।। (४१४)

इति श्रीमद्भागवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'विभूतियोगो' नाम
दशमोऽध्यायः ।।१०।।

इति नेपालीभाषामा कोमलगीता 'विभूतियोगोनाम' दशमोऽध्यायः ।।१०।।



---

१. बल, ऐश्वर्य र शोभाले युक्त भएको । २. त्यो त्यो चीज । ३. काम । ४. एक एक अंशले ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### विश्वरूपदर्शन-योग ११

### विभूति देख्न अर्जुनको इच्छा-

अर्जुन उवाच-

मदनुग्रहाय परमं गुह्यमध्यात्मसंज्ञितम् ।।
यत्त्वयोक्तं वचस्तेन मोहोऽयं विगतो मम ।।१।।

**ममाथि करुणा राखी गुह्य [1]अध्यात्म-नाम यो ।**
**[2]जो आज्ञा गर्नुभो त्यसले मेरो मोह सबै गयो।।**

अर्जुनले बिन्ति चढाए-मेरा उपर अनुग्रह गरेर हजूरले जो यो अध्यात्मनामक परम गुप्त (गुह्य) ज्ञान आज्ञा गर्नुभयो, त्यसबाट मेरो मोह पनि हटेको छ ।।

भवाप्ययौ हि भूतानां श्रुतौ विस्तरशो मया ।।
त्वत्तः कमलपत्राक्ष ! माहात्म्यमपि चाव्ययम् ।।२।।

**प्राणीका नाश, उत्पत्ति मैले विस्तारले सुनें ।**
**जो हो [3]अक्षय्य माहात्म्य प्रभुको त्यो पनी सुनें ।।**

---

१. प्रत्येकमा आत्मा रहेको । २. ज्ञान । ३. कहिल्यै ननासिने ।

यस्तै, हे कमलपत्राक्ष ! प्राणीहरूको उत्पत्ति, प्रलय र हजूरको अक्षय महात्म्य पनि, मैले हजूरबाट विस्तारपूर्वक सुनिलियें ।।

एवमेतद्यथात्थ त्वमात्मानं परमेश्वर ।।
द्रष्टुमिच्छामि ते रूपमैश्वरं पुरूषोत्तम ।।३।।

आफूलाई भन्नुभयो जस्तो त्यै ठीक ठान्दछु ।
त्यो [१]ईशरूप प्रभुको हेर्न इच्छा म गर्दछु ।।

अब, हे परमेश्वर ! हजूरले आफूलाई जस्तो वर्णन गर्नुभयेको छ, हे पुरूषोत्तम ! म हजूरका त्यस प्रकारको ईश्वरीय स्वरूपलाई प्रत्यक्षै हेर्न (यहीं अगाडि नै देख्न) चाहन्छु ।।

मन्यसे यदि तच्छक्यं मया द्रष्टुमिति प्रभो ।।
योगेश्वर ! ततो मे त्वं दर्शयात्मानमव्ययम् ।।४।।

सकिने हो भने मैले रूप त्यो हेर्न निश्चय ।
देखाउनुहोस् [२]योगेश ! त्यो आफ्नो[३]रूप अव्यय ।।

हे योगेश्वर प्रभु ! यदि हजूर त्यस प्रकारको रूप मैले हेर्न योग्य छ भन्ने संझनुहुन्छ भने हजूरले आफ्नो अव्यय (कहिल्यै ननासिने) त्यो स्वरूप अर्थात् विश्वरूप मलाई देखाउनुहोस् ।।

## विश्वरूप हेर्नलाई कृष्णवाट दिव्य दृष्टिदान -

श्री भगवानुवाच -

पश्य मे पार्थ ! रूपाणि शतशोऽथ सहस्रशः ।।
नानाविधानि दिव्यानि नानावर्णाकृतीनि च ।।५।।

---

१. पहिले बताइएका विभूतिहरूले युक्त भएको । २. हे योगका ईश्वर ।
३. संसारमय स्वरूप ।

अनेक-वर्ण-आकार-युक्त, दिव्य, थरी थरी ।
लाखौं हजारौं ती मेरा रूप हेर अघी सरी ।।

भगवान्ले भन्नुभयो - हे अर्जुन ! मेरा अनेक प्रकारका, नाना रङ्गका र आकारका, यिनी सयकडौं अथवा हजारौं दिव्य स्वरूपलाई तिमी हेर ।।

पश्यादित्यान्वसून्रूद्रानश्विनौ मरूतस्यथा ।।
बहून्यदृष्ठपूर्वाणि पश्याश्चर्याणि भारत ।।६।।

[१]आदित्य, [२]वसुती [३]रूद्र, ती [४]मरूत्, [५]अश्विनीसुत ।
हेर पैह्ले नदेखेका धेरै आश्चर्य, [६]भारत ।।

हे भारत ! बाह्र आदित्य, आठ वसु, एघार रूद्र, दुइ अश्विनीकुमार र उनन्चास मरूद्‌गणलाई हेर, अनि यी अनौठा आश्चर्य कुराहरू पनि हेर जो पहिले कहिल्यै पनि देखेका हुँदाहोइनौ ।।

इहैकस्थं जगत्कृत्स्नं पश्याद्य सचराचरम् ।।
मम देहे गुडाकेश ! यच्चान्यद्द्रष्टुमिच्छसि ।।७।।

चराचर जगत् हेर यै मेरा एक रूपमा ।
अरू जो हेर्न चाहन्छौ हेर मेरै स्वरूपमा ।।

हे गुडाकेश ! आज यहीं एकत्रित भएको सब चराचर जगत् हेर, अथवा अरू जो कुछ तिमीलाई हेर्नाको अभिलाषा छ, त्यो पनि मेरो यस शरीरमा नै देख्न सक्दछौ ।।

न तु मां शक्यसे द्रष्ठुमनेनैव स्वचक्षुषा ।।
दिव्यं ददामि ते चक्षुः पश्य मे योगमैश्वरम् ।।८।।

---

१. द्वादशादित्य । २. अष्टवसु । ३. एकादशरुद्र । ४. उनञ्चास मरुत। ५. अश्विनीका पुत्र। ६. भरतवंशी अर्जुन ।।

मलाइ हेर्न सक्तैनौ गरी यै [1]दृष्टिको भर ।
म दिव्य[2]-दृष्टि नै दिन्छु, हेर यो [3]योग ऐश्वर[4] ।।

परन्तु, तिमी आफ्ना यिनै आँखाले मलाई देख्न सक्तैनौ, यसै उसले तिमीलाई दिव्यदृष्टि दिन्छु, यसैको सहायताले मेरो यो ईश्वरीय योग अर्थात् योगसामर्थ्य (विश्वरूप) लाई हेर ।।

सञ्जय उवाच -

एवमुक्त्वा ततो राजन् ! महायोगेश्वरो हरिः ।।
दर्शयामास पार्थाय परमं रूपमैश्वरम् ।।९।।

यस्तो भनी महायोगी कृष्णले दिव्य ऐश्वर ।
देखाउनुभयो [5]रूप पार्थलाई, [6]नरेश्वर ।।

सञ्जयले बिन्ती गरे - हे राजन्, धृतराष्ट्र ! यति भनेर योगहरूका इश्वर हरि (श्रीकृष्ण) ले अर्जुनलाई आफ्नो श्रेष्ठ, ईश्वरीयरूप अर्थात् विश्वरूप देखाउनुभयो ।।

अनेकवक्त्रनयनमनेकाद्भुतदर्शनम् ।।
अनेकदिव्याभरणं दिव्यानेकोद्यतायुधम् ।।१०।।

[7]नाना-नेत्रास्यले युक्त, हेर्दाअत्यन्त [8]अद्भुत ।
पैह्रेका गहना दिव्य, [9]नाना-शस्त्रास्त्रसंयुत ।।

त्यस विश्वरूपका अनेक मुख र आँखा थिए, अरू उसमा अनेक अद्भुत दृश्यहरू देखिन्थे, नाना प्रकारको दिव्य अलंकार पहिरियेका थिए, अनि घेरै किसीमका दिव्य हतियारहरु पनि सुसज्जित थिए ।।

---

१. चर्मचक्षुको । २. ज्ञानदृष्टि । ३. सामर्थ्य । ४. ईश्वरमा रहेको । ५. विश्वरुप । ६. हे महाराज । ७. अनेक आँखा र मुखले । ८. अनौठा । ९. घेरै हातहतियार उठाएका ।

दिव्यमाल्यांवरधरं दिव्यगन्धानुलेपनम् ।।
सर्वाश्चर्यमयं देवमनन्तं विश्वतोमुखम् ।।११।।

दिव्य-माला-वस्त्रधारी, दिव्य चन्दन-लेपित ।
[1]अनन्त, आश्चर्यमय, दीप्ति[2]मान् , सर्वतोमुख[3] ।।

त्यो विश्वरुपको अनन्त, सर्वतोमुख र सब आश्चर्य चीजले भरिएका शरीरमा अलौकिक सुबासना आउँदथ्यो र दिव्य पुष्प, वस्त्रहरूले शोभायमान (खूब शोभा पाएको) पनि थियो ।।

दिवि सूर्यसहस्त्रस्य भवेद्युगपदुत्थिता ।।
यदि भाः सदृशी सा स्याद्भासस्तस्य महात्मनः ।।१२।।

हजारौं सूर्यको कान्ति भए [4]एकत्र [5]उत्थित ।
हुँदो हो ती माहात्माका तेजले [6]तुल्य निश्चित[7] ।।

यदि आकाशमा हजारौं सूर्यको तेज एक साथै रहेको हुँदो हो ता, त्यस बखत ती महात्माका तेजको (कान्तिको) केही समानता आउँदो हो ।।

तत्रैकस्थं जगत्कृत्स्नं प्रविभक्तमनेकधा ।।
अपश्यद्देवदेवस्य शरीरे पाण्डवस्तदा ।।१३।।

[8]नाना-थरी जगत् सारा त्यहाँ त्यै एक ठाउँमा ।
देखे अर्जुनले कृष्ण -भगवान्का शरीरमा ।।

अनि, देवाधिदेव कृष्णका यस शरीरमा नाना प्रकारले (भिन्न-

---

१. अंत्य नपाइसकिने । २. बहुतै तेजिलो । ३. जतानतै मुखै भएका । ४. एकै ठाउँमा । ५. उदाएको । ६. बराबरी । ७. अवश्य । ८. बेग्ला बेग्लै सवरूप भएको ।

(मि. ‍ फ़सिम-सँग) बाँडिएको, यो सारा, जगलाई अर्जुनले एकै ठाउँमा (विश्वरूपमा) देखे ।।

ततः स विस्मयाविष्टो हृष्टरोमा धनञ्जयः ।।
प्रणम्य शिरसा देवं कृताञ्जलिरभाषत ।।१४।।

अनि [1]रोमाञ्चका-साथ मानो अत्यन्त विस्मय[2] ।
नमस्कार गरी, हात जोडी, बोले धनञ्जय[3] ।।

त्यसपछि, आश्चर्यमा परेर(अकमक्क भएका) ती अर्जुनको शरीरमा रोमाञ्च भयो र शिर नुह्नाई नमस्कार गर्दै, हात जोडेर, उनी परमेश्वरसँग बिन्ति गर्न लागे ।।

## भयभीत भयेका अर्जुनको विश्वरुप स्तुति-

अर्जुन उवाच-

पश्यामि देवांस्तव देव ! देहे
सर्वांस्तथा भूतविशेषसंघान् ।।
ब्रह्माणमीशं कमलासनस्थ
मृगींश्च सर्वानुरगांश्च दिव्यान् ।।१५।।

[4]हजूरमा ईश्वर! देवता ती
देख्छु तथा लाखन जीव[5] जाति ।
ब्रह्मा [6]भवानीश, [7]रमेश, सारा,
ती दिव्य [8]सर्पादि, [9]ऋषी घनेरा ।।

१. काढा उमार्नू । २. आश्चर्य । ३. अर्जुन । ४. हजूरको विश्वरूपी शरीरमा । ५. प्राणीका जात । ६. महादेव। ७. लक्ष्मीपति विष्णु । ८. वासुकि आदि सर्पगण । ९. मरीचि आदि ।

अर्जुन स्तुति गर्न लागे - हे देव! तपाईको यो शरीरमा सब देवता र नाना प्रकारका प्राणीको समुदाय, त्यस्तै ब्रह्माजी, शिव, कमलापति- विष्णुलाई, अनि ऋषिहरू र वासुकी आदि सर्प हरूलाई पनि देखिरहेको छु ।।

अनेकबाहूदरवक्त्रनेत्रं

पश्यामि त्वां सर्वतोऽनन्तरूपम् ।।

नान्तं न मध्यं न पुनस्तवादिं

पश्यामि विश्वेश्वर ! विश्वरुप! ।।१६।।

**अनेक आँखा-मुख-पेट-हस्त[१]**

**देख्छू अनन्ताकृति[२] छन् दुरुस्त ।**

**न अन्त्य देखिन्छ न आदि, माझ,**

**[३]हजूरको हे जगदीश[४] ! आज ।।**

हे विश्वेश्वर! कडोरौं हात, कडोरौं पेट, कडोरौं मुख र कडोरौं नजर भएका अनन्तरुपी तपाईलाई नै म चारौंतर्फ देख्दछु, परन्तु, हे विश्वरुप! तपाईको नत आदि, न मध्य, नत अन्त्य - केही पनि म देख्नै सक्दिन ।

किरीटिनं गदिनं चक्रिणं च

तेजोराशिं सर्वतो दीप्तिमन्तम् ।।

पश्यामि त्वां दुर्निरीक्ष्यं समन्ताद्

दीप्तानलार्कद्युतिमप्रमेयम ।।१७।।

**किरीटवान्[५] ती [६]गदाचक्र-धारी,**

**तेजोराशि[७] दीप्त[८] सर्वत्र भारी ।**

---

१. हात । २. अनन्त आकार । ३. विश्वरूपको । ४. हे संसारका मालिक । ५. किरीट-पैन्हेका । ६. गदाचक्रहरुले लिने । ७. तेजको पुञ्ज। ८. प्रकाशमान ।

…न्दो आगो सूर्यले तुल्य नाथ ।
चौतर्फी नै दखिने कष्ट- साथ ।।

किरीट, गदा, चक्रधारण गर्ने, चारौतर्फ प्रभा फैलाउने, तेजको पुञ्ज झल्मलाउँदो अग्नि र सूर्यकै समान देदीप्यमान, आँखाले हेर्नै …सकने र अपरंपार तपाई नै मेरो जता ततै देखापर्नु हुन्छ ।।

त्वमक्षरं परमं वेदितव्यं
त्वमस्य विश्वस्य परं निधानम् ।।
त्वमव्य: शाश्वतधर्मगोप्ता
सनातनस्त्वं पुरुषो मतो मे ।।१८।।

हजूर नै [१]अक्षर, वेद्य[२] खास ।
हजूर सर्वोच्च, [३]जगन्निवास ।।
हजूर नै [४]शाश्वत-धर्मधारी ।
[५]सनातनी-पुरुष निर्विकारी[६] ।।

तपाई नै आखिरीको जान्न योग्य अक्षर अर्थात् ब्रह्म, तपाई नै यस संसारको अन्तिम आधार, तपाई नै ननासिने र सनातन धर्मको रक्षक हुनुहुन्छ, म ता तपाईलाई नै सनातन पुरूष ठहऱ्याउँदछु ।।

अनादिमध्यान्तमनन्तवीर्य-
मनन्तबाहुँ शशिसूर्यनेत्रम् ।।
पश्यामि त्वां दीप्तहुताशवक्त्रं
स्वतेजसा विश्वमिदं तपन्तम् ।।१९।।

---

१. अविनाशी ब्रह्म । २. जान्न लायक । ३. जगत्को वासस्थान । ४. सनसतन धर्मरखक । ५. आदि पुरुष । ६. कहिल्यै विकार नहुने ।

न आदि देखिन्छ, न मध्य, अन्त ।
[१]अनन्त त्यो वीर्य[२], भुजा अनन्त ।।
[३]रवीन्दु-नेत्र, ज्वल[४]दग्नि-वक्त्र ।
[५]जगत्प्रतापी, प्रभु देख्छु [६]उग्र ।।

जसको आदि मध्य अन्त्य केही छैन, जसका बेगिन्ती हातहरू छन् , चन्द्र र सूर्य जसका नजर छन् , जसको मुख दनदन बलेको आगो जस्तो छ, यस्तो अनन्तशक्तिमान् तपाई नै आफ्ना तेजले यो संपूर्ण जगत्लाई धपधप बलाउन लाग्नुभएको छ । म तपाईलाई यस्तो देख्दछु ।।

द्यावापृथिव्योरिदमन्तरं हि
व्याप्तं त्वयैकेन दिशश्च सर्वाः ।।
दृष्ट्वाद्भुतं रूपनुग्रं तदेवं
लोकत्रयं प्रव्यथितं महात्मन् ! ।।२०।।

छन् ढाकियेका प्रभुबाट खास ।
दशै-दिशा, [७]भू-गगनावकाश ।।
यस्तो महा-अद्भुत, घोर, रूप ।
देखी, तिनै-लोक छ [८]मूढ-रूप ।।

किनभने, आकाश र पृथ्वीका बीचको यो सब अन्तर र सारा सदिशा विदिशाहरू एउटै तपाईले व्याप्त गरी ढाकिएका छन्, हे माहात्मा ! तपाई को यो अद्भुत र उग्र डरलाग्दो रूपएलाई देखेर तीनै लोक डरले व्याकुल र बेहोश भइरहेको छ ।।

---

१. बेगन्ती (कडोरन्)। २. शक्ति । ३. सूर्य चन्द्र नै नेत्र भएका । ४. बलेको आगो नै मुख भएका । ५. लोकै घपक्क पार्ने । ६. भयंकर । ७. पृथ्वी र आकाशको अनतर । ८. बेहोश (विचेत)।

अमी हि त्वां सुरसंघा विशन्ति
केचिभ्दीताः प्राञ्जलयो गृणन्ति ।।
स्वस्तीत्युक्तवा महर्षि सिद्धसंघाः
स्तुवन्ति त्वां स्तुतिभिः पुष्कलाभिः ।।२१।।

पस्छन् प्रभूमा यिनि देव कोही,
जप्छन् डरी हात जोडेर कोही ।
[१]स्वस्ती भनी सिद्ध[२]महर्षि धेर,
गर्छन् स्तुति स्तोत्रहरू जपेर ।।

अहो? देवताहरूका समूह तपाईमा प्रवेश गरिरहेका छन्, अरू कुनै ता डरले हात जोडेर प्रार्थना गरिरहेछन्, त्यस्तै स्वस्ति स्वस्ति भन्दै महर्षि र सिद्धहरूको समाज अनेक प्रकारका स्तोत्रले तपाईको नै स्तुति गरिरहेको छ ।।

रूद्रादित्या बसवो ये च साध्या
विश्वेऽश्विनौ मरूतश्चोष्मपाश्च ।।
गन्धर्वयक्षाः सुरसिद्ध संघाः,
वीक्षन्ते त्वां विस्मिताश्चैव सर्वे ।।२२।।

[३]आदित्य, [४]रूद्रा-श्विन[५], [६]साध्य-वर्ग,
[७]मरूत्, [८]विश्वे, [९]वसु, [१०]पित्रादि सर्व ।
गन्धर्व, यक्षासुरा[११], सिद्ध[१२]-सङ्घ,
हेर्छन् सदा भित्र भएर दङ्ग ।।

---

१. भलाई होस् । २. ठूलाठूला ऋषिहरू । ३. द्वादश आदित्य । ४. एकादश रूद्र । ५. दुइ अश्विनीकुमार । ६. साध्यगण । ७. उनन्चास वायु । ८. विश्वदेव । ९. अष्टवसु । १०. पितृहरु । ११. किन्नर र दैत्यहरु । १२. सिद्धगणका समूह ।

रूद्रगण, आदित्यगण, वसु, साध्यगण; विश्वेदेव, अश्विनीकुमार, मरूद्गण, पितृगण, गन्धर्व, यक्ष; राक्षस, सिद्ध, इत्यादि फौजका फौज आश्चर्य भएर तपाईतिरै हेरिरहेका छन् ।।

रूपं महत्ते वहुवक्त्रनेत्रं महाबाहो ! बहुबाहूरूपादम् ।।
बहूदरं बहुदंष्ट्राकरालं दृष्ट्वा लोकाः प्रव्यथितास्तथाऽहम् ।।२३।।

ठूलो अनेकोदर[१], तिग्म-नेत्र[२],
[३]अनेक जङ्घा, भुज, पाद, वक्त्र ।
आकार [४]दंष्ट्रा विकराल नाथ !
हेरी म छू ब्याकुल लोक-साथ ।।

हे महाबाहु ! तपाईको यो महान् (ज्यादै ठूलो) अनेक मुख, आँखा, जाँघ, पाउ, पेटहरू भएको र कडोरौं दाह्रा आएको हुनाले ज्यादै डरलाग्दो, यो रूप देखेर सबै लोकलाई र मलाई पनि डर पैदा भइरहेको छ ।।

नभः स्पृशं दीप्तमनेकवर्णं
व्यात्ताननं दीप्तविशालनेत्रम् ।।
दृष्ट्वा हि त्वां प्रव्यथितान्तरात्मा
धृतिं न विन्दामि शमं च विष्णो ! ।।२४।।

आकाश छुने, मुख आँ गरेको,
बल्दा ठुलो नेत्रहरू धरेको ।

---

१. घेरै पेटहरू भएको । २. जाज्वल्य आँखा भएको । ३. घेरै जाँघ हात, पाउ, मुख भएको । ४. दाह्राहरूले बडो भयंकर ।

हजूर, देखेर [1]अनेक-रङ्ग,

विचेत छू, भो [2]धृति शान्ति-भङ्ग ।।

आकाशलाई छुने झकाझक परेको, नाना रंग बिरंगको, मुख बाईरहेको र धपधप बल्ने नेत्रले युक्त भएको, तपाईलाई देखेर अन्तरात्मा घबडाएको छ, यसैले, हे विष्णु! अहिले मलाई शान्ति र धैर्य केही छैन ।

दंष्ट्राकरालानि च ते मुखानि

दृष्ट्वै व कालानलसन्निभानि ।।

दिशो न जाने न लभे च शर्म

प्रसीद देवेश! जगन्निवास् ।।२५।।

देखेर दाह्राहरूले कराल

कल्पाग्नि[3] जस्ता मुख ती विशाल[4] ।

दिशा पनि जान्दिनँ, शान्ति हुन्न,

भै-वक्सनूहोस् भगवान् प्रसन्न ।।

दाह्राले बिकराल र प्रलयकालका अग्निले समान, यिनी, तपाईका मुखहरूलाई देख्नासाथ मलाई दिशाबिदिशाहरुको ज्ञान हुँदैन र समाधान पनि हुँदैन, हे जगन्निवास, देवाधिदेव! प्रसन्न हुनुहोस् ।।

अमी च त्वां धृतराष्ट्रस्य पुत्राः

सर्वे सहैवावनिपालसंघैः।।

भीष्मो द्रोणः सूतपुत्रस्तवासौ

सहास्मनीयेरपि योधमुख्यैः ।।२६।।

---

१. बहुरूपी । २. धैर्य र शान्तिको नाश । ३. भयंकर प्रलयकालको आगो । ४. ठूला ।

यिनी सारा[१] कुरुभूपाल-पुत्र
त्यस्तै राजा गैह्र, त्यो सूत[२]-पुत्र ।।
भीष्म, द्रोणाचार्य, हाम्रा [३]प्रधान
[४]योद्धा-साथै हत्पताएर जान-

अहो गजब! राजाहरुका फौजले सहित धृतराष्ट्रका दुर्योधनादि सब छोरा, भीष्म पितामह, द्रोणाचार्य, कर्ण उसतर्फका यिनी र हामीतर्फका पनि मुख्य मुख्य सब योद्धाहरु साथसाथै -

वक्त्राणि ते त्वरमाणा विशन्ति
दंष्ट्राकरालानि भयानकानि ।।
केचिद्विलग्ना दशनान्तरेषु
सन्दृश्यन्ते चूर्णितैरुत्तमाङ्गैः ।।२७।।

पस्छन् [५]सबै प्रभुका ती कराल[६]
दंष्ट्राधारी मुखमा भै [७]हवाल ।।
अड्केका छन् दाँतका बीच कोही ।
देखिन्छन् ती [८]छिन्न-मस्तिष्क कोही ।।

यी सब लडाका हजूर का भयंकर दाहाले युक्त भएका यिनै घोर मुखमा धडाधड पसिरहेका छन्, अनि कुनै ता ती दाह्राका छिद्रमा अड्किएर यस्ता देखिएका छन् कि, जसका टाउका चकनाचूर भएका छन् ।।

---

१. कुरुराज धृतराष्ट्रका छोराहरू । २. कर्ण । ३. मुख्य । ४. लड़ाकाहरूका साथसाथै । ५. दुवै तर्फका योद्धाहरु । ६. भयंकर दाह्राले युक्तभयको । ७. विवश । ८. टाउका फुटेका ।

यथा नदीनां बहवोऽम्बुवेगाः
समुद्रमेवाभिमुखा द्रवन्ति ।।
तथा तवामी नरलोकवीरा
विशन्ति वक्त्राण्यभिविज्वलन्ति ।।२८।।

जस्तो नदीका जलका प्रवाह
दगुर्दछन् [1]सिन्धुतिरै [2]अथाह ।
त्यस्तै यिनी [3]वीरहरू [4]अशेष,
गर्छन् ति बल्दा मुखमा प्रवेश ।।

तपाईका यिनी जोरसंग धपधप बलेका मुखमा मनुष्यलोकका बहादुरहरू त्यसै गरी तँछाड़-मछाड़-सित पसिरहेका छन्, जस्तो कि नदीका ठूला ठूला प्रवाहहरू समुद्रतर्फ नै प्रवेश गर्नालाई धमाधम दौडन्छन् ।।

यथा प्रदीप्तं ज्वलनं पतंङ्गा
विशन्ति नाशाय समृद्धवेगाः ।।
तथैव नाशाय विशन्ति लोका-
स्तवापि वक्त्राणि समृद्धवेगाः ।।२९।।

जस्तै [5]प्रदीप्तानलमा [6]पतङ्ग,
पस्छन् [7]विनाशोन्मुख वेग-सङ्ग ।
त्यस्तै सबै लोक विनाशनिंति,
पस्छन् प्रभूका मुखमा [8]स्वयं ती ।।

---

१. समुद्रतर्फ । २. ज्यादै धेर । ३. लं.ऊका शूरवीरहरू । ४. सम्पूर्ण। ५. बलेको आगोमा । ६. पुतलीहरू । ७. मर्न ततपर । ८. खुद आफै ।

पुतलीहरू मर्नाका निमित्त बड़ो जोरसँग उड़ेर गई, बल्दा अग्निमा जसरी पर्दछन् , त्यस्तै हजूरका पनि ती अनेक मुखमा यी लोक मर्नाकै निमित्त वेगपूर्वक दौडँदै धमाधम पसिरहेका छन् ।।

लेलिह्यसे ग्रसमानः समन्ता -
ल्लोकान्समग्रान्वदनैर्ज्वलद्भिः ।।
तेजोभिरापूर्य जगत्समग्रं
भासस्तवोग्राः प्रतपन्ति विष्णो ! ।।३०।।

यी लोक लप्काउनुहुन्छ खास,
हालेर बल्दा मुखभित्र गाँस ।
धपक्क ढाकीकन [१]लोक-जाल,
बल्छन् [२]प्रभा ती प्रभुका कराल ।।

हे विष्णु ! चारै तिरबाट सब प्राणीलाई आफ्ना प्रज्वलित मुखमा हालेर, बराबर जिभ्राले स्वाद लिइरहनुभएको छ, अनि तपाईका उग्र प्रभाहरूले र तेजले सारा जगत्लाई जतातत्तै ढाकेर झलझलाइरहेछन ।

आख्याहि मे को भवानुग्ररूपो
नमोऽस्तु ते देववर ! प्रसीद ।।
विज्ञातुमिच्छामि भवन्तमाद्यं
न हि प्रजानामि तव प्रवृत्तिम् ।।३१।।

यस्तो [३]उग्र प्रभुको ! बोलनूहोस् ,
पर्छू पाउमाम खूसी हुनूहोस् ।।

---

१. स्वर्गादि सारालोक । २. तेज । ३. भयंकर स्वरूप लिने ।

गर्छू [1]आद्य प्रभुको जान्न चाह,

के चेष्टा यो प्रभूको ? छैन थाह ।।

मलाई आज्ञा होस कि, यो उग्ररूप धारण गर्ने तपाई को हुनुहुन्छ? हे देवदेवमा श्रेष्ठ ! तपाईलाई नमस्कार गर्दछु, प्रसन्न हुनुहोस, म जान्न चाहन्छु कि, तपाई आदि पुरूष कुन हुनहुन्छ? किनभने, म तपाईको यहाँ प्रवृत्ति हुनामा कारण बिलकुल जान्दिन ।।

## मैलेमारें तिमि निमित्तमात्र हौ -

श्रीभगवानुवाच-

कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो

लोकान्समाहर्तुमिह प्रवृत्तः ।।

ऋतेऽपि त्वां न भविष्यन्ति सर्वे

येऽवस्थिताः प्रत्यनीकेषु योधाः ।।३२।।

[2]कालै म हूँ[3]लोकविनाशकारी,

छू [4]लोकनाशार्थ यहाँ तयारी ।

कुनै र[illegible]त्रन् नभए पनी तिमि,

सैन्यमा छन् बलिया पराक्रमी ।।

विश्वरूप भगवान्‌ले आज्ञा गर्नुभयो - म लोकहरूलाई नाश गर्ने बडेको 'काल' हुँ , यहाँ लोकहरूलाई संहार गर्नाको निमित्त प्रादुर्भाव भएको छु तिमि नहोऊ तापनि अर्थात् तिमि केही नगर तापनि सेनाहरूमा खडा भएका यी सब योद्धा कुनै रहनेछैनन् अर्थात् - सबै मारिनेछन् ।।

---

१. सब भन्दा पहिलो । २. मृत्युको देवता । ३. लोकसंहारी । ४. जगत् नाश गर्नलाई । ५. फौजमा ।

तस्मात्त्वमुत्तिष्ठ यशो लभस्व
जित्वा शत्रून्भुङ्क्ष्व राज्यं समृद्धम् ।।
मयैवैते निहताः पूर्वमेव
निमित्तमात्रं भव सव्यसाचिन् ! ।।३३।।

तसर्थ चाँडो उठ, कीर्ति पाउ,
बैरी जिती, 'राज्य ठुलो चलाऊ ।
मारीरहेंछु पहिल्यै यि मैले'
निमित्त[1] मात्रै बन पार्थ ! ऐले ।।

यस कारण तिमी उठ, नाम कमाऊ, शत्रुहरूलाई जितेर धनधान्य पूर्ण राज्यको उपभोग गर, मैले तिम्रा ती शत्रुलाई पहिले नै मारिसकेको छु, यस निमित्त, अब हे सव्यसाची (निशाना नचुक्ने बहादुर अर्जुन) तिमी केवल निमित्त मात्र हुनालाई अगाडि सर ।।

द्रोणं च भीष्मं च जयद्रथं च
कर्णं तथान्यानपि योधवीरान् ।।
मया हतांस्त्वं जहिमा व्यथिष्ठा
युद्ध्यस्व जेतासि रणे सपत्नान् ।।३४।।

श्रीभीष्मजी, द्रोण र कर्णवीर,
जयद्रथादी सब [2]शूर-वीर ।
मरीसके, फिक्री नमान, मार,
लडे ज्तिौला रिपु[3] जोरदार[4] ।।

१. अर्काले देख्दा मार्नामा कारण जसतो मात्र । २. बहादुर । ३. शत्रु ।
४. बलियो ।

मैले द्रोणाचार्य, भीष्म जयद्रथ, कर्ण र अरू त्यस्तै धेरै शूर-वीर लडाकाहरूलाई पनि अघि नै मारिसकेको छु, तिनीहरूलाई तिमी मार, न घबड़ाऊ, युद्ध गर, तिमी लड़ाईमा शत्रुहरूलाई जित्नेछौ ।।

## फेरी अर्जुनको स्तुति र प्रार्थना -

सञ्जय उवाच -

एतच्छ्रुत्वा वचनं केशवस्य
कृताञ्जलिर्वेपमानः किरीटी ।।
नमस्कृत्वा भूय एवाहकृष्णां
सगद्गदं भीतभीतः प्रणम्य ।।३५।।

**यस्तो सुनी कृष्णको दिव्य बात,**
**काँपेका ती पार्थ जोडेर हात ।**
**फेरी लागे भन्न पाऊ परेर,**
**[१]सगद्गद-स्वरले क्यै डरेर ।।**

सञ्जयले बिन्ती गरे - महाराज ! केशव भगवान्को यस्तो बोली सुनेर अर्जुन अत्यन्त भयभीत भए, गलो रोकिएर, थर्थरी काँप्दै, हात जोडेर नमस्कार गर्दै, तिनी श्रीकृष्णसंग नम्र भई फेरि बिन्ती गर्न लागे ।।

अर्जुन उवाच -

स्थाने हृषीकेश ! तव प्रकीर्त्या
जगत्प्रहृष्यत्यनुरज्यते च ।।
रक्षांसि भीतानि दिशो द्रवन्ति
सर्वे नमस्यन्ति च सिद्धसंघाः ।।३६।।

---

१. डरले मुटुमा भक्क.नु परी स्पष्ट नभएको बोलीले ।

हजूरको कीर्तन गर्छ नाथ !
जगत् खुशी भै [1]अनुरक्ति-साथ,
पुग्छन् डरी राक्षस दिग्दिगन्त[2] ।
प्रणाम गर्छन् सब साधु-सन्त ।।

अर्जुनले बिन्ती गरे -हे हृषीकेश ! सब जगत् हजूरको गुणकीर्तनले प्रसन्न (खुशी) छ, र उसमा अनुरक्त रहेको छ; राक्षसहरू तपाईलाई देखेर डराई, दशदिशामा भाग्न लागेका छन् , सिद्ध पुरूषहरूका समाज तपाईलाई नै नमस्कार गर्न लागे का छन् ।।

कस्माच्च ते न नमेरन्महात्मन्
गरीयसे ब्रह्मणोऽप्यादिकर्त्रे ।।
अनन्त, देवेश, जगन्निवास,
त्वमक्षरं सदसत्तत्परं यत् ।।३७।।

ब्रह्माजीको प्रभु [3]कर्ता महात्मन् !
यहाँलाई कसरी ती नमानून !
[4]असत् [5]सत् बा परको अक्षरात्मा[6],
[7]देवाधीश प्रभु, [8]लोकान्तरात्मा ।।

हे महात्मा ! तपाई ब्रह्मन्जीका पनि आदिकारण र उभन्दा पनि श्रेष्ठ हुनुहुन्छ , तपाईलाई ती सबैले नमस्कार किन नगरून् । हे अनन्त! देवेश ! हे जगन्निवास ! सत् र असत् तपाई नै हुनुहुन्छ, अनि यी दुवैभन्दा पर रहेको जो अक्षर छ, त्यो यनि तपाई नै हुनुहुन्छ ।।

---

१.प्रेमपूर्वक । २. दिशादिशाका छेउ ।३. बनाउने । ४. नाशवान् । ५. अविनाशी । ६. कहिल्यै ननासिने चिद्‌धनरूप । ७. देवताका अधीश्वर । ८. लोकका अन्तःकरणरूप ।

त्वमादिदेवः पुरूषः पुराण

स्त्वमस्य विश्वस्य परं निधानम् ।।

वेत्तासि वेद्यं च परं च धाम

त्वया ततं विश्वमनन्तरूप ! ।।३८।।

हजूर नै पूरूषमा पुराण,

हजूर [1]देवादि, जगन्निधान[2] ।

हजूर वेत्ता[3], फिर वेद्य[4] धाम[5],

हजूरले व्याप्त[6] छ यो तमाम ।।

हे अनन्तरूप ! तपाई नै आदिदेव, पुरातन पुरूष, यस जगत्को परम आधार, जान्ने र जान्न योग्य वस्तु, त्यस्तै श्रेष्टस्थान हुनुहुन्छ अनि तपाईले नै यस जगत्लाई विस्तार या व्याप्त गर्नुभएको छ ।।

वायुर्यमोऽग्निर्वरूणः शशांकः

प्रजापतिस्त्वं प्रपितामहश्च ।।

नमो नमस्तेऽस्तु सहस्त्रकृत्वः

पुनश्च भूयोऽपि नमो नमस्ते ।।३९।।

[7]जलेश, वायू, यम, अग्नि, चन्द्र,

ब्रह्मा, बराज्यू[8] सबका हजूर ।

प्रभो ! नमस्कार हजार फेर,

फेरी नमस्कार छ धेर धेर ।।

वायु, यमराज, अग्नि, वरूण, चन्द्र, ब्रह्मा र सबको पूर्वपुरूखा

---

१. देवता आदि। २. जगत्का कारण । ३. जान्ने । ४. जान्न लायक। ५. स्थान । ६. ढाकिएको । ७. वरुण । ८. प्रपितामह ।

पनि तपाई नै हुनुहुन्छ, तपाईलाई हजारौंपटक नमस्कार छ, फेरी त्योभन्दा पनि धेरै धेरै नमस्कार छ ।।

नमः पुरस्तादथ पृष्ठतस्ते
नमोऽस्तु ते सर्वत एव सर्व ।।
अनन्तवीर्यामितविक्रमस्त्वं
सर्वं समाप्नोषि ततोऽसि सर्वः ।।४०।।

प्रभो ! अगाडी र अनी पछिल्तिर,
प्रणाम चारैतिर गर्दछु फिर ।
अनन्त छन् शक्ति, अनन्त '[१]वीर्य,
ढाक्ता सबै लोक कहन्छ '[२]सर्व' ।।

हे सर्वात्मक ! तपाईलाई अघिल्तिरबाट र पछिल्तिरबाट पनि नमस्कार छ, फेरी जताततैबाट पनि नमस्कार छ, तपाईको शक्ति अनन्त छ, तपाईको पराक्रम अतुल छ, सबलाई व्याप्त गरेर रहनुभएको हुनाले 'सर्व' भनिने पनि तपाई नै हुनुहुन्छ ।।

सखेति मत्वा प्रसभं यदुक्तं
हे कृष्ण ! हे यादव ! हे सखेति ।।
अजानता महिमानं तवेदं
मया प्रमादात्प्रणयेन वापि ।।४१।।

मैले गरेंजो अघि साथि ठानी,
हजूरको यो [३]महिमा न जानी ।

---

१. पराक्रम । २. सबै स्वरूप । ३. महत्त्वपना ।

प्रमाद[१] वा [२]प्रेम हुदा, [३]सखा ! र,

हे [४]कृष्ण ! हे यादव[५] ! यो पुकार ।।

तपाईंको यस महिमा (महात्म्य) लाई नजानी, केवल साथी ठंझेर प्रेमले भूलले हे कृष्ण ! हे यादव ! हे सँगी ! इत्यादि जो कुछ ले भनेको छु त्यो र ।।

यच्चावहासार्थमसत्कृतोऽसि

विहारशय्यासनभोजनेषु ।।

एकोऽथवाप्यच्युत । तत्समक्षं

तत्क्षामये त्वामहमप्रमेयम् ।।४२।।

बिहार[६]-शय्याऽऽसन-भोज गर्दा,

एकान्त वा [७]सर्व-समक्ष पर्दा

हेलाँ गरें जो [८]परिहासलाई,

माफी मिलोस [९]अच्युत ! त्यो मलाई ।।

हे अच्युत ! आहार विहारमा, सुत्दा बस्दामा, एकलै भएको बेलामा अथवा धेरैका सामनेमा पनि हस्सी दिल्लगीमा तपाईंको अपमान गरेको हुँला, त्यो सब अहिले म तपाईं सँग माफ माग्दछु ।।

पितासि लोकस्य चराचरस्य

त्वमस्य पूज्यश्च गुरूर्गरीयान् ।।

न त्वत्समोऽस्त्यभ्यधिकः कुतोऽन्यो

लोकत्रयेऽप्यप्रतिमप्रभाव ।।४३।।

---

१. बेहोश । २. प्यारो । ३. ए सँगी । ४. ए काल । ५. ए यदुवंशी । ६. घम्नु, सुत्नु, बस्नु, खानु, पिउनु । ७. सबैको सामनेमा । ८. ठट्टाकालागि । ९. केही कुरामा पनि नचुक्ने ईश्वर ।

संसारको [१]पूज्य पिता हजूर,

सर्वोच्च [२]आचार्य पनी हजूर ।

बढ्त कहाँ को ? [३]प्रभुतुल्य सम्म

देखिन्न, सामर्थ्य [४]अहो अगम्य ।।

यसचराचर जगत्को पिता तपाइं नै हुनु हुन्छ, तपाई पूज्य र गुरूका पनि गुरू हुनुहुन्छ, तीनै लोकभरीमा तपाई बराबरको अर्को कोही छैन भने, फेरि हे अतुलप्रभाव ! तपाई भन्दा बढता को कहाँबाट हुन सक्ला !।।

तस्मात्प्रणम्य प्रणिधाय कायं

प्रसादये त्वामहमीशमीड्यम् ।।

पितेव पुत्रस्य सखेव सख्युः

प्रियः प्रियायार्हसि देव ! सोढुम् ।।४४।।

पस्त्रेर साह्रै, शिर यो झुकाई

मनाउँछू [५]स्तुत्य हजूरलाई,

[६]सखा सँगीको, [७]सुतको पिता झैं ।

कसूर [८]मेरो सहिबक्सियोस् है ।।

तपाई स्तुति गर्न योग्य र सामर्थ्यवान् पनि हुनुहुन्छ, यसै उसले शरीरै निहुराएर नमस्कार गर्दै हजूरमा प्रार्थना गर्दछु, कि प्रसन्न भइबक्स्योस् जसरी पिताले आफ्नो छोराको र सँगीले आफ्नो सँगीको अपराध क्षमा गर्दछ, त्यस्तै गरी, हे देव ! प्रेम गर्ने हजूरले आफ्नो प्रेमपात्र मेरा उपर पनि सब अपराध (कसूर) क्षमा गरिबक्सनुपर्दछ ।।

---

१. पूजा गर्न योग्य । २. गुरु। ३. हजूर बराबरीको । ४. गम पाउन नसकिने । ५. स्तुति गर्न योग्य । ६. सँगी । ७. छोराको । ८. प्रेमीको।

अदृष्टपूर्वं हृषितोऽस्मि दृष्ट्वा
भयेन च प्रव्यथितं मनो मे ।।
तदेव मे दर्शय देव ! रूपं
प्रसीद देवेश ! जगन्निवास ।।४५।।

खुशी भएँ देखि [१]अदृष्टरूप,
झस्क्यो डराई तर [२]चित्त खूप ।
देखाउनुहोस् [३]उहि रूप खास,
प्रसन्न भै [४]नाथ ! जगन्निवास ।।

कहिल्यै पनि नदेखिएको रूप देखेर, मलाई हर्ष भएको छ, परन्तु डरले मेरो मन आत्तिएको पनि छ,हे जगन्निवास, देवाधिदेव ! प्रसन्न हुनुहोस् र हे देव ! आफ्नो उही पहिलेको स्वरूप देखाउनुहोस् ।।

किरीटिनं गदिनं चक्रहस्त-
मिच्छामि त्वां द्रष्टुमहं तथैव ।।
तेनैव रूपेण चतुर्भुजेन
सहस्रबाहो ! भव विश्वमूर्ते ।।४६।।

स्वयं गदा-चक्रहरू लिएको,
किरीटले उज्जवल भै-रहेको ।
उही [५]परंसुन्दर, [६]चारबाहु-
स्वरूपको दर्शन गर्न पाऊँ ।।

म पहिलेको जस्तै किरीट पैह्रेको, बाहुमा चक्र र गदा लिएको,

१. कहिल्यै नदेखिएको स्वरूप । २. मन । ३. पहिले को । ४. मालिक
५. अत्यन्त राम्रो । ६. चतुर्बाहुस्वरूपको ।

हजूर लाई दर्शन गर्न चाहन्छु यस कारण, हे सहस्रबाहु, विश्वमूर्ति ! त्यही चतुर्भुज रूपले प्रकट हुनुहोस् ।।

## भक्तिलेमात्र विश्व रूप देखिन्छ -

श्री भगवानुवाच -

मया प्रसन्नेन तवार्जुनेदं
रूपं परं दर्शितमात्मयोगात् ।।
तेजोमयं विश्वमनन्तमाद्यं
यन्मे त्वदन्येन न दृष्टपूर्वम् ।।४७।।

**प्रसन्न भै योग[१] लिई [२]अनूप,**
**अनन्त, [३]तेजोमय, विश्वरूप ।**
**देखाइयो आदिम[४] रूप मैले,**
**नदेखिएको अधि यो कसैले ।।**

भगवानले आज्ञा गर्नुभयो - हे अर्जुन ! तिमीमाथि प्रसन्न भएर, यो तेजोमय, अनन्त, आद्य र श्रेष्ठ विश्वरूप आफ्नो अलौकिक योगसामर्थ्य बाट मैले तिमीलाई देखाएको हुँ, यो रूप तिमीबाहेक अरू कसैले पनि पहिले देखेको थिएन ।।

न वेदयज्ञाध्ययनैर्न दानै -
र्न च क्रियाभिर्न तवोभिरूग्रैः ।।
एवं रूपःशक्य अहं नृलोके
द्रष्टुं त्वदन्येन कुरूप्रवीर ।।४८।।

---

१. ईश्वरीय शक्ति । २. अनौठा । ३. तेजैतेजले युक्त । ४. पहिलेको स्वरूप ।

ती वेद-यज्ञ-स्तुति-दान-पाठ

[1]क्रिया तपस्याहरू गैह्रबाट ।

यस्तो म देख्नै अरूले सकिन्नँ

तिमीबिना पार्थ ! न होउ खिन्न[2] ।।

हे कुरूबीरहरूमा श्रेष्ठ अर्जुन ! मनुष्यलोकमा यस किसिमको स्वरूप (विश्वरूप) कसैले वेदपाठ, यज्ञहरू, स्वाध्याय, दान, कर्म अथवा ठूलाठूला उग्र-तपस्या इत्यादि गरेर पनि देख्न सक्तैन, जुन् रूपलाई तिमीले अहिले देखेका छौ ।।

मा ते व्यथा मा च विमूढभावो

दृष्ट्वा रूपं घोरमीदृङ् ममेदम् ।।

व्यपेतभीः प्रीतमनाः पुनस्त्वं

तदेव मे रूपमिदं प्रपश्य ।।४९।।

नहोउ [3]सन्तप्त [4]विमूढ जस्तो,

यो घोर-स्वरूप यस्तो,

[5]निर्धक्क निःशंक[6] खुशी भएर

यो शान्त मेरो उहि रूप हेर ।।

मेरो यस्तो घोर (भयंकर) रूपलाई देखेर आफ्ना चित्तमा व्यथा (दुःख-दिग्दारी) प्रवेश गर्न न देऊ र यसरी मूढो जस्तो न होऊ, डर हटाएर, खुशी मनले युक्त भई, मेरो उही पहिलेको स्वरूपलाई तिमी हेर ।।

---

१. कर्म । २. दिक्दार । ३. सन्ताप लिएको । ४. बेहोश । ५. न धुक धुकाई । ६. शंका नमानी ।

सञ्जय उवाच

इत्यर्जुनं वासुदेवस्तथोक्त्वा
स्वकं रूपं दर्शयामास भूयः ।।
आश्वासयामास च भीतमेनं
भूत्वा पुनः सौम्यवपुर्महात्मा ।।५०।।

यस्तो भनी पार्थमा फेरि खास,
गर्नूभयो [1]आत्मरूप-प्रकाश ।
ती भीत[2], कुन्तीसुतलाइ भूप !
फुल्याउनूभो लिई सौम्य[3]-रूप ।।

सञ्जयले बिन्ती गरे - महाराज ! यति भनेर भगवान् वासुदेवले अर्जुनलाई फेरि आफ्नो पहिलेको स्वरूप देखाउनुभयो र अनि सौम्य (शान्त) रूप धारण गरेर, महात्मा ईश्वरले डराएका अर्जुनलाई धैर्य पनि दिलाउनुभयो ।।

अर्जुन उवाच -

दृष्ट्वेदं मानुषं रूपं तव सौम्यं जनार्दन ।।
इदानीमस्मि संवृत्तः सचेताः प्रकृतिं गतः ।।५१।।

मनुष्यरूप प्रभुको देखी यो सौम्य माधव !
म झल्यास्स भई ब्यूँझें, आएँ [4]प्रकृतिमा अब ।।

अर्जुनले बिन्ती गरे - हे जनार्दन ! तपाईंको यो राम्रो र मनुष्यदेह धारण गर्ने रूपलाई देखेर अब मन ठेगानामा आयो, अहिले म पहिलेको जस्तै सावधान भएको छु ।।

---

१. आफ्नो स्वरूप को प्रकट । २. डराएका । ३. शान्तियुक्त राम्रो स्वरुप । ४. स्वभावमा ।

देवतापनि विश्वरूप देख्नचाहन्छन् ।।

श्रीभगवानुवाच-

सुदुर्दर्शमिदं रूपं दृष्टवानसि यन्मम ।।
देवा अप्यस्य रूपस्य नित्यं दर्शनकांक्षिणः ।।५२।।

नदेखिसक्नु जो मेरो देख्यौ यो [१]रूप अर्जुन !
देवता पनि चाहन्छन् यसैको [२]नित्य दर्शन ।।

भगवान्ले आज्ञा गर्नुभयो-मेरो जुन रूपलाई तिमीले देख्यौ, यसको दर्शन पाउनु बहुतै कठिन छ, देवता पनि यो रूपदेख्नालाई सर्वदा इच्छा (चाहना) गरिरहन्छन् ।।

नाहं वेदैर्न तपसा न दानेन न चेज्यया ।।
शक्य एवंविधो द्रष्टुं दृष्टवानसि मां यथा ।।५३।।

न वेद-तपले-दान-यज्ञले न त, रूप यो ।
मेरो देखिन्छ हे पार्थ ! तिमिले जुन देखियो ।।

जस्तो तिमीले विश्वरूपी मलाई देख्यौ, त्यसरी वेदहरूले, तपस्याले दानले अथवा यज्ञले पनि कोही मलाई देख्न सक्दैन ।।

भक्त्या त्वनन्यया शक्य अहमेवंविधोऽर्जुन ।।
ज्ञातुं द्रष्टुं च तत्वेन प्रवेष्टुं च परन्तप !।।५४।।

यस्तो म देख्न वा जान्न, [३]इयत्ता - साथ पाउन ।
[४]अनन्यभक्तिले मात्र सकिन्छ, बुझ अर्जुन ! ।।

हे परन्तप, अर्जुन ! केवल एकत्वभक्तिले मात्र यस प्रकार मेरो

१. विश्वरूप । २. सधैं । ३. तत्वपूर्वक । ४. अन्त चित्त नदिएको एकाग्रभक्तिले ।

ज्ञान हुनु मलाई देख्नु र ममा तत्वले प्रवेश गर्नु पनि संभव हुन सक्दछ।

सबको सार अन्तिम उपदेश-

मत्कर्मकृन्मत्परमो मद्भक्तः सङ्गवर्जितः ।।
निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डव ! ।।५५।।

[1]सङ्ग छोडेर, जो भक्त मै-संझी कर्म गर्दछ ।
सबमा जो छ [2]निर्वैर, त्यो मैमा पार्थ ! मिल्दछ ।।

हे पाण्डव ! जो यस्तो बुद्धिले कर्म गर्दछ कि, सब कर्म मेरा अर्थात् - ईश्वरका हुन् , फेरी जो मत्परायण र आसक्तिले रहित छ, अनी जो सब प्राणीमा वैरभाव राख्दैन, त्यो मेरो भक्त ममा नै मिल्न आउँदछ ।। (४६१)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'विश्वरूपदर्शनयोगो' नाम
एकादशोऽध्यायः ।।११।।

इति नेपाली भाषामा कोमलगीता 'विश्वरूपदर्शनयोगो' नाम एकादश अध्याय समाप्त ।।११।।



---

१. फलमा आसक्ति, लालच । २. वैरभाव नराख्ने ।

ॐ

# श्रीमद्भगवद्गीता

# कोमलगीता

भक्तियोग १२

## व्यक्त र अव्यक्त कुनको उपासना श्रेष्ठ-

अर्जुन उवाच-

एवं सततयुक्ता ये भक्तास्त्वां पर्युपासते ।।
ये चाप्यक्षरमव्यक्तं तेषां के योगवित्तमाः ।।१।।

[1]प्रभुका [2]भक्त यस्ता र [3]अव्यक्त - ब्रह्म-साधक ।
ती योगी दुइमा कृष्ण ! कुन हुन् श्रेष्ठ साधक[4]? ।।

अर्जुनले सोधे-यस प्रकारसँधैं युक्त अर्थात-योगयुक्त भएर, जो भक्त तपाईको (साकारको) उपासना गर्दछन् र जो अव्यक्त (निराकार ब्रह्म) को उपासना गर्दछन् , तिनमा उत्तम कर्मयोगवेत्ता कुन हुन् ।।

## व्यक्तोपासना सुलभछ -

श्रीभगवानुवाच-

मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते ।।
श्रद्धया परयोपेतास्ते मे युक्ततमा मताः ।।२।।

---

१. सगुण ब्रह्मका । २. उपासना गर्ने । ३. निर्गुण ब्रह्मका उपासक । ४. योग सिद्धि गर्ने ।

जो ममा मन राखेर, श्रद्धा लीकन भज्दछन् ।
ती[1]युक्त-चित्त [2]योगी नै योग जान्ने ठहर्दछन् ।।

भगवान्ले आज्ञा गर्नुभयो-ममा मन लगाएर, सदा युक्तचित्त भई, ठूलो श्रद्धासँग जो मेरो उपासना गर्दछन्, ती मेरा मतमा सबभन्दा उत्तम युक्त अर्थात् योगी ठहर्दछन् ।।

ये त्वक्षरमनिर्देश्यमव्यक्तं पर्युपासते ।।
सर्वत्रगमचिन्त्यं च कूटस्थमचलं ध्रुवम् ।।३।।

जो [3]अप्रत्यक्ष, अव्यक्त, सर्वव्यापी [4]निरंजन ।।
मूल, [5]निश्चले, नित्य, भज्छन् [6]अक्षर अर्जुन ! ।।

सन्नियम्येन्द्रियग्रामं सर्वत्र समबुद्धयः ।।
ते प्राप्नुवन्ति मामेव सर्वभूतहिते रताः ।।४।।

ती सर्वेन्द्रिय[7] रोकेर बुद्धि ली सबमा [8]समा ।
साराको हितमा लाग्ने, आइपुग्छन् सबै ममा ।।

परन्तु जो पुरूष, अनिर्देश अर्थात् - प्रत्यक्ष नदेखिने, अव्यक्त, सर्वव्यापी, अचिन्त्य र कूटस्थ अर्थात् सबको मूलस्वरूप, अचल र नित्य अक्षरको अर्थात् ब्रह्मको उपासना सब इन्द्रियलाई रोकेर, सर्वत्र समबुद्धि राख्दै गर्दछन् ती सब प्राणीको हितमा तत्पर रहनेहरू पनि मलाई नै पाउँदछन् ।।

क्लेशोऽधिकतरस्तेषामव्यक्तासक्तचेतसाम् ।।
अव्यक्ता हि गतिर्दुखं देहवद्भिरवाप्यते ।।५।।

---

१. निष्कामकर्मले ठीक चित्त भएका । २. कर्मयोगी । ३. नदेखिने । ४. इन्द्रियको गति पुग्न नसक्ने । ५. स्थिर । ६. अक्षर ब्रह्म । ७. सारा इन्द्रिय ।८. बराबरी ।

[१]अव्यक्त भज्ने योगीमा बहुते दुःख पर्दछ ।
[२]अव्यक्तमार्ग देहीको[३]कष्ट[४]-साध्य ठहर्दछ ।।

त्यस्तै हो साधनि, तिनको चित्त अव्यक्तमा आसक्त रहेको हुनाले, कष्ट ज्यादै पर्दछ, किनभने व्यक्तदेहधारी मनुष्यहरूलाई अव्यक्तोपासनाको मार्ग कष्टसँग मात्र सिद्ध हुन सक्दछ ।।

ये तु सर्वाणि कर्माणि मयि संन्यस्य मत्पराः ।।
अनन्येनैव योगेन मां ध्यायन्त उपासते ।।६।।

जस्ले सारा कर्मलाई गरी मैमा समर्पण ।
अनन्य[५] - योगले मेरो गर्छन् ध्यान-उपासन[६] ।।

तेषमहं समुद्धर्ता मृत्युसंसारसागरात् ।।
भवामि न चिरात्पार्थ ! मय्यावेशितचेतसाम् ।।७।।

विलम्ब नगरी मृत्यु[७]-संसारोदधिबाट म ।
ती म भज्नेहरूलाई उतार्दछु [८]ससंभ्रम ।।

परन्तु, जो ममा सब कर्मको संन्यास अर्थात् - समर्पण गरेर, मत्परायण हुँदै, अनन्योगले (एकत्व भक्तिले) मेरो ध्यान गरी, मलाई भज्दछन् , हे पार्थ ! ममा चित्त लगाउने तिनीहरूलाई म यो मृत्युमय संसाररूपी महासागरबाट विलम्ब नगरी उद्धार गर्दछु ।।

मय्यैव मन आधत्स्व मयि बुद्धिं निवेशय ।।
निवसिष्यसि मय्यैव अत ऊर्ध्वं न संशयः ।।८।।

---

१. निर्गुण ब्रह्म । २. थाहा नभएको बाटो । ३. व्यक्तदेह लिनेको ।४. दुःखले पार गर्न सकिने । ५. अन्यत्र नगएको एकाग्र मनले । ६. सेवा । ७. जन्म-मरणले युक्त भएको संसाररूपी ठूलो समुद्रबाट।८. हडबडाउँदै ।

**मन राख ममा, मैमा बुद्धि राख, धनञ्जय ! ।**
**अनी पछि तिमी मैमा बस्नेछौ, छैन [1]संशय ।।**

यस कारण, ममा नै मन लगाऊ ममा नै बुद्धि स्थिर गरी राख, यसो गरयौ भने, तिमी अवश्यमेव ममा नै वास गर्नेछौ ।।

अभ्यासादिमा कर्मफल त्यागश्रेष्ठ -

अथ चित्तं समाधातुं न शक्नोषि मयि स्थिरम् ।।
अभ्यासयोगेन ततो मामिच्छाप्तुं धनञ्जय ।।९।।

**सक्तैनो यदि यो चित्त स्थिर गर्न ममा भने ।**
**[2]अभ्यास-योगले पार्थ ! इच्छा राख म पाउने ।।**

अब यसरी ममा एकाग्रताले चित्तलाई स्थिर गर्न सकिएन भने हे धनञ्जय ! अभ्यासको सहायताले अर्थात् - वारंवार कोशिश गरेर मलाई पाउनाको आशा राख ।।

अभ्यासेऽप्यसमर्थोऽसि मत्कर्मपरमो भव ।।
मदर्थमपि कर्माणि कुर्वन्सिद्धिमवाप्स्यसि ।।१०।।

**अभ्यास गर्न नसके, म मिल्ने कर्म नै गर ।**
**मेरा निंति गरी कर्म, पाउला सिद्धि [3]सत्वर ।**

यदि तिति अभ्यास गर्नालाई पनि समर्थ छैनो भने मलाई प्राप्त गर्न शास्त्रमा बताइएका ज्ञान, ध्यान, भजन, पूजा, पाठ इत्यादि कर्म गर, मेरा निमित्त यी कर्म गर्नाले पनि तिमी सिद्धि पाउनेछौ ।

अथैतदप्यशक्तोऽसि कर्तुमद्योगमाश्रितः ।।
सर्वकर्मफलत्यागं ततः कुरू यतात्मवान् ।।११।।

---

१. सदेह । २. लगातार कोशिश । ३. चाँडो ।

**यो पनी नसके गर्न, मेरो योग लिईकन ।**

**सारा कर्मफल त्याग गर [1]निष्काम भैकन ।।**

परन्तु यस्तो गर्न पनि तिमी असमर्थ छौ भने, उद्योग (मदर्पणपूर्वकयोग) अर्थात् - कर्मयोगको आश्रय गरेर, यतात्मा बनेर, अर्थात् क्रमशः चित्तलाई रोक्दै, आखिरमा सब कर्मका फललाई त्याग गरिदेऊ ।।

**श्रेयो हि ज्ञानमभ्यासाज्ज्ञानाद्ध्यानं विशिष्यते ।।**

**ध्यानात्कर्मफलत्यागस्त्यागाच्छान्तिरनन्तरम् ।।१२।।**

**अभ्यास, ज्ञान र ध्यान, फलको त्याग येतिमा ।**

**[2]उत्तरोत्तर छन् श्रेष्ठ , त्यागैले पुग्छ शान्तिमा ।।**

किनभने अभ्यासभन्दा ज्ञान श्रेष्ठ छ, ज्ञानभन्दा ध्यानको योग्यता अधिक छ, ध्यानको अपेक्षा कर्मफलको त्याग उत्तम छ, यही कर्मफलको त्यागबाट तुरन्त नै शान्ति प्राप्त हुन्छ ।।

भक्तका स्थिति र भगवान्का प्यारा -

**अद्वेष्टा सर्वभूतानां मैत्रः करूण एव च ।**

**निर्ममो निरहंकारः समदुःखसुखः क्षमी ।।१३।।**

**कसैमा द्वेष[3] नलिने [4]दयावान् ,मित्र निर्मम[5] ।**

**[6]क्षमावान् [7]निरहंकार सुख दुःखादिमा सम [8]।।**

जो कसैलाई द्वेष पनि गर्दैन , जो सबैसित मित्रताको भावले बर्ताव गर्दछ, जो ममत्वबुद्धि र अहङ्कारले रहित छ, र जो सुख दुःखमा समान र सहनशील छ ।।

---

१. कामनारहित । २. पछिल्लो पछिल्लो । ३. डाह । ४. दयालु । ५. ममता नभएको । ६. सहने । ७. अहंकारले रहित । ८. बराबर ।

सन्तुष्टः सततं योगी यतात्मा दृढनिश्चयः ।।
मय्यर्पितमनोबुद्धिर्यो मे भक्तः, स मे प्रियः ।।१४।।

सन्तोषी, [१]नित्य-युक्तात्मा, [२]संयमी दृढ-निश्चय[३] ।
मन-बुद्धि ममा राख्ने, भक्त मेरो छ त्यो प्रिय ।।

जो सदा सन्तुष्ट छ, जो इन्द्रिय निग्रह गर्ने र दृढनिश्चयी बनेको छ, जसले आफ्नो बुद्धि र मन ममा अर्पण गरेको छ, त्यस्तो, कर्मयोगी भक्त मलाई प्यारो लाग्दछ ।।

यस्मान्नोद्विजते लोको लोकान्नोद्विजते च यः ।।
हर्षामर्शभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः ।।१५।।

झिंजिन्न [४]लोक जसबाट, लोकदेखि झिंजिन्न जो ।
[५]भय हर्षादिले [६]शून्य, त्यो मेरो प्रिय भक्त हो ।।

जसबाट न त लोकहरूलाई क्लेश हुन्छ, र जो न त लोकहरूबाट क्लेश पाउँदछ, अनि यस्तै जो हर्ष, भय क्रोध र दिग्दारीले रहित भएको छ, त्यही पुरुष मेरो प्यारो छ ।।

अनपेक्षः शुचिर्दक्ष उदासीनो गतव्यथः ।।
सर्वारंभपरित्यागी यो मद्भक्तः स मे प्रियः ।।१६।।

[७]अविकारी [८]उदासीन पवित्र, [९]निरपेक्षक ।
[१०]दक्ष [११]कर्मफलत्यागी, भक्त हुन्छ बडो प्रिय ।।

---

१. कर्मयोग गर्ने । २. इन्द्रिय रोक्ने । ३. एकमा पक्का निश्चय गर्ने ।४. दुनियां ।५. डर, हर्ष, रिस खेदले । ६. रहित भएको ।७. सुख दुःखमा मन नबिग्रने । ८. कर्मफलको वास्ता नराख्ने । ९. काम्यफल छोड्ने । १०. चतुर । ११. कर्मफल त्याग गर्ने ।

मेरो त्यही भक्त मलाई प्यारो छ, जो निरपेक्ष अर्थात् केही चाहँदैन, पवित्र र दक्ष छ अर्थात् जे काम पनि आलस्य छोडेर गर्दछ, जो फलको विषयमा उदासीन छ, जसलाई कुनै पनि विकारले डगाउन सक्दैन, र जसले काम्यफलका सब आरम्भ अर्थात् उद्योगलाई छोडोदिएको छ ।।

यो न हृष्यति न द्वेष्टि न शोचति न कांक्षति ।।
शुभाशुभपरित्यागी भक्तिमान्यः स मे प्रियः ।।१७।।

**जो न खूश छ, न द्वेष-शोक-इच्छादि गर्दछ ।**
**शुभाशुभ-फलत्यागी, भक्त प्यारो ठहर्दछ ।।**

जो न के पाई खुश हुन्छ, न केहीको द्वेष गर्दछ, जो न शोक गर्दछ न त केही कुराको इच्छा राख्दछ, जसले कर्मका शुभर अशुभ फल सबै छोडिएका छन् , त्यो भक्तिमान् पुरूष मलाई प्रिय हुन्छ ।।

समः शत्रौ च मित्रे च तथा मानापमानयोः ।।
शीतोष्णसुखदुःखेषु समः सङ्गविवर्जितः ।।१८।।

**शत्रुमा मित्रमा तुल्य शीतोष्ण-सुखदुः खमा ।**
**निन्दा र स्तुतिमा तुल्य तुल्यै मानापमानमा ।।**

तुल्यनिन्दास्तुतिर्मौनी सन्तुष्टे येन केनचित् ।।
अनिकेतः स्थिरमतिर्भक्तिमान्मे प्रियो नरः ।।१९।।

**जो छ आसक्तिले शून्य, सन्तोषी, [1]मितभाषण ।**
**स्थिरचित्त[2]गृह-त्यागी, हो प्यारो भक्त त्यो जंन ।**

---

१. परिमित बोल्ने । २. कर्मफलरूपी घर छोड्ने ।

जसलाई शत्रु र मित्र, मान र अपमान, सर्दी र गर्मी, दुःख र सुख एकैनास लाग्दछन् र जसलाई केहीमा पनि आसक्ति रहेको छैन, अनि जसलाई निन्दा र तारीफ समानै ठहर्दछन्, जो परिमित बोल्दछ, जो जेसुकै परिआएमा पनि उसैमा सन्तुष्ट हुन्छ, एवं जसको चित्त स्थिर छ, जसको कर्मफलाशारूप अभिलाषा केहीमा पनि रहेको छैन, उही भक्तिमान् पुरूष मलाई प्रिय लाग्दछ ।।

**येतु धर्म्यामृतमिदं यथोक्तं पर्युपासते ।।**
**श्रद्धाना मत्परमा भक्तास्तेऽतीव मे प्रियाः ।।२०।।**

**[१]यो [२]धर्मामृतको जस्ले गर्छन् नित्यै [३]समाश्रय ।**
**[४]श्रद्धालु, ती परंभक्त हुन् मेरा बहुतै प्रिय ।।**

माथि बताइएको यो अमृत-तुल्य धर्मलाई जुन पुरूष मत्परायण (मैमा तन्मय) हुँदै श्रद्धापूर्वक आचरण गर्दछन्, ती भक्त मेरा अत्यन्तै प्यारा हुन्छन् ।।(४८९)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे

श्रीकृष्णार्जुनसंवादे 'भक्तियोगो' नाम

द्वादशोऽध्यायः ।।१२।।

इति नेपालीभाषामाकोमलगीता भक्तियोग

द्वादश अध्याय समाप्त ।।१२।।



१. पहिले कहिएको । २. धर्मरुप अमृतको । ३. सेवा । ४. श्रद्धा राख्ने ।

# श्रीमद्भगवद्गीता

## कोमलगीता

क्षेत्र-क्षेत्रज्ञ-विचार-योग १३

### क्षेत्र क्षेत्रज्ञको व्याख्या र तिन्को ज्ञान -

अर्जुन उवाच-

[1]प्रकृतिं पुरूषं चैव क्षेत्रं क्षेत्रज्ञमेव च ।
एतद्वेदितुमिच्छामि ज्ञानं ज्ञयं च केशव ! ।। (क्षेपक)

कृष्ण ! 'क्षेत्र' र 'क्षेत्रज्ञः', त्यस्तै प्रकृति 'पूरूष',
अनि त्यो 'ज्ञान' र 'ज्ञेय' , जान्न चाहन्छु यो सब ।

अर्जुनले सोधे-हे केशव ! मलाई प्रकृति, पुरूष, क्षेत्र, क्षेत्रज्ञ, ज्ञान र ज्ञेय यति जान्नाको इच्छा छ, वर्णन गर्नुहोस् ।।

श्रीभगवानुवाच-

इदं शरीरं कौन्तेय ! क्षेत्रमित्यभिधीयते ।।
एतद्यो वेत्ति तं प्राहुः क्षेत्रज्ञ इति तद्विदः ।।१।।

यही शरीर कौन्तेय ! 'क्षेत्र' यो नाम पाउँछ ।
यस्लाई राम्ररी जान्ने 'क्षेत्रज्ञ' कहलाउँछ ।।

---

१. यो श्लोक गीताको पाठ होइन, धेरै आचार्यहरूले क्षेपक मानेका छन् ।

भगवान्ले वर्णन गर्नुभयो-हे कौन्तेय ! यही शरीरलाई 'क्षेत्र' भन्दछन् यस शरीर तत्वलाई जो जान्दछ, त्यसलाई शरीरशास्त्रको तत्व जान्नेहरू 'क्षेत्रज्ञ' भनेर बताउँछन् ।।

क्षेत्रज्ञं चापि मां विद्धिसर्वक्षेत्रेषु भारत ।।
क्षेत्रक्षेत्रज्ञयोर्ज्ञानं यत्तज्ज्ञानं मतं मम ।।२।।

सारा क्षेत्रहरू-मध्ये म हूँ [1]'क्षेत्रज्ञ' भारत !
क्षेत्र-क्षेत्रज्ञको ज्ञान, हो मेरै ज्ञान निश्चित[2] ।

हे भारत ! सब क्षेत्रहरूमा क्षेत्रज्ञ पनि मलाई नै संझ, क्षेत्र र क्षेत्रज्ञको जो ज्ञान छ, त्यही ज्ञान मेरो अर्थात् परमेश्वरको हो भनी ज्ञानीहरूले मानिएको छ ।।

यस्को वेद ब्रह्मसूत्रबाट विचार -

तत्क्षेत्रं यच्च यादृक्च यद्विकारि यतश्च यत् ।।
स च यो यत्प्रभावश्च तत्समासेन मे शृणु ।।३।।

क्षेत्र के हो ?उ [3]कस्तो छ ? जो देखी जो विकारी छ ।
त्यस्तै क्षेत्रज्ञ कस्तो छ? भन्छू संक्षेपले[4] सब ।।

क्षेत्र के हो ? त्यो कुन प्रकारको छ ? त्यसका कुन कुन विकार छन् ? त्यसमा पनि केबाट हुन्छ ? त्यस्तै क्षेत्रज्ञ कुन हो ? त्यसको प्रभाव के छ? यो सब म संक्षेपले वर्णन गर्दछु सुन ।।

ऋषिभिर्बहुधा गीतं छन्दाभिर्विविधैः पृथक ।।
ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्चितैः ।।४।।

यो गाए धेर ऋषिले, वेदले, [5]ब्रह्मसूत्रले ।
पृथक पृथक दिई [6]हेतु, पूर्ण [7]निश्चित-रूपले ।।

१. ज्ञाता । २. पक्का । ३. के सामर्थ्यको छ । ४. छोट्करी गरेर ५. वेदान्तसूत्रले । ६. कारण । ७. सिद्धान्तस्वरूपले ।

वेदहरूले र ब्रह्मसूत्रका पदहरूले पनि यो विषय गाइएको छ, यसलाई धेरै ऋषिहरूले पनि नाना प्रकारसँग अनेक छन्दमा पृथक पृथक गरेर कार्यकारणरूप हेतु देखाई पूर्णरूपले निश्चित गरिएको छ।।

क्षेत्र स्वरूपको लक्षण -

महाभूतान्यहंकारो बुद्धिरव्यक्तमेव च ।।
इन्द्रियाणि दशैकं च पञ्च चेन्द्रियगोचराः ।।५।।

पाँच-[१]भूत अहंकार, [२]बुद्धि, [३]प्रकृति, आठ र ।
एघारै [४]इन्द्रियहरू, पाँच इन्द्रिय गोचर[५] ।।

इच्छा द्वेषः सुखं दुःखं संघातश्चेतना धृतिः ।।
एतत्क्षेत्रं समासेन सविकारमुदाहृतम् ।।६।।

द्वेष, इच्छा दुःख, सुख, धैर्य, [६]संघात, [७]चेतन ।
[८]सविकार यही [९]क्षेत्र कहिएको छ अर्जुन ?

महाभूत (अर्थात् - पृथिवी, जल, तेज, वायु, आकाश यी पाँच स्थूलभूत) अहंकार, बुद्धि, अव्यक्त (प्रकृति) दश सूक्ष्म इन्द्रिय (अर्थात् चक्षु, श्रोत्र घ्राण, रसना, त्वक्, पाणि, पाद, पायु, उपस्थ), एक मनः पाँच ज्ञानेन्द्रियका पाँच सूक्ष्म विषय (अर्थात् रूप, शब्द, गन्ध, रस, स्पर्श) इच्छा, द्वेष, सुख, दुःख संघात (स्थूल देहको पिण्ड), चेतना (प्राणी आदिको व्यक्त व्यापार, धृति (धैर्य) यो ३१ तत्वको समुदायलाई सविकार 'क्षेत्र, भन्दछन् ।।

---

१. पृथ्वी आदि । २. महत्तत्व । ३. अव्यक्त । ४. मन आदि । ५. इन्द्रियका विषय (रूप आदि) ६. स्थूल-देहपिण्ड । ७. प्राणचलन व्यापार । ८. विकराले सहित । ९. शरीर ।

ज्ञानको लक्षण र त्योभिन्न अज्ञान-

अमानित्वमदंभित्वमहिंसा क्षान्तिरार्जवम् ।।
आचार्योपासनं शौचं स्थैर्यमात्मविनिग्रहः ।।७ ।।

[1]क्षमा, [2]अहिंसा [3]ऋजुता, [4]मान दंभादिहीनता ।
[5]मनोनिग्रह, र [6]स्थैर्य [7]गुरुसेवा, [8]पवित्रता ।।

अभिमानले रहित हुनु, छल नहुनु, परपीडा नगर्नु, सहनु, सोझो हुनु गुरुसेवा गर्नु, पवित्र हुनु, स्थिर रहनु, मनलाई रोक्नु ।।

इन्द्रियार्थेषु वैराग्यमनहंकार एव च ।।
जन्ममृत्युजराव्याधिदुःखदोषानुदर्शनम् ।।८।।

विरागि[9] विषयमा अहंकार[10] हटाउनू ।
जन्म-मृत्यु [11]जराव्याधि-दुःख-दोषादि[12] देखनू ।।

इन्द्रियका विषयहरुमा विरक्त हुनु, अहंकार नहुनु, जन्म-मरण-बुड्याँई रोग दुःख हरुलाई आफ्ना पछि पछि लागेका दोष हुन् भनी संझनु ।।

असक्तिरनभिष्वङ्गः पुत्रदारगृहादिषु ।।
नित्यं च समचित्तत्वमिष्टानिष्टोपपत्तिषु ।।९।।

नलुट्पुटिनु पुत्र-स्त्री-गृहमा, संङ्ग छोडनु ।
[13]इष्टानिष्ट-विषे नित्य समानै मन राखनु ।।

---

१. सहनशीलता । २. बिगार नगर्नु । ३. सीधापना । ४. अभिमान र छलकपट नलिनु । ५. मन वश गर्नु । ६. नहड् बडानु । ७. मान्यजनको संम्मान ८. भित्रबाहिरको सफाई । ९. वैराग्य लिनु । १०. अहंकारीपना । ११. बुढ्याई । १२. बिगार गर्ने (शत्रुइत्यादि) १३. भलो र कुभलोमा।

कर्ममा आसक्ति नलिनु, बाल-बच्चा, स्त्री घरगृहस्थी इत्यादिमा लम्पट् नुहनु, इष्टर अनिष्ट कुरा आइपरेमा पनि चित्तवृत्ति समानै राख्नू ।।

मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी ।।
विविक्तदेशसेवित्वमरतिर्जनसंसदि ।।१०।।

समाजमा न रहनू, सदा [1]एकान्त सेवनू,
[2]एकत्व-योगले मैमा भक्ति निश्चल[3] राख्नू ।।

अनि ममा अनन्य भावले अटल भक्ति राख्नु, एकान्त स्थानमा रहनु, साधारण जनहरूको समाजलाई प्रसन्न नगर्नु, अर्थात् त्यहाँ नबस्नु ।।

अध्यात्मज्ञाननित्यत्वं तत्वज्ञानार्थदर्शनम् ।।
एतज्ज्ञानमिति प्रोक्तमज्ञानं यदतोऽन्यथा ।।११।।

अध्यात्म[4]विद्या हो नित्य ठान्नू [5]तत्वार्थ संझनू ।
यै मात्र ज्ञान हो भन्छन् , [6]अरू अज्ञान बूझनू ।।

अध्यात्मलाई नित्य संझनु र तत्वज्ञानका सिद्धान्तहरूको परिशीलन अर्थात् -मनन गर्नु, यी बीस (२०) लाई ज्ञानभन्दछन् यी बाहेक जो कुछ छन् , ती सब अज्ञान हुन् भनेर बताउँछन् ।

ज्ञेयको स्वरूपको लक्षण-

ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते ।
अनादिमत्परं ब्रह्म न सत्तन्नासदुच्यते ।।१२।।

पार्थ ! ज्ञेय पनी भन्छु जो जान्दा मोक्ष मिल्दछ ।
त्यो [7]अनादि, पर ब्रह्म, सत् असत् बाट दूर छ ।।

---

१. एकान्त स्थान । २. ईश्वरमा एकाग्रतायुक्त योगले । ३. अटल(दृढ) ४. आत्मविषयको ज्ञान । ५. सिद्धान्त तत्व बारंबार विचार गर्नु । ६. ज्ञान बाहेकका । ७. जसको पहिले केही छैन त्यो ।

अब म तिमिलाई त्यो ज्ञेय बताऊँछु, जसलाई जानि-लिनाले अमृत अर्थात् मोक्ष पाइन्छ त्यो सबभन्दा परको अनादि ब्रह्म हो न त्यसलाई सत् भन्दछन् न त असत भन्दछन् ।।

सर्वतः पाणिपादं तत्सर्वतोऽक्षिशिरोमुखम् ।
सर्वतः श्रुतिमल्लोके सर्वमावृत्य तिष्ठति ।।१३।।

**त्यो हात, पाउ, आंखा र मुख कान तथा शिर**
**सबैतर्फ भएको छ, ढाकेको छ सबैतिर ।**

त्यस (ब्रह्म) का जतातै हातपाउ छन् , चारौंतर्फ आंखा, शिर र मुखहरू छन् सबैतिर कानहरू फैलिएका छन् त्यो नै यस लोकमा सबलाई ब्याप्त गरी बसेको छ ।।

सर्वेन्द्रियगुणाभासं सर्वेन्द्रियविवर्जितम् ।।
असक्तं सर्वभृच्चैव निर्गुणं गुणभोक्तृ च ।।१४।।

**जस्मा छ गुणको झल्का, तर [१]इन्द्रिय-शून्य छ ।**
**फरकै छ जगत् [२]धर्छ, [३]निर्गुणी गुण भोग्दछ ।।**

त्यस (ब्रह्म) मा सब इन्द्रियको गुणहरूको आभास छ, परन्तु त्यसको कुनै पनि (विषयोपभोगी) इन्द्रियछैन, त्यो सबैदेखि अलग भएर पनि सबलाई धारण गर्दछ र निर्गुण भएर पनि गुणहरूको उपभोग गर्दछ।।

बहिरन्तश्च भूतानामचरं चरमेव च ।।
सूक्ष्मत्वात्तदविज्ञेयं दूरस्थं चान्तिके च तत् ।।१५।।

**त्यै [४]चराचर हो, तेही प्राणीको भित्र-बाहिर ।**
**मिहीं हुँदा त्यो जानिन्न, तयै नगीच त्यही पर ।।**

---

१. इन्द्रिय रहित । २. धारण पालन गर्छ । ३. सत्व-रज-तम यी तीन गुण नभएको छ तापनि । ४. हिड्ने र न हिंडने ।

त्यो (ब्रह्म) सब प्राणीहरूको भित्र र बाहिर पनि छ, अक्षर छ औ चर पनि छ, ज्यादा नै सूक्ष्म हुनाले त्यो जानिदैन, अनि त्यो टाढ़ा रहीकन नगीचमा पनि छ ।।

अविभक्तं च भूतेषु विभक्तमिव च स्थितम् ।।
भूतभर्तृ च यज्ज्ञेयं ग्रसिष्णु प्रभविष्णु च ।।१६।।

**अखण्डित[1] पनि वस्छ प्राणीमा भिन्न भिन्न झैं,**
**त्यै ज्ञेय[2] सृष्टिकर्ता छ, [3]हर्ता [4]भर्ता छ त्यै सधैं ।।**

त्यो (ब्रह्म) वास्तविक अखण्डित भएर पनि सब प्राणीमा मानो भिन्न भिन्न रहेको जस्तो भई बसेको छ औ सब प्राणीलाई पाल्ने, संहार गर्ने र उत्पन्न गर्ने पनि उसलाई नै संझनुपर्दछ ।।

ज्योतिषामपि तज्ज्योतिस्तमसः परमुच्यते ।
ज्ञानंज्ञेयं ज्ञानगम्यं हृदि सर्वस्य विष्ठितम् ।।१७।।

**ज्योतिको पनि त्यो ज्योति [5]तमदेखि परै [6]स्थित ।**
**त्यै [7]ज्ञानगम्य त्यै ज्ञान,ज्ञेय त्यै हृदयस्थित[8] ।।**

उस (ब्रह्म) लाई नै तेजको पनि तेज र अन्धकार (अज्ञान) भन्दा पर रहेको छ भनी बताउँछन् , अनि ज्ञान र जो जान्न योग्य छ त्यस्तो ज्ञेय औ ज्ञानगम्य अर्थातज्ञानले मात्र जानिने त्यही छ, फेरी सबैका हृदयमा पनि त्यही बसेको छ ।।

**यो सब जान्नाको फल-**

इति क्षेत्रं तथा ज्ञानं ज्ञेयं चोक्तं समासतः ।।
मद्भक्त एतद्विज्ञाय मद्भवायोपद्यते ।।१८।।

---

१.वास्तविक अलग नभएको । २. ब्रह्म । ३. संहारकर्ता । ४. पालनकर्ता। ५. आज्ञानरूपी अन्धकारदेखी । ६. रहेको । ७. ज्ञानले मात्र जानिने । ८. हृदयमा रहेको ।

यस्तो संक्षेपले क्षेत्र ज्ञान ज्ञेय सबै भने ।
मेरो भक्त यही जानी, मैमा मिल्न आउने ।।

क्षेत्र, ज्ञान, ज्ञेय (क्षेत्रज्ञ) केलाई भन्दछन् , त्यो सब यस प्रकार संग संक्षेपले बताएँ, मेरो भक्तले यो सब जानेर मेरो स्वरुप पाउँदछ ।।

प्रकृति र पुरुषको विवेक -

प्रकृतिं पुरुषं चैव बिद्धयनादी उभावपि ।।
विकारांश्च गुणांश्चैव विद्धि प्रकृतिसंभवान् ।।१९।।

[1]पुरुष-प्रकृति दोटै, [2]अनादि भनि भन्दछन् ।
[3]विकार वा [4]गुणहरु प्रकृतिबाट बन्दछन् ।।

प्रकृति र पुरुष दुवैलाई अनादि अर्थातसब- सबभन्दा पहिलेका हुन् भनेर जान, अनि विकार र गुणहरु जो छन् ती सब प्रकृतिबाट नै उत्पन्न भएका हुन् भनी संझना राख ।।

कार्यकारणकर्तृत्वे हेतुः प्रकृतिरुच्यते ।।
पुरुषः सुखदुःखानां भोक्तृत्वे हेतुरुच्यते ।।२०।।

देहेन्द्रियादि[5] चल्दामा हुन्छे प्रकृति कारण[6] ।
सुख दुःखादि भोग्दामा, हुन्छ पुरुष कारण ।।

कार्य अर्थातदेहहरु र कारण अर्थात् इन्द्रियहरूको कर्तृत्व (चलाउनाका निमित्त प्रकृति नै कारण (कर्ता) बताइन्छ, और कर्ता होइन त पनि सुख-दुःखहरूलाई भोग गर्नाका निमित्त पुरुष अर्थात् क्षेत्रज्ञ कारण हो भनेर मानिएको छ ।।

---

१. परमात्मारमाया । २. सबका आदि । ३. संसारका यावत वस्तु । ४. सत्व रज तमोगुण । ५. शरीर र इन्द्रियहरु । ६. कर्ता ।

पुरुषः प्रकृतिस्थो हि भुङ्क्ते प्रकृतिजान्गुणान् ।।
कारणं गुणसंगोऽस्य यदसद्योनिजन्मसु ।।२१।।

गुण भोग्छ प्रकृतिका [1]प्रकृति-स्थित पुरुष ।
[2]सत् -असत् - जन्मको हेतु[3] यस्को त्यै गुण[4] संङ्ग छ ।।

किनभने पुरुष प्रकृतिमा अधिष्ठित भएर प्रकृतिका गुणहरूको उपभोग गर्दछ र प्रकृतिका गुणहरूसंगको यही संयोग नै त्यस पुरुषलाई असल र न असल योनिहरूमा जन्मनाका निमित्त कारण बन्न आउँदछ।।

प्रकृतिपुरुष ज्ञानले जन्म हुन्न -

उपद्रष्टाऽनुमन्ता च भर्ता भोक्ता महेश्वरः ।।
परमात्मेति चाप्युक्तो देहेऽस्मिन्पुरुषः परः ।।२२।।

देख्ने, [5]मान्ने, बुद्धि[6] गर्ने, भोग्ने यो देहमा सब ।
कहिन्छ परमात्मा र महेश पर पूरुष ।।

प्रकृतिका गुणहरुको उपद्रष्टा अर्थातनगीचै बसेर हेर्ने साक्षी, अनुमोदन गर्ने (सल्लाहदिने), प्रकृतिका गुणलाई बढाउने र उपभोग गर्ने लाई नै यस देहमा पर-पुरुष महेश्वर र परमात्मा पनि भन्दछन् ।।

य एवं वेत्ति पुरुषं प्रकृतिं च गुणैः सह ।।
सर्वथा वर्तमानोऽपि न स भूयोभिजायते ।।२३।।

बुझेर यसरी भिन्न गुण-प्रकृति-पूरुषः ।
जे गरोस् तापनी फेरि जन्मदैन उ मानिस ।।

---

१. प्रकृतिमा अधिष्ठित भएको । २. ऊचनीच जुनीको । ३. कारण । ४. प्रकृतिका गुणसंगको संयोग नै । ५. हुन्छ, ठीक छ, मनी सल्लाह दिने । ६. बढाउने ।।

यस प्रकारले जो, पुरुष (आत्मा) लाई निर्गुण र प्रकृतिलाई नै गुणहरूले सहित जान्दछ, त्यसले जस्तोसुकै आचरण गरोस् तापनि त्यसको पुनर्जन्म हुँदैन ।।

आत्मज्ञान का मार्ग-

ध्यानेनात्मनि पश्यन्ति के चिदात्मानमात्मना ।।
अन्ये सांख्येन योगेन कर्मयोगेन चापरे ।।२४।।

**आत्मालाई कुनै देख्छन् , आफैमा ध्यानयोगले ।।**
**सांख्ययोग[1] लिई कोही कोही ता [2]कर्मयोगले ।।**

कोही पुरुष ध्यानयोग गरेर आफ्नै अन्तःकरणमा आत्मालाई खुद देख्दछन् , कोही सांख्ययोगले देख्दछन् र कुनै कर्मयोगले देख्दछन्।।

अन्ये त्वेवमजानन्तः श्रुत्वाऽन्येभ्य उपासते ।
तेऽपि चातितरन्त्येव मृत्युं श्रुतिपरायणाः ।।२५।।

**यो न जान्ने अरूबाट सुनी भजन गर्दछन् ।।**
**श्रुति[3] प्रमाणले भज्ने ती पनि मृत्यु तर्दछन् ।।**

परन्तु, यस्ता प्रकारयंग जसलाई आफ्नो आत्मामा ज्ञान हुँदैन, तिनि अरूबाट सुनेर परमेश्वरको भजन गर्दछन् , सुनिएको कुरालाई प्रमाण मानेर बर्ताव गर्ने ती पुरुषहरू पनि मृत्युलाई पार गरेर जान्छन।।

परमेश्वर प्रयत्नलेपायिन्छ -

यावत्संजायते किञ्चित्सत्त्वं स्थावरजङ्गमम् ।
क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विद्धि भरतर्षभ ।।२६।।

---

१. ज्ञानयोग । २. निष्काम कर्मयोगले । ३. सुनको कुरो प्रमाणलिएर।

चराचर सबै वस्तु जो उब्जन्छन् थरी-थरी ।
त्यो जान पार्थ ! क्षेत्रज्ञ[1]-क्षेत्र-संयोगले गरी ।।

हे भरत श्रेष्ठ ! यो राम्ररी संझना राखकि, स्थावर या जंगम कुनै पनि चीजको निर्माण (रचना) क्षेत्र र क्षेत्रज्ञको संयोगबाट नै भएको हो ।।

समं सर्वेषु भूतेषु तिष्ठन्तं परमेश्वरम् ।
बिनश्यस्त्वविनश्यन्तं यः पश्यति स पश्यति ।।२७।।

सबैमा सम भै बस्ने, नासिंदा [2]ती ननासिने ।
परमेश्वर जो देख्छ उही हो [3]तत्व सझने ।।

सब भूत (प्राणी) मा एकैनास रहने र जो सब भू[illegible] पनि नाश नहुने हो भनी यस्तो परमेश्वरलाई जसले देख्यो, त्यही पु[illegible] सच्चा तत्व पहिचान्यो ।।

समं पश्यन्हि सर्वत्र समवस्थितमीश्वरम् ।।
न हिनस्त्यात्मनात्मानं ततो याति परां गतिम् ।।२८।।

जस्ले ईश्वर एकै छन् सबमा भनि जान्दछ ।
[4]आत्माको [5]घात गर्दैन, त्यो [6]परं गति पाउँछ ।।

ईश्वरलाई सर्वत्र बराबरै व्याप्त छन् भन्ने संझेर जो परुष आफ्नो आफैले घात गर्दैन अर्थात् आप से आप असल मार्गमा लाग्दछ, यसो गरयो भने, त्यसले उत्तमगति (मोक्ष) पाउँदछ ।।

प्रकृति र आत्मा छिह्नले ब्रह्म प्राप्ति-

प्रकृत्यैव च कर्माणि क्रियमाणानि सर्वशः ।।
यः पश्यन्ति तथात्मा[illegible]कर्तारं स पश्यति ।।२९।।

---

१. क्षेत्रज्ञ र क्षेत्रको संयोग हुनाले । २.सारा चीज ।३. साँचो कुरो । ३. अन्तरात्माको । ५. विनाश । ६. मुक्ति ।

**कर्म सारा प्रकृतिले गरिंदा छन् अनेकन् ।**
**आत्मा अकर्ता छ भनी देख्ने हो [१]देख्ने जन ।।**

सब कर्म सबै तरहबाट प्रकृतिले नै गरिने हुन् औ आत्मा अकर्ता छ अर्थात् केही पनि गर्दैन भनेर जसले जान्यो त्यसले खास तत्व पहिचान्यो भनेर संझनुपर्दछ ।।

यदा भूतपृथग्भावमेकस्थमनुपश्यति ।।
तत एव च विस्तारं ब्रह्म संपद्यते तदा ।।३०।।

**अनेकौं [२]भूत एकैमा, एकैबाट अनेकन ।**
**राम्रै देखे-पछी पार्थ ! [३]ब्रह्म मिल्छ [४]निरंजन ।।**

जब सब प्राणीको भिन्न-भिन्नतालाई एकताबाट र यही एकताबाट (एकईश्वरबाट) नै सब विस्तार (अलग अलग भएको) पनि संझन लाग्दछ, त्यसै बखत ब्रह्म प्राप्त हुन्छ (पाइन्छ) ।।

क्षेत्र प्रकाशक आत्मा निर्लेप्छ-

अनादित्वान्निर्गुणत्वात्परमात्मायमव्ययः ।
शरीरस्थोऽपि कौन्तेय! न करोति न लिप्यते ।।३१।।

**अनादि निर्गुण[५] हुँदा [६]परात्मा अविनाशी छ ।**
**भए पनि शरीरैमा न गर्दछ न [७]लिप्त छ ।।**

हे कौन्तेय ! अनादि र निर्गुण हुनाले यो अव्यय परमात्मा शरीरमा रहेर पनि केही कुराको हर्ता-कर्ता छैन र त्यसलाई कुनै कर्मको लेप अर्थात् बन्धन लाग्दैन ।।

---

१. तत्व देख्ने । २. प्राणीहरू । ३. परब्रह्म । ४. इन्द्रियका गतिबाट पर रहेको । ५. रूपादिरहित । ६. पर रहेको आत्मा । ७. कर्मबन्धन भएको।

यथा सर्वगतं सौक्ष्म्यादाकाशं नोलिप्यते ।
सर्वत्रावस्थितो देहे तथात्मा नोपलिप्यते ।।३१।।

जस्तै [1]व्यापक आकाश हुँदा [2]सूक्ष्म [3]अलिप्त छ ।
सारा देहविषे [4]व्याप्त, आत्मा त्यस्तै अलिप्त छ ।।

जस्तै आकाश जताततै भराभर छ, परन्तु सूक्ष्म हुनाले केहीको पनि लेप लाग्दैन अर्थात् कसैमा टाँसिदैन, त्यस्तै सर्वत्र शरीरमा रहेर पनि आत्मालाई केहीको पनि (कर्मबन्धनादिको) लेप लाग्दैन ।।

यथा प्रकाशयत्येकः कृत्स्नं लोकमिमं रविः ।।
क्षेत्रं क्षेत्री तथा कृत्स्नं प्रकाशयति भारत! ।।३२।।

जस्तो यौटे सूर्य गर्छन् सारा लोक प्रकाशित ।
त्यस्तै क्षेत्रज्ञले यावत् क्षेत्र गर्छ प्रकाशित ।।

हे भारत ! जस्तै एक सूर्यले सबै लोकलाई प्रकाशित गर्दछन् , त्यस्तैक्षेत्रले (आत्माले) सब क्षेत्रलाई अर्थात् शरीरहरूलाई प्रकाशित गर्दछ ।

क्षेत्रक्षेत्रज्ञजान्नाको फल-

क्षेत्रक्षेत्रज्ञयोरेवमन्तरं ज्ञानचक्षुषा ।।
भूतप्रकृतिमोक्षं च ये विदुर्यान्ति ते परम् ।।३३।।

क्षेत्र-क्षेत्रज्ञको भेद, मूल-[5]प्रकृतिमोचन ।
जो [6]ज्ञान-दृष्टिले देख्छन, सक्छन् तो ब्रह्म पाउन ।।

---

१. सबै ढाक्ने । २. मिहीन । ३. नटाँसिने । ४. छोपेर रहेको । ५. छुट्कारा । ६. ज्ञानरूपी आँखाले ।

यस प्रकारसंग ज्ञानचक्षुले अर्थात् ज्ञानरूपनेत्रले क्षेत्र र क्षेत्रज्ञको भेदलाई, यस्तै सब भूत-प्राणीका मूल-प्रकृतिको मोक्षलाई पनि जो जान्दछन् तिनले परब्रह्मलाई प्राप्त गर्दछन् ।। (५२३)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे

श्रीकृष्णार्जुनसंवादे क्षेत्रक्षेत्रज्ञविचारयो गो नाम

त्रयोदशोऽध्यायः ।।१३।।

इति नेपालीभाषामाकोमलगीता क्षेत्रक्षेत्रज्ञविचार योगो

नाम त्रयोदश अध्याय समाप्त ।।१३।।

# श्रीमद्भगवद्गीता

# कोमलगीता

## गुणत्रय-विभाग-योगः १४

### प्राणिवैचित्र्य गुणभेद बाट विचार-

श्री भगवानुवाच

परं भूयः प्रवक्ष्यामि ज्ञानानां ज्ञानमुत्तमम् ।।
यज्ज्ञात्वा मुनयः सर्वे परां सिद्धिमितो गताः ।।१।।

**ज्ञानमा [1]उत्तम ज्ञान भन्दछु म अझै पनि ।**
**जो जानेर गए पार्थ ! सिद्धि पाई सबै [2]मुनि ।।**

भगवानले आज्ञा गर्नुभयो- अझ पनि फेरि सब ज्ञानहरूमा श्रेष्ठ ज्ञान म बताउँछु, जुन ज्ञान जान्नाले सब मुनि यस लोकबाट परम सिद्धि पाएर गइसकेका छन् ।।

इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः ।।
सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च ।।२।।

**त्यही ज्ञान लिई मेरो तुल्यता पाउने मुनि ।**
**सृष्टिमा पनि जन्मन्नन् , नासिन्नन् लयमा पनि ।।**

यस ज्ञानको आश्रय गरेर, मसँग एकै रूप भएका पुरुषहरू

---

१. श्रेष्ठ २. ज्ञानी ऋषिहरू ।

सृष्टिको उत्पत्ति कालमा पनि जन्मँदैनन् , अनि प्रलय कालमा व्यथा पनि पाउँदैनन् अर्थात् जन्म-मरणबाट एकदम छुट्कारा पाउँदछन् ।।

सारको पिता आत्मा आत्मा-प्रकृति-

मम योनिर्महद्ब्रह्म तस्मिन्गर्भं दधाम्यहम् ।।
संभवः सर्वभूतानां ततो भवति भारत ।।३।।

मेरी प्रकृति हो [1]योनि, त्यसमा धर्दछु गर्भ म ।
त्यसैबाट भएको छ प्राणीको जन्मने क्रम ।।

हे भारत! महद् ब्रह्म अर्थात् प्रकृति मेरै योनि हो, म त्यसमा गर्भधारण गर्दछु र त्यसबाट समग्र भूत अर्थात् चराचर जगत् उत्पन्न हुन्छन् ।।

सर्वयोनिषु कौन्तेय ! मूर्तयः संभवन्ति याः ।।
तासां ब्रह्म महद्योनिरहं बीजप्रदः पिता ।।४।।

सारा योनि विषे पार्थ ! उब्जन्छन् [2]व्यक्ति जो सदा ।
तिन्की प्रकृति हो आमा म हुँ बीज दिने पिता ।।

हे कौन्तेय ! मनुष्य, पशु पक्षी आदि योनिमा जो मूर्तिहरू जन्मछन् ती सबकी योनि (आमा) प्रकृति हो, म बीज दिने पिता हुँ ।।

प्राणीमा सत्व रज तमको परिणाम-

सत्वं रजस्तम इति गुणाः प्रकृतिसंभवाः ।।
निबध्नन्ति महाबाहो ! देहे देहिनमव्ययम् ।।५।।

प्रकृतीबाट निस्केका [3]सत्वादि गुणले गरी ।
[4]नित्य-देही पनी हुन्छ देहमा [5]बद्ध बेसरी ।।

---

१. जन्माउने शक्ति भएको । २. दृश्य पदार्थ । ३. सत्व, रज, तम। ४. नित्य जीवात्मा । ५. बाँधिएको ।

हे महाबाहु ! प्रकृतिबाट उत्पन्न भएका सत्व, रज र तम गुणहरूले योदेहमा रहेको अव्यय अर्थात् निर्विकार आत्मालाई देहमा बाँधी राख्दछन् ।।

तत्र सत्वं निर्मलत्वात्प्रकाशकमनामयम् ।।
सुख सङ्गेन बध्नाति ज्ञानसङ्गेन चानघ ।।६।।

तिन्मा [1]'सत्त्व' [2]प्रकाशी र, [3]दोषशून्य, पवित्र छ ।
यस्ले ज्ञान-सुखद्वारा देहीको बन्ध गर्दछ ।।

हे निष्पाप अर्जुन ! यी तीन गुणका मध्यमा निर्मल हुनाले प्रकाश गराउने र दोष-रहित भएको पनि सत्वगुण छ, त्यसले सुख र ज्ञानको साथ-साथै प्राणीलाई बन्धन गर्दछ ।।

रजो रागात्मकं विद्धि तृष्णासङ्गसमुद्भवम् ।।
तन्निबध्नाति कौन्तेय ! कर्मसङ्गेन देहिनम् ।।७।।

'रजोगुण' बडो [4]रागी तृष्णा-आसक्ति-[5]जन्य छ ।
त्यो, [6]कर्मसङ्गले पार्थ ! देहीको बन्ध गर्दछ ।।

रजोगुणको स्वभाव रागात्मक छ, यसबाट तृष्णा र आसक्तिको उत्पत्ति हुन्छ । हे कौन्तेय त्यसले प्राणीलाई कर्म गर्नको प्रवृत्तिरूप सङ्गले बन्धनमा (जन्ममरणका चक्करमा) पार्दछ ।।

तमस्त्वज्ञानजं विद्धि मोहनं सर्वदेहिनाम् ।।
प्रमादालस्यनिद्राभिस्तन्निबध्नाति भारत ।।८।।

---

१. सत्वगुण । २. प्रकाश ज्ञान दिने । ३. दोषले रहित । ४. प्रेम बढाउने । ५. लालच बाटउत्पन्न हुने ।६. कर्ममा प्रेमगर्नाले ।

**मोह गर्ने सबैलाई, 'तम' [१]अज्ञान-जन्य छ ।**
**[२]प्रमादालस्य-[३]निद्राले, देहीको बन्ध गर्दछ ।।**

हे भारत ! किन्तु तमोगुण अज्ञानबाट उत्पन्न हुन्छ, यसले सब प्राणीलाई मोहमा फसाउँछ, यो प्रमाद-आलस्य-निद्राद्वारा प्राणीहरूलाई बन्धन गर्दछ (जकड्याउँदछ) ।।

सत्वं सुखे सञ्जयति रजः कर्मणि भारत ।।
ज्ञानमावृत्य तु तमः प्रमादे सञ्जयत्युत ।।९।।

**सत्वले सुखमा [४]प्रीति, रजले कर्ममा [५]मति ।**
**तमले ज्ञान ढाकेर गर्छ बेहोशमा [६]क्षति ।।**

हे भारत ! सत्वगुणले सुखमा र रजोगुणले कर्ममा आसक्ति उत्पन्न गर्दछ । परन्तु तमोगुणले ज्ञानलाई ढाकेर कर्तव्यविमूढ हुनुमा र कर्तव्य बिर्सनुमा पनि मनुष्यको आसक्ति उत्पन्न गर्दछ ।।

दुईलाई दबाई एकगुणको वृद्धि -

रजस्तमश्चाभिभूय सत्वं भवति भारत ! ।।
रजः सत्वं तमश्चैव तमः सत्वं रजस्तथा ।।१०।।

**रजस्तम जिती सत्व रजसत्व जिती तम ।**
**तमस्सत्व जिती बढ्छ रज हुन्नन् सबै [७]सम ।।**

रज र तमलाई दबाएर सत्व अधिक हुन्छ, तब त्यसलाई सात्विक भन्नुपर्दछ यस्तै सत्व र तमलाई दबाएर रज (राजस) को, त्यस्तै सत्व र रजलाई दबाएर तम (तामस) कोपनि वृद्धि हुन्छ ।।

---

१. अज्ञानबाट उत्पन्न हुने । २. बेहोश । ३. अलस्यौंई । ४. प्रेम । ५. बुद्धि । ६. नोक्सान । ७. बराबर ।

सर्वद्वारेषु देहेऽस्मिन्प्रकाश उपजायते ।।
ज्ञानं यदा तदा विद्याद्विवृद्धं सत्वमित्युत ।।११।।

सारा इन्द्रियमा ज्ञान [1]प्रकाश जब आउँछ ।
अनि देहविषे[2] सत्व बढेको जान्नुपर्दछ ।।

जब यस शरीरका सब द्वारहरूमा अर्थात् इन्द्रियहरूमा प्रकाश अर्थात् निर्मल ज्ञान उत्पन्न हुन्छ, तब संझनुपर्दछ कि, सत्वगुण बढ़ेको छ ।।

लोभः प्रवृत्तिरारंभः कर्मणामशमः स्पृहा ।।
रजस्येतानि जायन्ते विवृद्धे भरतर्षभ ! ।।१२।।

[3]कर्मप्रवृत्ति, [4]प्रारंभ, अशान्ति फिर अर्जुन ।
लोभ, इच्छा पनि हुन्छन् बढेमा त्यो रजोगुण ।।

हे भरतश्रेष्ठ ! रजोगुण बढ्नाले लोभ, कर्मतिर प्रवृत्ति र त्यसको आरंभ अतृप्ति अनि इच्छा पनि उत्पन्न हुन्छन् ।।

अप्रकाशोऽप्रवृत्तिश्च प्रमादो मोह एव च ।।
तमस्येतानि जायन्ते विवृद्धे कुरुनन्दन ! ।।१३।।

[5]अप्रकाश र आलस्य, बेहोशी, [6]मोह यी सब ।
उब्जछन् तमको वृद्धि भएमा बुझ पाण्डव! ।।

हे कुरुनन्दन! तमोगुणको वृद्धि भएमा अन्धकार (अज्ञान) केही पनि नगर्नाको इच्छा, प्रमाद अर्थात् कर्तव्यको विस्मृत र मोह उत्पन्न हुन्छन् ।।

---

१. पवित्रता । २. शरीरमा । ३. कर्ममा लागिपर्नु । ४. शुरू गर्नु । ५. अज्ञान । ६. कर्तव्यको भूल ।

गुणवृद्धि अनुसार फल र गति-

यदा सत्वेप्रवृद्धे तु प्रलयं याति देहभृत् ।।
तदोत्तमविदां लोकानमलान्प्रतिपद्यते ।।१४।।

भएमा सत्वको वृद्धि केही प्राणी मऱ्यो भने ।
ज्ञानीले पाइने लोक त्यो पनी हुन्छ पाउने ।।

सत्वगुण बढेको बखतमा यदि मानिस मऱ्यो भने, उत्तम तत्व जान्ने अर्थात् देवता इत्यादिका निर्मल स्वर्ग आदि लोक त्यसलाई प्राप्त हुन्छन् ।

रजसि प्रलयं गत्वा कर्मसंगिषु जायते ।।
तथा प्रलीनस्तमसि मूढयोनिषु जायते ।।१५।।

मर्नाले रजमा [1]कर्म-संङ्गीमा जन्म पाउँछ ।
तमको मृत्युले [2]मूढ-जुनीमा पर्न आउँछ ।।

रजोगुण प्रबलता भएमा मानिसको मरण भयो भने, जो कर्महरूमा आसक्त छन् , तिनैमा जन्म लिन जान्छ । अनि तमोगुण बढेमा मऱ्यो भने, पशु पक्षी आदीका मूढयोनिमा उत्पन्न हुन जान्छ ।।

कर्मणः सुकृतस्याहुः सात्विकं निर्मलं फलम् ।।
रजसस्तु फलं दुःखमज्ञानं तमसः फलम् ।।१६।।

भन्छन् [3]सुकर्मको हुन्छ फल सात्विक निर्मल [4]।
रजको फल हो दुःख, अज्ञान तमको फल ।।

पुण्यकर्मको फल-निर्मल र सात्विक हुन्छ परन्तु राजस कर्मको फल दुःख र तामस कर्मको फल अज्ञान हुन्छ, भनेर बताऊँछन् ।।

---

१. कर्मासक्तहरूमा । २. पशु आदिका योनिमा । ३. बढिया कर्मको । ४. बहुतै पवित्र ।

सत्वात्सञ्जायते ज्ञानं रजसो लोभ एव च ।।
प्रमादमोहौ तमसो भवतोऽज्ञानमेव च ।।१७।।

सत्वले ज्ञान उब्जन्छ, रजले लोभ आऊँछ ।
प्रमाद-मोह-अज्ञान तमदेखि उदाउँछ ।।

सत्वबाट ज्ञान र रजोगुणबाट केवल लोभ उत्पन्न हुन्छ। तमोगुणबाट केवल प्रमाद र मोह मात्र उत्पन्न हुने होइनन् कि उसमाथि झन् अज्ञानको उत्पत्ति पनि हुन्छ ।।

उर्ध्व गच्छन्ति सत्वस्था मध्ये तिष्ठन्ति राजसाः ।।
जघन्यगुणवृत्तिस्था अधो गच्छन्ति तामसाः ।।१८।।

सत्वमार्गी [1]उँभो जान्छन् ,राजसी [2]मध्य-लोकमा ।
तमोगुणी [3]नीचकर्मा पुग्दछन् नीच[4]-लोकमा ।।

सात्विक पुरुषहरु माथिका अर्थात् स्वर्गादि लोकमा जान्छन् , राजसहरू मध्यलोकमा अर्थात् मनुष्यलोकमा रहन्छन् , नीचगुण-वृत्तिका तामसहरू अधोगति (झन् झन् नीचो गति) पाउँछन् ।।

त्रिगुणातीत भई मोक्ष प्राप्ति-

नान्यं गुणेभ्यः कर्तारं यदा द्रष्टानुपश्यति ।।
गुणेभ्यश्च परं वेत्ति मद्भावं सोऽधिगच्छति ।।१९।।

[5]गुण-भिन्न कुनै कर्ता छैन भन्ने बुझी सब ।
ती भन्दा [6]परको तत्व देख्ने मिल्दछ मै-सँग ।।

---

१. माथि स्वर्गादिमा । २. माझको मनुष्यलोकमा । ३. नीचो कर्म गर्नेहरू । ४. अधोगतिमा । ५. प्रकृतिका गुणबाहेक । ६. ब्रह्म ।

द्रष्टा अर्थात् उदासीनताको दृष्टिले विचार गर्ने पुरुष जब ठह्र्याउँछ कि, प्रकृतिका गुणवाहेक दोस्रो अरू कुनै कर्ता रहेनछ, अनि जब तीन गुणदेखि पर रहेको तत्व (ब्रह्म) लाई पनि पहिचान गर्दछ, तब नै त्यो पुरुष मेरो स्वरूपमा मिल्न जान्छ ।।

**गुणनेतानतीत्य त्रीन्देही देहसमुद्भवान् ।।**
**जन्ममृत्यु जरादुखैर्विमुक्तोऽमृतमश्नुते ।।२०।।**

**जोदेही[१] देहका हेतु[२] गुण[३]-त्रय हटाउँछ ।**
**जन्ममृत्युजरा[४]दुःख छोडी, त्यो मुक्तिपाउँछ ।।**

देहधारी मनुष्यले देह उत्पन्न गर्नाका कारण स्वरूप, यी तीन गुणलाई अतिक्रमण गरेपछि, जन्म मरण र बुढ्याँईका दुःखहरूबाट छुट्कारा पाएर अमृतको अर्थात् मोक्षको अनुभव गर्दछ ।।

त्रिगुणातीतको लक्षण र आचार-

अर्जुन उवाच-

**कैलिंङ्गैस्त्रीन्गुणानेतानतीतो भवति प्रभो ।।**
**किमाचारः कथं चैतांस्त्रीन्गुणानतिवर्तते ।।२१।।**

**कुन लक्षणले कृष्ण ! [५]गुणातीत ठहर्दछ ।**
**त्यसको आचार[६] के हुन्छ? कसरी गुण तर्दछ ।।**

अर्जुनले सोधनी गरे- हे प्रभु ! कुन लक्षणहरूले त्यो पुरुष यी तीन गुणको पार पुगेको हो भनेर जानिन्छ ? मलाई बताउनुहोस् कि,

---

१. शरीर धारण गर्ने । २. खड़ा गराउनामा कारण । ३. सत्व आदि तीन गुण लाई । ४. बुढ्योँई । ५. [illegible]नाघेको । ६. कर्मको आचरण ।

त्यस त्रिगुणातीतको आचार के हुन्छ ? अनि त्यो यी तीन गुणभन्दा पर कसरी जान्छ ? ।।

श्रीभगवानुवाच-

प्रकाशं च प्रवृत्तिं च मोहमेव च पाण्डव ।।
न द्वेष्टि संप्रवृत्तानि न निवृत्तानि कांक्षति ।।२२।।

प्रकाशादि, प्रवृत्तादि, मोहादि, गुण[१]-कार्य ती,
आएमा द्वेष गर्दैन, चाह लिन्न गएर ती !

भगवान्ले बताउनुभयो-हे पाण्डव ! प्रकाश, प्रवृत्ति, मोह अर्थात् क्रमैले सत्व, रज, तम, यी तीन गुणका कार्य या फलहरू आइपर्दा जो तिनको द्वेष पनि गर्दैन र न आएमा आकांक्षा (चाहना) पनी गर्दैन !

उदासीनवदासीनो गुणैर्यो न विचाल्यते ।।
गुणा वर्तन्त इत्येव योऽवतिष्ठति नेङ्गते ।।२३।।

[२]गुणले त्यो डगाइन्न, [३]उदासीनै रहन्छ त्यो,
गुण गर्छन् स्वयं काम भनी [४]अटल हुन्छ त्यो ।

जो कर्मफलको संबन्धमा उदासीन जस्तै रहन्छ, सत्व, रज, तम, गुणहरूले, जसलाई, डगाउन सक्तैनन्, जो गुणहरू आफ्ना आफ्ना आफ आफै गर्दछन् भन्ने संझेर, स्थिर रहन्छ, जो डग्दैन अर्थात् विकार पाउँदैन ।।

समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः ।।
तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः ।।२४।।

---

१.गुणका कार्य ज्ञान, आशक्ति, मोह । २. सत्व आदि गुणले । ३. समभाव लिने भई । ४. मनमा विकार पैदा नभएको ।

**सुख-दुःख समै ठान्छ समै [1]स्वर्ण-शिला सब,**
**धीर, [2]स्वस्थ समै ठान्छ स्तुतिनिन्दा, प्रियाप्रिय ।**

जसलाई सुख दुःख सम (बराबर) छन्, जो स्वस्थ छ अर्थात् आफसे आफ स्थिरछ, माटो पत्थर र सुन पनि जसलाई समानै छ, प्यारो अप्यारो निन्दा तारीफ पनि जसलाई एकैनासै छ जो सदा धैर्यले युक्त छ ।।

**मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः ।।**
**सर्वारंभपरित्यागी गुणातीतः स उच्यते ।।२५।।**

**मानपमानमा तुल्य मित्रमा शत्रुमा पनि,**
**गैह्र [3]आरंभको त्यागी हो [4]'गुणातीत' त्यो मुनि ।**

जसलाई मान अपमान या मित्र र शत्रुदल तुल्य नै छन्, प्रकृतिले नैसब कुछ गर्दछ भन्ने संझेर जसका सब काम्य उद्योग छुटेका छन्, त्यस पुरूषलाई 'गुणातीत' भन्दछन् ।।

एकत्वभक्तिले परमात्माप्राप्ति -

**मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते ।।**
**स गुणान्समतीत्यैतान्ब्रह्मभूयाय कल्पते ।।२६।।**

**नित्य भक्ति लिई मेरो जस्ले भजन गर्दछ ।**
**त्यो [5]गुणत्रय नाघेर ब्रह्मकै रूप धर्दछ ।।**

जो मभा नै सब कर्म अर्पण गर्नुरूप अव्यभिचार अर्थात्-एकनिष्ठ भक्तियोगले मेरो सेवा गर्दछ, त्यो पुरूष यिनै तीन गुणलाई पार गरेर ब्रह्मको अवस्था पाउनुमा समर्थ हुन्छ ।।

---

१. सुन र पत्थर । २. शान्ति लिने । ३. फलको इच्छा गरिने कर्मको। ४. गुणलाई नाघ्ने । ५. सत्वादि तीन गुण ।

ब्रह्मणो हि प्रतिष्ठाहममृतस्याव्ययस्य च ।।
शाश्वतस्य च धर्मस्य सुखस्यैकान्तिकस्य च ।।२७।।

**स्थान मैं हुँ बुभयौ पार्थ ! नित्य, [१]अमृत, ब्रह्मको ।**
**अत्यन्त[२]-सुखको मैं हुँ, मैं सनातन-[३]धर्मको ।।**

किनभने अमृत र अव्यय ब्रह्मको, शाश्वत (सनातन) धर्मको र एकान्तिक अर्थात् - परमावधिका अत्यन्त सुख्को पनि अन्तिम स्थान केवल मैं हुँ ।।(५५०)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'गुणत्रयविभागयोगो' नाम
चतुर्दशोऽध्यायः ।।१०।।

इति नेपालीभाषामा कोमलगीता 'गुणत्रयविभागयोगो' नाम
चतुर्दशोऽध्यायः ।।१४।।



---

१. अमृतरूप (ननासिने) । २. सबभन्दा ठूलो ब्रह्मसुखको । ३. नित्य धर्मको ।

ॐ

# श्रीमद्भगवद्गीता

# कोमलगीता

## पुरुषोत्तम-योगः १५

### ब्रह्मवृक्षको वेदोक्त वर्णन-

श्री भगवानुवाच-

ऊर्ध्वमूलमधः शाखमश्वत्थं प्राहुरव्ययम् ।।
छन्दांसि यस्य पर्णानि यस्तं वेद स वेदवित् ।।१।।

[1]वेदपत्ता, उँधो हाँगा, उँभो-तिर जरा हुने ।
[2]'अश्वत्थ' नित्य जो जान्ला उही हो वेद बुझ्ने ।।

भगवान्ले वर्णन गर्नुभयो-जुन अश्वत्थ (पिप्पल) को वृक्षरूपी ब्रह्मको यस्तो वर्णन गर्दछन् कि, एउटा जरो माथि (स्वर्गादि लोक) छ अर्थात्-सृष्टि गर्ने परमात्मा माथि स्वर्गलोकमा छन्, हाँगाहरू अनेक तल (मनुष्यादि लोक) छन् अर्थात्-परमात्माबाट उत्पन्न भएका मनुष्यादि लोक तल फैलिएका छन्, जो अव्यय अर्थात्- कहिल्यैनासिदैन, अनि छन्दहरू (वेदहरू) जसका पात छन् अर्थात्-वेदका कर्मरूपीपातले जो सदा छोपिएको छ-(वेदविहित कर्महरू त्यस वृक्षलाई ढाक्ने पातहरू छन्), त्यस्तो वृक्ष अर्थात्-ब्रह्मवृक्ष या संसारवृक्षलाई जसले राम्ररी जान्यो, उही पुरूष सच्चा वेदवेत्ता (वेद जान्ने) हो । अर्थात्-यो वर्णन

---

१. वेदरूपी पात भएको । २. पिप्पलको वृक्ष जस्तो ब्रह्म ।

'ब्रह्मवृक्ष' को अथवा 'संसाररूपीवृक्ष' को हो, यसैलाई (संसारलाई) सांख्यमतकाहरू 'प्रकृति-विस्तार' र वेदान्तीहरू 'ईश्वरका मायाको फैलावट' भन्दछन्, वेदउपनिषत्मा कहीं कहीं 'ब्रह्मवृक्ष' ब्रह्मवन् (ब्रह्मारण्य) इत्यादि नामले पुकारिएको छ, अर्थात्-जस्तै सानो एक बीजबाट त्यति ठूलो आकाश छुने रूख पैदा हुन्छ, त्यस्तै-अव्यक्त परमेश्वरबाट यो दृश्य, सृष्टिरुप, महान्, वृक्ष उत्पन्न भएको छ, यसैलाई 'विश्ववृक्ष' या 'जगत्वृक्ष' पनि भन्दछन्, जसले यो तत्व जानेर चलन-बर्तन गर्दा त्यस पुरूषलाई नै 'वेदको तत्व जान्ने' भनेर नाम दिन्छन् ।।

### ब्रह्मवृक्षको सांख्योक्त वर्णन-

अधश्चोर्ध्वं प्रसृतास्तस्य शाखा
गुणप्रवृद्धा विषयप्रवालाः ।।
अधश्च मूलान्यनुसन्ततानि
कर्मानुबन्धीनि मनुष्यलोके ।।२।।

**हाँगा त्यस्का [1]तल माथि झिंजिन्छन्,**
**बढ्छन् [2]गुणले, [3]विषयै पालुवा छन् ।**
**जरा उस्का कर्म नाउँ गरेका,**
**बढ्दै येही[4] लोकमा छन् गडेका ।।**

तल माथि पनि जुन ब्रह्मवृक्षका हाँगाहरू फैलिएका छन् कि, जो सत्व, रज, तम-यी तीन गुणले खूब बढाईएका छन्, अनि जुनबाट रूप, रस, गन्ध, शब्द, स्पर्शरूपी विषयहरूका कलि (पालुवा) निस्केका छन् , त्यस्तै आखिरमा कर्मको रूप पाउने अर्थात्-कर्मरूपी त्यशाका

---

१. मनुष्यादि र स्वर्गादि लोकमा । २. सत्वादि गुणले । ३. रूप-रस इत्यादि । ४. मनुष्य लोकमा ।

जराहरू तल मनुष्य लोकमा पनि बढ्दै गएका छन् जो कि, ज्यादा नै धसिएर तलसम्म पुगेका छन् ।।

असङ्गले संसार काटि ब्रह्म खोज्नू -

न रूपमस्येह तथोपलभ्यते
नान्तो न चादिर्न च संप्रतिष्ठा ।।
अश्वत्थमेनं सुविरूढमूल-
मसङ्गशस्त्रेण दृढेन छित्त्वा ।।३।।

**न [1]रूप पाइन्छ न अन्तको [2]गति,**
**न आदि देखिन्छ न ता कुनै स्थिति[3] ।**
**[4]अश्वत्थ यस्तो [5]सुविरूढ-मूल यो,**
**काटौ कडा शस्त्र लिई [6]असङ्गको-**

परन्तु, अघि जस्तो वर्णन गरियो, यस लोकमा त्यसको त्यस्तो स्वरूप देख्न पाइँदैन, अथवा अन्त्य, आदि र आधारस्थान पनि केही मिल्दैन, अत्यन्तै मजबूत जरा धसिएको यस अश्वत्थ-वृक्ष (संसारवृक्ष) लाई अनासक्तिरूपी बलियो तरवारले काट्नुपर्छ र ।।

ततः पदं तत्परिमार्गितव्यं
यस्मिन्गता न निवर्तन्ति भूयः ।।
तमेव चाद्यं पुरुषं प्रपद्ये
यतः प्रवृत्तिः प्रसृता पुराणी ।।४।।

---

१. स्वरूप । २. चाल । ३. आधारस्थान । ४. पिप्पल वृक्ष जस्तो संसार । ५. बलिया जरा धसिएको । ६. आसक्ति त्यागकोरूप को ।

अनी पछी त्यै [१]पद खोजनू जहाँ,
पुगेर फिर्दैन कुनै पनी यहाँ ।
[२]प्रवृत्ति जस्‌बाट छ यो [३]पुरातन,
पुग्छू [४]उसैमा म भनोस् मनैमन ।।

अनि त्यस स्थानलाई खोजेर पत्ता लाउनुपर्छ, जहाँ जानाले फेरि फर्केर आउनुपर्दैन । औ यस्तो दृढ संकल्प (मनको निश्चय) गर्नुपर्दछ कि, "सृष्टिक्रमको यो अति-प्राचीन सिलसिलेवार जसबाट उत्पन्न भएको छ, त्यही आद्यपुरूषतिर नै म जान्छु ।।"

निर्मानमोहा जितसङ्गदोषा ।
अध्यात्मनित्या विनिवृत्तकामाः ।।
द्वन्द्वैर्विमुक्ताः सुखदुःखसंज्ञै-
र्गच्छन्त्यमूढाः पदमव्ययं तत् ।।५।।

जिती सबै [५]मान र मोह[६], सङ्ग[७]
[८]अध्यात्म जानी, गरि [९]काम-भङ्ग,
[१०]दुःखादिको [११]द्वन्द्व सबै हटाई
[१२]ब्रह्मज्ञ लिन्छन् पद त्यो रमाई ।

जो अभिमान र मोहले रहित छन्, जसले आसक्तिरूप दोषलाई जितेका छन्, जो अध्यात्मज्ञानमा नै स्थिर भएर रहेका छन्, जो निष्काम

१. धाम । २. सृष्टिको सिलसिला । ३. अत्यन्तै पुरानो । ४. आदि ब्रह्ममा । ५. अभिमान । ६. मनको अभिलोपन । ७. आसक्ति । ८. आत्मविषयक ज्ञान । ९. कामनाको निवृत्ति । १०. दुःख सुख इत्यादिको । ११. जोडी । १२. ब्रह्मवेत्ताहरू ।

कर्मयोग गर्दछन्, र सुख-दुख नामक द्वन्द्वधर्महरूबाट अलग छन्, ती ज्ञानवान् पुरूषहरू त्यही अव्यय-स्थानमा (अविनाशी धाममा) पुग्दछन् ।।

न तद्भासयते सूर्यो न शशांको न पावकः ।।
यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम ।।६।।

**जहाँ प्रकाश पुग्दैन चन्द्र-सूर्याग्निको उही ।**
**सर्वोच्च धाम हो मेरो फर्कदैनन् जहाँ गई ।।**

जहाँ पुगेर फेरि फर्केर आउनुपर्दैन; यस्तो त्यो मेरो परमधाम छ, त्यसलाई न त सूर्य, न चन्द्रमा और न अग्निले पनि प्रकाशित गर्दछन् अर्थात्-तिनीहरूको त्यहाँ गति पुग्न सक्दैन ।।

जीवन देह को संबन्धज्ञानी जान्दछ -

ममैवांशो जीवलोके जीवभूतः सनातनः ।।
मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति ।।७।।

**यो [१]जीवलोकमा मेरै अंश जीव [२]सनातन ।**
**खिचीलिन्छ[३] प्रकृतिका [४]पञ्चेन्द्रिय अनी मन ।।**

यस जीवलोक अर्थात् कर्मभूमिमा खास मेरै सनातन अंश जीव भएर प्रकृतिमा रहने मनसहित छ अर्थात्-मन र पाँच सूक्ष्म इन्द्रियहरूलाई आफूतर्फ **खिंचेर लिन्छ,** यसैलाई 'लिङ्गशरीर' भन्दछन् ।

शरीरं यदवाप्नोति यच्चाप्युत्क्रामतीश्वरः ।।
गृहीत्वैतानि संयाति वायुर्गन्धानिवाशयात् ।।८।।

---

१. मनुष्यलोकमा । २. अविनाशी । ३. खिचेर आफू-साथै खिचि लिन्छ । ४. चक्षु, श्रोत्र, घ्राण, रसन, त्वक ।

जीवले जहिले [1]देह लिई, छोड्दछ त्यै-घरी ।
साथै[2] ती सब ली चल्छ, [3]गन्ध ली वायु झैं गरी ।।

ईश्वर अर्थात्-जीवात्मा जब स्थूल शरीरमा पस्दछ र जब त्यो (यो शरीर) बाट निस्केर जान्छ, जब त्यसले (जीवले) तीमन र पाँच इन्द्रिय लाइ त्यसै गरी साथमा लिएर जान्छ, जस्तै फूल आदि आश्रयस्थानबाट हावाले वासनालाई लिएर जान्छ ।।

श्रोत्रं चक्षुः स्पर्शनं च रसनं घ्राणमेव च ।।
अधिष्ठाय मनश्चायं विषयानुपसेवते ।।९।।

[4]कान, आँखा, त्वचा, जिह्वा, नासिका मन लीकन ।
[5]जीवले सर्वदा गर्छ सर्व विषय सेवन ।।

कान, आँखा, छाला, जिभ्रो, नाक र मन यिनीहरूको अध्यक्ष भएर यो जीवात्माले विषयहरूलाई भोग गर्दछ ।

उत्क्रामन्तं स्थितं वापि भुञ्जानं वा गुणान्वितम् ।।
विमूढा नानुपश्यन्ति पश्यन्ति ज्ञानचक्षुषः ।।१०।।

देहमा रहने, जाने गुणी भै गुण भोगने ।
यस्लाई मूर्ख देख्दैनन्, [6]ज्ञानी छन् खास [7]देख्ने ।।

शरीरबाट निस्केर जाने, बस्ने, अथवा आफैले होइन कि, गुणहरूले युक्त भएर उपयोग गर्ने, यस जीवलाई मूर्खहरू जान्दैनन्, ज्ञानरूपी नजरले विचार गर्ने ज्ञानीहरू उसलाई ठहराउँदछन् ।

---

१. यही स्थूल शरीर । २. मनसहित छइन्द्रिय । ३. फूलको सुवास । ४. श्रोत्र, चक्षु, त्वक, रसना घ्राणेन्द्रिय र मनलाई । ५. परमेश्वरको अंशरूप जीवात्माले । ६. ज्ञानै आँखा भएका हरु । ७. पहिचान्ने ।

यतन्तो योगिनश्चैनं पश्यन्त्यात्मन्यवस्थितम् ।।
यतन्तोऽप्यकृतात्मानो नैनं पश्यन्त्यचेतसः ।।११।।

योगी यत्न गरी देख्छन् [1]आफैमा स्थित ईश्वर ।
यत्नले पनि देख्दैनन् मन्दात्मा, मूढ, [2]पामर ।।

यस प्रकारले प्रयत्न गर्ने योगीहरू आफ्नो हृदयमा रहेको आत्मालाई पहिचान्दछन्, परन्तु ती मूढहरू जसको बुद्धि संस्कार गरिएको छैन, प्रयत्नगर्दा पनि त्यसताले पहिचान गर्न सक्दैनन् ।

परमात्माको सर्वव्यापकता-

यदादित्यगतं तेजो जगद्भासयतेऽखिलम् ।।
यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम् ।।१२।।

[3]आदित्यस्थित जो तेज गर्छ लोक प्रकाशित ।
[4]चन्द्र-अग्नि-विषे जो छ त्यो मेरैजान निश्चित ।।

जुन तेज सूर्यमा रहेर सारा जगत्‌लाई प्रकाशित गर्दछ, जुन तेज चन्द्रमा र अग्निमा पनि छ, त्यो सब मेरै तेज हो भनेर संझ ।।

गामाविश्य च भूतानि धारयाम्यहमोजसा ।।
पुष्णामि चौषधीः सर्वाः सोमो भूत्वा रसात्मकः ।।१३।।

[5]भूतधारण मै गर्छु तेजले भू[6]-प्रविष्ट भै ।
मै गर्छु औषधी[7]-वृद्धि [8]रसात्मा [9]सोमरूप भै ।।

---

१. आफ्नोअन्तःकरणमा । २. सूझन बूझका । ३. सूर्यमा रहेको । ४. चन्द्मा र अग्निमा रहेको । ५. प्राणी हरुकोधारण । ६. पृथ्वीमा प्रवेश गरेर । ७. धान्यादिकोबढ्ती ! । ८. रसस्वरूप । ९. चन्द्मा रूप भएर ।

यस्तै गरी पृथ्वीमा प्रवेश गरेर, मैं सब भूत (प्राणी) लाई धारण गर्दछु रसरूपी चन्द्रमा भएर सब औषधी (अर्थात् धान्यादि वनस्पति) लाई पनि बढाउँछु ।।

अहं वैश्वानरो भूत्वा प्राणिनां देहमाश्रितः ।।
प्राणापानसमायुक्तः पचाम्यन्नं चतुर्विधम् ।।१४।।

प्राणापान लिई, [1]प्राणिदेहमा [2]अग्निरूपको ।
भई पकाउँछू आफै अन्न [3]चार किसीमको ।।

मैं 'वैश्वानर' नामको अग्नि भएर प्राणीका शरीरमा रहन्छु र प्राण अपान वायुले युक्त भएर चारथरी अन्न (खाइने कुरा) लाई पाक गराउँछु ।।

सर्वस्यचाहं हृदि सन्निविष्टो
मत्तः स्मृतिर्ज्ञानमपोहनं च ।।
वेदैश्च सर्वैरहमेव वेद्यो
वेदान्तकृद्वेदविदेव चाहम् ।।१५।।

मैं छू सबैको [4]हृदयस्थ खास,
मैंबाट हुन्छन् [5]स्मृति-बोध-नाश ।
मैं वेदले वेद्य[6] र वेद[7]-विज्ञ,
[8]वेदान्तकर्ता पनि मैं [9]अभिज्ञ ।।

फेरि यस्तै किसिमसंग म सबका हृदयमा सदा-सर्वदा वास गर्दछु, स्मरण र ज्ञान यिनको नाश पनि मबाट नै रहन्छ, त्यस्तै सब वेदले जान्नयोग्य

---

१. प्राणीका शरीरमा । २. जठराग्निरूप । ३. चपाइने, पिइने, चाटिने र चुसिने । ४. हृदयमा रहेको । ५. संझाना ज्ञान औ नाशपनि । ६. जानिने । ७. वेदजान्ने । ८. वेदान्त बनाउने । ९. सब जान्ने ।

पनि मैं हुँ, अनि वेदान्त बनाउने र वेद जान्ने पनि केवल मैं एक मात्र हुँ ।।

## क्षर अक्षर र पुरूषोत्तम-

द्वाविमौ पुरूषौलोके क्षरश्चाक्षर एव च ।।
क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते ।।१६।।

**पार्थ ! दोटा पुरूष[1] छन् लोकमा 'क्षर' 'अक्षर' ।**
**'क्षर' हुन् यी सबै प्राणी, [2]भन्छन् कूटस्थ 'अक्षर' ।।**

यस लोकमा 'क्षर' र 'अक्षर' दुइ पुरूष छन्, नासिने भूत-प्राणीलाई 'क्षर' भन्दछन्, औ कूटस्थ अर्थात्-सब प्राणीको मुल कूटमा रहने प्रकृतिरूप अव्यक्त तत्वलाई 'अक्षर' (ननासिने) भन्दछन् ।।

उत्तमः पुरूषस्त्वन्यः परमात्म्येत्युदाहृतः ।।
यो लोकत्रयमाविश्य विभर्त्यव्यय ईश्वरः ।।१७।।

**[3]'पुरूषोत्तम' [4]अर्को छ, 'परमात्मा' भनाउँछ,**
**त्यो [5]ईश्वर तिनै-लोक प्रवेश गरि पाल्दछ ।**

परन्तु 'पुरूषोत्तम' यी दुवैभन्दा भिन्न छ, त्यसलाई 'परमात्मा' भन्दछन् । त्यही अव्यय ईश्वर तीनै लोकमा प्रवेश गरेर सबैलाई पालन-पोषण गर्छ ।।

यस्मात्क्षरमतीतोऽहमक्षरादपि चोत्तमः ।।
अतोऽस्मि लोके वेदे च प्रथितः पुरूषोत्तमः ।।१८।।

**क्षरदेखी पर म छु, अक्षरैदेखि उत्तम[6] ।**
**लोकमा वेदमा तस्मात् कहिन्छु 'पुरूषोत्तम' ।।**

---

१. आत्मा (स्वरुप)। २. सबको आदिप्रकृतितत्व । ३. पुरुषमा श्रेष्ठ । ४. यो दुइबाहेकको । ५. अविनाशी ब्रह्म । ६. श्रेष्ठ पुरुष ।

भ क्षरभन्दा पनि परको र अक्षरभन्दा पनि उत्तम पुरूष छु, यसैले लोक-व्यवहार र वेदमा 'पुरूषोत्तम नामले प्रसिद्ध भएको छु ।।

यो बुझ्ने सर्वज्ञ र कृतकृत्यहुन्छ-

यो मामेवमसंमूढो जानाति पुरूषोत्तमम् ।।
स सर्वविद्भजति मां सर्वभावेन भारत ।।१९।।

मोह[1] छोडी मलाई जो 'पुरूषोत्तम' जान्दछ।
त्यो सर्वज्ञ[2] सबै भक्ति मैमा लाएर भज्दछ ।।

हे भारत ! यस प्रकारले मोहलाई त्याग गरेर जो पुरूष मलाई नै पुरूषोत्तम संझन्छ; त्यो सर्वज्ञ भएर सर्वभाव (सबै तरह) ले मलाई नै भज्दछ ।।

इति गुह्यतमं शास्त्रमिदमुक्तं मयाऽनघ! ।।
एतत् बुद्ध्वा बुद्धिमान्स्यात्कृतकृत्यश्च भारत ।।२०।।

बताएँ जो यहाँ मैले गुह्य यो शास्त्र अर्जुन !
त्यो जानी [3]बुद्धिमान् होला [4]कृतकृत्य पनी जन ।

हे पापरहित भारत ! जो गुह्यभन्दा पनि अतिगुह्य (बहुतै गोप्य) शास्त्र मैले वर्णन गरें, यस लाई जानिलिनाले बुद्धिमान् (साम्यबुद्धिले युक्त) र कृतकृत्य पनि हुनेछ ।।५६०।।

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'पुरुषोत्तमयोगो' नाम
पञ्चदशोऽध्यायः ।।१५।।

इति नेपालीभाषामा कोमलगीता 'पुरुषोत्तमयोगो' नाम
पञ्चदश अध्याय समाप्त ।।१५।।

---

१. अज्ञानपना । २. सब जान्ने पुरुष । ३. समबुद्धिले युक्त। ४. केही कर्तव्य बाँकी न रहेको।

ॐ

# श्रीमद्भगवद्गीता

# कोमलगीता

## दैवासुरसंपद्विभाग-योग १६

## दैवीसंपत्तिका २६ गुण-

श्री भगवानुवाच-

अभयं सत्वसंशुद्धिर्ज्ञानयोगव्यवस्थितिः ।।
दानं दमश्च यज्ञश्च स्वाध्यायस्तप आर्जवम् ।।१।।

नडर्नु, [1]सात्विकी-वृत्ति, ज्ञानको-योगको-स्थिति[2],
तप, दान, यज्ञ, [3]दम, [4]ऋजुता, [5]पाठमा [6]मति ।।

भगवान्ले आज्ञा गर्नुभयो-अभय (नडर्नु), शुद्ध सात्विक वृत्ति लिनु, ज्ञानयोग र कर्मयोगको तारतम्यसित व्यवस्था गर्नु, दान दिनु, दम (इन्द्रिय-निग्रह) गर्नु, स्वाध्याय अर्थात्-स्वधर्मको अनुसार रोजरोज पठन-पाठन गर्नु, तपस्या गर्नु, सरलपना लिनु ।।

अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम् ।।
दयाभूतेष्वलोलुप्त्वं मार्दवं ह्रीरचापलम् ।।२।।

अहिंसा, सत्य, अक्रोध, त्याग, शान्ति, [7]अपैशुन,
दया, अलोभ, मृदुता, लाज, [8]निश्चञ्चलेपन-

१. सीधा चालचलन । २. व्यवस्था । ३. इन्द्रियको रोकावट । ४. सोझ्याई । ५. स्वधर्माचरण । ६. बुद्धि । ७. छल्याँइ नगर्नु । ८. नरमीपना लिनु ।

अहिंसा अर्थात्-परपीडा नगर्नु, नरिसाउनु, कर्मफललाई छोड्नु, शान्ति लिनु, क्षुद्रदृष्टि छोडेर उदारभाव राख्नु, सब प्राणीमा दया गर्नु, तृष्णा नराख्नु, नरमीपना लिनु खराब कामबाट लजाउनु, फजूल कर्महरूलाई छोड्नु ।।

तेजः क्षमा धृतिः शौचमद्रोहो नातिमानिता ।।
भवन्ति संपदं दैवीमभिजातस्य भारत ! ।।३।।

**तेज[1], क्षमा, धैर्य, शौच[2], अद्रोहित्व, [3]अमानिता-**
**[4]दैवी संपत्तिवालाका हुन्छन् यी गुण सर्वदा ।**

हे भारत ! तेजस्वीपना लिनु, सहनु धैर्य लिनु, पवित्र हुनु, द्रोह नगर्नु, घमण्डीपना नराख्नु, यिनै २६ गुणहरू दैवीसम्पत्तिमा जन्मेका पुरूषहरूलाई प्राप्त हुन्छन् ।।

आसुरीसंपत्का लक्षण-

दंभो दर्पोऽभिमानश्च क्रोधः पारूष्यमेव च ।।
अज्ञानं चाभिजातस्य पार्थ ! संपदमासुरीम् ।।४।।

**छल, सेखी, भैमत्याइँ, रिस, अज्ञान, निष्ठरी,**
**हुन्छन् [5]आसुरसंपत्मा जन्मनेका सधैंभरी ।**

हे पार्थ ! ढंभ (छल) सेखी, ज्यादा अभिमान, क्रोध, निष्ठुरपना र अज्ञान-यी ६ गुण आसुरी संपत्मा जन्मेकाहरूलाई प्राप्त हुन्छन् ।।

दैवी र आसुरनी संपत्काफल-

दैवीसंपद्विमोक्षाय निबन्धायासुरी मता ।।
मा शुचः संपदं दैवीमभिजातोऽसि पाण्डव ।।५।।

---

१. तेजिलोपना । २. पवित्रता । ३. सेखीले रहित हुनु । ४.दैवी संपरत्को अंश पाउनेका । ५. राक्षसी अंशमा ।

दैवी छ मोक्षका निम्ति [1]बन्ध-निम्ति छ आसुरी,
दैवीमा जन्म लियो छ किन सोच्छौ यसो गरी ?

हे पाण्डव ! यी दुइ संपत्मा दैवी-संपत् परिणामका मोक्षदायक र आसुरीचाहिं बन्ध (जन्म) दायक भनी मानिएको छ, तिमी दैवीसंपत्मा जन्मेका छौ, यस कारण शोक नगर ।।

आसुरको वर्णन र अधोगति-

द्वौ भूतसर्गौ लोकेऽस्मिन्दैव आसुर एव च ।।
दैवो विस्तरशः प्रोक्त आसुरं पार्थ ! मे शृणु ।।६।।

प्राणीका सृष्टिमा श्रेणी दुइ छन् [2]'दैव'-[3]'असुर',
कहें विस्तारले 'दैव', म भन्छु अब 'आसुर' ।

हे पार्थ ! यस लोकमा दुइ प्रकारका प्राणी उत्पन्न हुन्छन् । एक 'दैव' र दोस्रो 'आसुर' । यी दुइमध्यमा दैवश्रेणीको वर्णन विस्तार पूर्वक पहिले गरिसकें । अब आसुरीश्रेणीको वर्णन गर्दछु, सुन ।।

प्रवृत्तिं च निवृत्तिं च जना न विदुरासुराः ।।
न शौचं नापि चाचारो न सत्यं तेषु विद्यते।।७।।

के गर्नू? वा के न गर्नू? जान्दैनन् [4]आसुरी-जन,
रहन्न तिनमा शौच, सत्य, आचार, अर्जुन !

असुरहरू यो थाहा पाउदैनन् कि प्रवृत्ति के हो? निवृत्ति के हो? अर्थात् के गर्नु योग्य छ? के नगर्नु योग्य छ? अनि तिनमा न शुद्धता न आचार औ न त सत्यता पनि रहेको हुन्छ ।।

---

१. बन्ध दिलाउनाको निमित्त। २. दैवी संपत्ले युक्त । ३. आसुरी संपत्ले युक्त । ४. आसुरी प्रकृतिका मानिसहरू ।

असत्यमप्रतिष्ठं ते जगदाहुरनीश्वरम् ॥
अपरस्परसंभूतं किमन्यत्कामहैतुकम् ॥८॥

तीभन्दछन्-जगत् झूटो, [1]निराधार, [2]अनीश्वर,
[3]अर्को संबन्धले शून्य, [4]कामना-तृप्तिको [5]धार ।

यी असुरहरू भन्दछन् कि सारा जगत् असत्य छ, अप्रतिष्ठित अर्थात् निराधार छ, अनीश्वर अर्थात्-बिना परमेश्वरको छ, अपरस्परसंभूत अर्थात्-एउटा कुरो दोस्राको संबन्ध बेगर नै भएको छ, यस उसले मनुष्यको विषय-वासना तृप्ति गर्नु सिवाय यसको अरू के हेतु हुन सक्दछ? ॥

एतां दृष्टिमवष्टभ्य नष्टात्मानोऽल्पबुद्धयः ॥
प्रभवन्त्युग्रकर्माणः क्षयाय जगतोऽहिताः ॥९॥

यस्तो संझी [6]अल्पबुद्धि, [7]नष्टात्मा, दुष्ट, [8]मानव ।
जन्मछन्, क्रूरकर्मा भै नास्छन् लोक पनी सब ॥

यस प्रकारको दृष्टि (विचार) लाई स्वीकार गरेर, कम बुद्धि भएका नष्टात्मा, दुष्टमानिसहरू क्रूर कर्म गर्दै, जगतलाई क्षय गर्नाका निमित्त, उत्पन्न हुँदै गर्छन् ।

काममाश्रित्य दुष्पूरं दंभमानमदान्विताः ॥
मोहाद् गृहीत्वासद्ग्राहान्प्रवर्तन्तेऽशुचिव्रताः ॥१०॥

---

१. कसैको आधारमा नरहेको । २. परमेश्वर नभएको । ३. अर्को कुनै संबन्ध नभएको । ४. विषयवासना तृप्ति गराउनाको । ५. मुख्य स्थान । ६. नीच बुद्धि भएका । ७. आत्मविषयक ज्ञान नभएका ।

[१]अपार [२]कामना धर्दै-[३]दंभ-मान-मदान्ध भै ।
[४]मनमानी, कल्पना ली, गर्छन् [५]दुष्कर्म ती सधैं ।।

अनि कहिल्यै पनि पूर्ण नहुने भएको काम अर्थात्-विषयोपभोगको इच्छा लिएर आसुरीजनहरू दंभ, मान र मदले व्याप्त भएर, मोह हुनाले झूट्मूट् विश्वास अर्थात् मनमोजी कल्पना गर्दै, खराब काम गर्न प्रवृत्त हुन्छन् ।।

चिन्तामपरिमेयां च प्रलयान्तामुपाश्रिताः ।।
कामोपभोगपरमा एतावदिति निश्चिताः ।।११।।

नमरून्ज्यालको पापी, लंबा, देश्चिन्तना लिने ।
कामोपभोगमा [६]डुब्दै, यै हो सर्वस्व ठानने ।।

यस्तै किसीमले आमरणान्त सुखभोग निमित्तका अनगिन्ती चिन्तनाले डसिएका, कामोपभोगमा डुबेका र निश्चयपूर्वक त्यही (विषयवास नाको तृप्ति) लाई नै सर्वसार मानिरहेका- ।।

आशापाशशतैर्बद्धाः कामक्रोधपरायणाः ।।
ईहन्ते कामभोगार्थमन्यायेनार्थसञ्चयान् ।।१२।।

बाँधिदै आश-पाशाले [७]काम-क्रोध-परायण ।
मौजका निम्तिमा जम्बा गर्छन् अन्यायले धन ।।

सयकडौं आशा-पाशले जकडिएका, काम क्रोधमा तत्पर रहेका,

---

१. कहिल्यै पार पाई नसकिने । २. विषयवासना । ३. छल अभिमान मदलो अन्धे । ४. जेमनमा आयो उही करो । ५. नीच कर्म । ६. हर बखत फसीरहँदै । ७. विषयवासना र रिसमात्र मुख्य स्थान भएका ।

यस्ता आसुरीजनहरू मोजमजाको सुख उडाउनाको लागि अन्यायले धेरै धन लुटेर जम्मा गर्न चाहन्छन् ।।

इदमद्य मया लब्धमिमं प्राप्स्ये मनोरथम् ।।
इदमस्तीदमपि मे भविष्यति पुनर्धनम् ।।१३।।

आज मैले येति पाएँ, पछी येति म पाउँला ।
साथमा येति मेरो छ, भोलि त्यो अरू आउला ।।

मैले आज यो यति पाएँ, भोली त्यो मनोरथ सिद्ध गर्नेछु, आज यो यति धन मेरा साथैमा छ, अनि त्यो अरू पनि फेरि मेरा हात पर्न आउनेछ ।।

असौ मया हतः शत्रुर्हनिष्ये चापरानपि ।।
ईश्वरोऽहमहं भोगी सिद्धोऽहं बलवान् सुखी ।।१४।।

मैले यो मारियो शत्रु, म मारूँला अरू पछि ।
मै हुँ मालिक, [1]मै भोगी, मै [2]सिद्ध, बलवान्, सुखी ।।

यस शत्रुलाई मैले मारें; यस्तै अरूलाई पनि मारूँला, मैं ईश्वर (मालिक), मैं भोगी, मैं बलवान् र मैं सुखी पनि हूँ ।।

आढ्योऽभिजनवानस्मि कोऽन्योऽस्ति सदृशो मया ।।
यक्ष्ये दास्यामि मोदिष्य इत्यज्ञानविमोहिताः ।।१५।।

कुलीन, [3]धनवान् मै छू, को छ मेरो बराबर ।
पुज्छू, दिन्छू मोज गर्छू, ठान्ने ती मूर्ख [4]पामर ।।

---

१. सुखभोग गर्ने । २. सब सिद्धि भएको । ३. धनी । ४. राक्षसी श्रेणीमा जन्मेका नीच ।

म संपन्न र कुलीन छु, मतुल्य अरू को छ? म यज्ञ गर्नेछु, दान दिनेछु, मोजमज्जा गर्नेछु, यस प्रकारसँग अज्ञानले मोहित भएका (बेहोशीमा परेका)

अनेकचित्तविभ्रान्ता मोहजालसमावृताः ।।
प्रसक्ताः कामभोगेषु पतन्ति नरकेऽशुचौ ।।१६।।

हजारौं मन ली घुम्दै, मोहका [1]जालमा परी ।
सुख-भोगादिमा [2]लट्टू , डुब्छन् नरकमा झरी ।।

अनेक प्रकारका मनमानी कल्पनामा घुमेका, मोहका फन्दामा फसेका, विषयभोगमा आसक्त हुने तिनी आसुरीजन अपवित्र नरक (दुःख) मा पर्दछन् (खसिन्छन्) ।।

आत्मसंभाविताः स्तब्धा धनमानमदान्विताः ।।
यजन्ते नामयज्ञैस्ते दम्भेनाविधिपूर्वकम् ।।१७।।

[3]आत्मश्लाघी, ठढीरा ती मैमत्त धन-मानले ।
गर्दछन् [4]नामका यज्ञ, विधि छोडेर दंभले[5] ।।

आफ्नो प्रशंसा गर्ने, हठ गरी अकडिने, धन र मानका मदले युक्त भएका, ती आसुरीजन शास्त्रको विधि छोडेर, दंभले खालि नामको निमित्त मात्र यज्ञ गर्दछन् ।।

अहंकारं बलं दर्पं कामं क्रोधं च संश्रिताः ।।
मामात्मपरदेहेषु प्रद्विषन्तोऽभ्यसूयकाः ।।१८।।

---

१. फन्दामा । २. लागी पर्ने आसुरहरू । ३. आफूलाई सराहने । ४. नामैका या नाम मिलिका । ५. देखाउनाको खातिरले ।



बल, सेखी अहंकार,कामना, रिसले गरी ।
सबैका घटमा बस्ने मलाई दोस्तछन् [1]जरी ।।

अहंकार, बल घमण्ड, कामना, क्रोध इत्यादिले खूब फुलेर आफ्नो र अरू सबका देह मा रहने, म परमेश्वरलाई द्वेष गर्ने (निन्दा) गर्ने ।।

तानहं द्विषतः क्रूरान्संसारेषु नराधमान् ।।
क्षिपाम्यजस्रमशुभानासुरीष्वेव योनिषु ।।१९।।

ती नीच, क्रूर, विद्वेषी[2], नराधमहरूकन ।
नीच,-[3]योनि-विषे नित्य फ्यौंकिदिन्छु म, अर्जुन !

अनी अशुभ कर्म गर्ने, तिनै द्वेषी र क्रूर नराधमहरूलाई म यस संसारका आसुरीयोनि अर्थात्-पापयोनिहरूमा नै सधैं फ्यौंकिदिन्छु ।।

आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि ।।
मामप्राप्यैव कौन्तेय ! ततो यान्त्यधमां गतिम् ।।२०।।

आसुरी-योनि पाएर, जन्मेका मूर्ख जीव[4] ती ।
मलाई नचिह्नी जान्छन् जन्म-जन्मै [5]अधोगति ।।

हे कौन्तेय ! यस प्रकार धेरै जन्मजन्मान्तरसम्म पनि आसुरीयोनि पाएर, ती मूर्खहरू मलाई नचिनेर आखिर अत्यन्त अधोगतिमा नै पुग्दछन् ।

नरकका ढोका काम क्रोध लोभ हुन् -

त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः ।।
कामक्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत् ।।२१।।

---

१. ज्यादा नै डाह गरी । २. रिस गर्ने । ३. पशु-पक्षी-कीरा इत्यादि गरिएको अज्ञानी जुनीमा । ४. देहधारीहरू । ५. नीच गति (नरक) ।

बल, सेखी अहंकार, कामना, रिसले गरी ।
सबैका घटमा बस्ने मलाई दोस्तछन् [1]जरी ।।

अहंकार, बल घमण्ड, कामना, क्रोध इत्यादिले खूब फूलेर आफ्नो र अरू सबका देह मा रहने, म परमेश्वरलाई द्वेष गर्ने (निन्दा) गर्ने ।।

तानहं द्विषतः क्रूरान्संसारेषु नराधमान् ।।
क्षिपाम्यजस्रमशुभानासुरीष्वेव योनिषु ।।१९।।

ती नीच, क्रूर, विद्वेषी[2], नराधमहरूकन ।
नीच, -[3]योनि-विषे नित्य फ्याँकिदिन्छु म, अर्जुन !

अनी अशुभ कर्म गर्ने, यिनै द्वेषी र क्रूर नराधमहरूलाई म यस संसारका आसुरीयोनि अर्थात्-पापयोनिहरूमा नै सधैं फ्याँकिदिन्छु ।।

आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि ।।
मामप्राप्यैव कौन्तेय ! ततो यान्त्यधमां गतिम् ।।२०।।

आसुरी-योनि पाएर, जन्मेका मूर्ख जीव[4] ती ।
मलाई नचिह्नी जान्छन् जन्म-जन्मैं [5]अधोगति ।।

हे कौन्तेय ! यस प्रकार धेरै जन्मजन्मान्तरसंम पनि आसुरीयोनि पाएर, यी मूर्खहरू मलाई नचिनेर आखिर अत्यन्त अधोगतिमा नै पुग्दछन् ।

नरककाढोका काम क्रोध लोभ हुन् -

त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः ।।
कामक्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत् ।।२१।।

---

१. ज्यादा नै डाह गरी । २. रिस गर्ने । ३. पशु-पक्षी-कीरा इत्यादि गरिएको अज्ञानी जुनीमा । ४. देहधारीहरू । ५. नीच गति (नरक) ।

कामना, क्रोध वा लोभ[2] तीन यी [1]आत्मनाशक ।
[2]नरक-द्वार हुन् पार्थ ! यिन्को त्यागै छ लायक ।।

काम, क्रोध र लोभ-यिनै तीन प्रकारका नरकका द्वार (ढोका हुन् कयिनले हाम्रो सत्यानाश गर्दछन्, यसै उसले यी तीनोटैलाई त्याग गर्नु पर्दछ ।।

एतैर्विमुक्तः कौन्तेय ! तमोद्वारैस्त्रिभिर्नरः ।
आचरत्यात्मनः श्रेयस्ततो याति परां गतिम् ।।२२।।

तीन यी [3]तमका ढोका-देखि जब विमुक्त[4] भो ।
अनि आफ्नो गरी श्रेय[5], त्यो [6]परंपद निष्ट भो ।।

हे कौन्तेय! यी तीन तमोद्वारबाट छुटेपछि मात्र मानिस त्यही आचरण गर्न लाग्दछ जसमा उसको कल्याण हुन्छ, अनि उत्तम गति प्राप्त गर्दछ (लिन सक्दछ) ।।

यः शास्त्रविधिमुत्सृज्य वर्तते कामकारतः ।।
न स सिद्धिमवाप्नोति न सुखं न परां गतिम् ।।२३।।

शास्त्रको विधि छोडेर चल्छ जो मनमोजले ।
सिद्धि, सौख्य, परं-धाम कुनै पाउन्न तेसले ।।

जो शास्त्रको विधि छोडेर मन-माफिक गर्न लाग्दछ, त्यसलाई नसिद्धि मिल्दछ, न सुख मिल्दछ, न त उत्तम गति (मुक्ति) पनि मिल्दछ, अर्थात् त्यसले केही पनि पाउँदैन ।।

---

१. आफ्नो संहार गर्ने । २. नरकका ढोका । ३. अज्ञानका । ४. छुटकारा पाउने । ५. भल्लो कुरो । ६. उच्चपदमा रहेको ।

तस्माच्छास्त्रं प्रमाणं ते कार्याकार्यव्यवस्थितौ ।।
ज्ञात्वा शास्त्रविधानोक्तं कर्म कर्तुमिहार्हसि ।।२४।।

**शास्त्रै प्रमाण छन् सारा [1]कार्याकार्य बुझाउन ।**
**तस्मात् [2]शास्त्रविधानैका कार्यमा चल अर्जुन !**

यस निमित्त कर्तव्य र अकर्तव्य को **निर्णय गर्नलाई** तिमीले शास्त्रहरूको प्रमाण मान्नुपर्दछ, अनि शास्त्रमा जे **बताएको छ,** त्यो राम्ररी संझेर, त्यसकै अनुसार यस लोकमा तिमीलाई **कर्म** गर्नु उचित छ ! (५९४)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'दैवासुरसंपद्विभागयोगो' नाम
षोडशोऽध्यायः ।।१६।।

इति नेपालीभाषामा कोमलगीता दैवासुरसंपद्विभागयोगो' नाम
षोडश अध्याय समाप्त ।।१६।।



---

१. कर्तव्य र अकर्तव्य । २. शास्त्रले विधान गरिएका ।

# श्रीमद्भगवद्गीता

## कोमलगीता

### श्रद्धात्रयविभाग-योगः १७

### तीन श्रद्धानुसार पुरुष-

अर्जुन उवाच-

ये शास्त्रविधिमुत्सृज्य यजन्ते श्रद्धयान्विताः ।।
तेषां निष्ठा तु का कृष्ण ! सत्त्वमाहो रजस्तमः ।।१।।

जो [1]शास्त्र छोडी श्रद्धाले गर्छन् यज्ञ धमाधम,
तिन्को त्यो कुन हो [2]चेष्टा सत्त्व वा रज वा तम ?

अर्जुनले सोधे-हे कृष्ण ! जुन मानिस श्रद्धाले युक्त भई शास्त्रको विधिलाई छोडेर यज्ञ (भजन, पूजन, इत्यादि) गर्दछन्, तिनको निष्ठा के कस्तो हो अर्थात् सात्त्विक, राजस तामस के हो ? ।।

श्रीभगवानुवाच-

त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावजा ।।
सात्त्विकी राजसी चैव तामसी चेति तां शृणु ।।२।।

हुन्छ तीन-थरी श्रद्धा स्वभावैले तमामको,
सात्विकी, राजसी त्यस्तै तामसी तीन नामको ।

---

१. शास्त्रको विधि नगरी । २. मनको स्थिति ।

भगवानले आज्ञा गर्नुभयो-सारा प्राणीको श्रद्धा स्वभावैले तीन प्रकारको हुन्छ, सात्विक, दोस्रो, राजस र तेस्रो तामस, अब यिनको वर्णन सुन ।।

सत्वानुरूपा सर्वस्य श्रद्धा भवति भारती ! ।।
श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः ।।३।।

[1]सत्व-माफिकको श्रद्धा सबैको हुन्छ वास्तव,
मनुष्य [2]श्रद्धामय छ, श्रद्धामाफिक बन्दछ ।

हे भारत! सब जनको श्रद्धा आफ्नो सत्वको अनुसार अर्थात् प्रकृति, स्वभावको अनुसार हुन्छ, मनुष्य श्रद्धामय छ, जसको जस्तो श्रद्धा रहन्छ, त्यो त्यस्तो नै हुन्छ अर्थात् त्यही स्वरूप हुन्छ ।।

यजन्ते सात्विका देवान्यक्षरक्षांसि राजसाः ।।
प्रेतान्भूतगणांश्चान्ये यजन्ते तामसा जनाः ।।४।।

सात्विकी देवता मान्छन्, यक्ष-राक्षस राजसी,
भूतप्रेतहरूलाई मान्दछन् जन तामसी ।

जो पुरुष सात्विक छन् अर्थात् जसको स्वभाव सत्वगुण-प्रधान छ, तिनीहरू देवताहरूलाई पूजन गर्दछन् राजस (रजोगुणी पुरुषहरू यक्ष र राक्षसहरूलाई पूजा गर्दछन्, यस्तै यिनीबाहेक जो तामसपुरुषहरू (तमो गुणी) छन्, तिनी प्रेत र भूतहरूलाई पुज्दछन् ।।

इनिहरूभन्दा बाहेकका आसुर-

अशास्त्रविहितं घोरं तप्यन्ते ये तपो जनाः ।।
दंभाहंकारसंयुक्ताः कामरागबलान्विताः ।।५।।

१. प्रकृति अनुसारको । २. श्र... स्वरूप ।

लिई दंभ अहंकार [१]काम-रागसमेतको,
अत्युग्र[२] तप जो गर्छन् छोडेर[३]विधि शास्त्रको-

जुन मानिस दंभ र अहंकारले युक्त भएर, खालि कामना र आसक्ति को बलले शास्त्रको विरुद्ध घोर (उग्र) तपस्या गर्दछन् ।।

कर्शयन्तः शरीरस्थं भूतग्राममचेतसः ।।
मां चैवान्तः शरीरस्थं तान्विद्ध्यासुरनिश्चयान् ।।६।।

[४]पञ्चभूत र यो देह-भिन्नको[५] मकनै पनि ।
अविवेकी बनी[६] पिर्दै, जान्नू ती आसुरी भनी ।।

त्यस्तै जो केवल शरीरका पञ्च-महाभूतको समुदायलाई मात्र होइन कि शरीरको भित्र रहने (आत्मा) मलाई पनि कष्ट दिन्छन्, तिनलाई अविवेकी र आसुरी-बुद्धिले युक्त असुर हुन् भनेर जान ।।

सात्विक राजस र तामस आहार-

आहारस्त्वपि सर्वस्य त्रिविधो भवति प्रियः ।।
यज्ञस्तपस्तथा दानं तेषां भेदमिमं शृणु ।।७।।

सबैको हुन्छ [७]आहार पनी प्यारो तिनै थरी ।
यज्ञ, दान, तपस्याका सुन भेद तिनै थरी ।।

हरेकलाई रूचि लाग्ने (मन पर्ने) आहार पनि तीन प्रकारको हुन्छ औ यही हाल यज्ञ, तप दानको पनि हुन्छ, तिनको भेद बताउँछु, सुन ।।

---

१. विषयवासना २. डर लाग्दो । ३. आज्ञा । ४. पृथिवी, अप, तेज, वायु आकाश । ५.अन्तः करणमा रहेको । ६. दुःख दिंदै। ७. खाइने कुरा ।

आयुः सत्वबलारोग्यसुखप्रीतिविवर्धनाः ।।
रस्याः स्निग्धाः स्थिरा हृद्या आहाराः सात्विकप्रियाः ।।८।।

जो [1]सत्वायु बलारोग्य-सुख-[2]प्रीति बढाउँछन् ।।
ती चिल्ला, रसिला, मीठा, [3]अन्न [4]सात्विकभोग्य छन् ।।

आयु, सात्विकवृत्ति बल, आरोग्य, सुख र प्रीति बढाउने, रसिला, चिल्ला, स्थिर अर्थात् शरीरमा भिजेर धेरै कालसम्म अडिने, मनलाई आनन्द दिने, आहार सात्विक मनुष्यलाई प्रिय हुन्छन् ।।

कट्वम्ललवणात्युष्णातीक्ष्णरूक्षविदाहिनः ।।
आहारा राजसस्येष्टा दुःखशोकामयप्रदाः ।।९।।

अमिलो, नुनिलो, पीरो तातो, पोल्ने, [5]तिखो, रूखो ।
[6]रोग, शोक दिने अन्न राजसी मान्दछन् [7]निको ।।

पीरो, अमिलो, नुनिलो, ज्यादा तातो, तिखो, रूखो, दाह गर्ने, दुःख, शोक, रोग उब्जाउने आहारा राजसी प्रकृतिका मनुष्यहरू निको मान्दछन् ।।

यातयामं गतरसं पूति पर्युषितं च यत् ।।
उच्छिष्टमपि चामेध्यं भोजनं तामसप्रियम् ।।१०।।

चीसो, बिरसिलो, बासी, जो अत्यन्त गन्हाउँछ ।
अपवित्र, जुठो, जो छ तामसी त्यो रूचाउँछ ।।

केही कालसम्म राखेर चीसो भएको, बिरसिलो, दुर्गन्धयुक्त, वासी, जुठो र अपवित्र अन्न तामसी पुरूषलाई रूचि लाग्दछ ।।

---

१. सत्वगुणी वृत्ति । २. रुचि र खुशी । ३. स्थिर अन्न । ४. सत्वगुणीले रूचाइने । ५. तिक्खरो । ६. रोग-शोक दुःखादि । ७. असल (बढिया)

तीन प्रकारका यज्ञ -

अफलाकांक्षिभिर्यज्ञो विधिदृष्टो य इज्यते ।।
यष्टव्यमेवेति मनः समाधाय स सात्त्विकः ।।११।।

फलेच्छा नगरी, चित्त सँभाली विधि-माफिक ।
[1]कर्तव्य संझी गरिने, यज्ञ हो पार्थ! [2]'सात्त्विक' ।।

फलाशाको आकांक्षा नलिएर, आफ्नो कर्तव्य संझी, शास्त्रको विधिअनुसार, शान्त चित्तले जो यज्ञ गरिन्छ, त्यो सात्त्विक यज्ञ हो ।।

अभिसन्धाय तु फलं दंभार्थमपि चैव यत् ।।
इज्यते भरतश्रेष्ठ! तं यज्ञं विद्धि राजसम् ।।१२।।

फलको चाह ली त्यस्तै लोकमा कहलाउन ।
गरिने, यज्ञ जो हुन्छ त्यो हो'राजस'[3] अर्जुन!

परन्तु हे भरतश्रेष्ठ! फलको इच्छाले अथवा दंभका निमित्त अर्थात् ऐश्वर्य देखाउनाको निमित्त गरिने जो यज्ञ हुन्छ, त्यसलाई राजस यज्ञ भनेर संझ ।।

विधिहीनमसृष्टान्नं मन्त्रहीनमदक्षिणम् ।।
श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते ।।१३।।

बेमन्त्र[4], बेदक्षिणाको त्यस्तै बेअन्नदानको ।
बेश्रद्धा-विधिको यज्ञ हुन्छ [5]'तामस' नामको ।।

शास्त्रको विधिले रहित, अन्नदानले शून्य, बिना मन्त्रको, बिना दक्षिणाको र श्रद्धा नभएको यज्ञ तामस कहिन्छ ।।

---

१. अवश्यै नगरी नहुने । २. सत्त्व गुणले युक्त । ३. रजोगुणले युक्त । ४. मन्त्र-बेगरको । ५. तमोगुणले युक्त ।

तपका तीन भेद -

देवद्विजगुरुप्राज्ञपूजनं शौचमार्जवम् ।।
ब्रह्मचर्यमहिंसा च शारीरं तप उच्यते ।।१४।।

देवद्विज[1]-गुरु-प्राज्ञ[2]पूजा, शौच[3], सिधापन ।
ब्रह्मचर्य, अहिंसा हो 'देहको[4] तप' अर्जुन ।।

देवता, ब्राह्मण, गुरु र विद्वान्‌हरूको पूजा, पवित्रता, ऋजुता (सोझ्याइ) ब्रह्मचर्य र अहिंसालाई शरीर अर्थात् शरीरले गरिने तपस्या भन्दछन् ।।

अनुद्वेगकरं वाक्यं सत्यं प्रियहितं च यत् ।।
स्वाध्यायाभ्यसनं चैव वाङ्मयं तप उच्यते ।।१५।।

न घोचने, मिठो, साँचो, प्यारो र हित बोल्नु ।
नित्यै [5]पाठहरु गर्नू 'बोलीको-तप[6]' सम्झनू ।।

मनलाई दिग्दार नगराउने, साँचो, प्यारो, हित गर्ने वचन बोल्नलाई र स्वाध्याय अर्थात् आफ्नो (जातमाफिकको) कर्मको अभ्यासलाई वाङ्मय अर्थात् बोलीले गरिने तपस्या भनेर बताउँछन् ।।

मनःप्रसादः सौम्यत्वं मौनमात्मविनिग्रहः ।।
भावसंशुद्धिरित्येतत्तपो मानसमुच्यते ।।१६।।

[7]मनःप्रसादः सिधिकनी, नबोल्नु, चित्त रोक्नु ।
भावना शुद्धि यो सारा [8]'मनकोतप' सम्झनू ।।

---

१. ब्राह्मण । २. ज्ञानी विद्वान । ३. पवित्र रहनु । ४. शरीरको तपस्या । ५. जातमाफिक कामका अभ्यासहरू । ६. वाचिक तपस्या ।७. मनको प्रसन्नता । ८. मानसिक - तपस्या ।

मन खुशी राख्नु, सुशील हुनु, मुनिहरूकै जस्तो वृत्ति राख्नु, मन रोक्नु र शुद्ध भावना लिनु-यिनलाई मानस अर्थात् मनले गरिने तपस्या भन्दछन् ।।

सात्विकादि भेदले सब तीनै प्रकार-

श्रद्धया परया तप्तं तपस्तत्त्रिविधं नरैः ।।
अफलाकांक्षिभिर्युक्तैः सात्विकं परिचक्षते ।।१७।।

**श्रद्धा-साथ फलाकांक्षा नलिई, [1]युक्त भैकन ।**
**गरेको त्यो तीनथरी तप [2]'सात्विक' हो गुन ।।**

यिनै माथि बताइएका तीन किसिमका तपस्या मनुष्यले फलको आकांक्षा नराखेर उत्तम श्रद्धा र योगयुक्त बुद्धिले गर्दछ भने ती सब सात्विक कहलाउँछन् ।।

सत्कारमानपूजार्थं तपो दम्भेन चैव यत् ।।
क्रियते तदिह प्रोक्तं राजसं चलमध्रुवम् ।।१८।।

**सत्कार, मान-पूजा र [3]दम्भनिति गरिन्छ जो ।**
**त्यो 'राजसी' तपस्या हो [4]चल अस्थिर नै छ यो ।।**

जुन तप आफ्नो सत्कार, मान, पूजाका निमित्त अथवा दंभका निमित्त पकन गरिन्छ, त्यो चंचल र अस्थिर तप, शास्त्रहरूमा राजस कहिएको छ ।।

मूढग्राहेणात्मनो यत्पीडया क्रियते तपः ।।
परस्योत्सादनार्थं वा तत्तामसमुदाहृतम् ।।१९।।

---

१. कर्मयोगयुक्त । २. सत्वगुणले युक्त । ३. देखौवा । ४. चंचल ।

[१]दुराग्रह लिई, देह पिड्याई, गरिने तप ।
शत्रुनाशार्थको [२]यद्वा हो सबै 'तामसी तप' ।।

मूढ आग्रह लिई, आफै कष्ट उठाएर अथवा जन्म-मरण आदि कर्मको द्वारा अर्कालाई सताउनको निमित्त गरिएको तप तामस भनेर बताइन्छ ।।

सात्विकादि तीन प्रकारका दान -

दातव्यमिति यद्दानं दीयतेऽनुपकारिणे ।।
देशे काले च पात्रे च तद्दानं सात्विकं स्मृतम् ।।२०।।

देश, काल तथा पात्र पारी [३]अनुपकारक ।
[४]दातव्य संझी दिइने दान हो जान 'सात्विक' ।।

त्यो दान सात्विक भनेर कहिन्छ जो कि कर्तव्य बुद्धिले गरिन्छ, जस्तै योग स्थान, काल र पात्रको विचार गरेर गरिन्छ र जो आफ्नो उपर प्रत्युपकार नगर्नेलाई दिइन्छ ।।

यत्तु प्रत्युपकारार्थं फलमुद्दिश्य वा पुनः ।।
दीयते च परिक्लिष्टं तद्दानं राजसं स्मृतम् ।।२१।।

[५]फलोद्देश्य गरी यद्वा लीएको[६] बदला दिन ।
गाह्रो मानेर दिइने, दान 'राजस' मा गन ।।

परन्तु उसले गरिएका उपकारको बदलामा अथवा केही फलको आश राखेर बडो गाह्रो मानी जो दान दिइन्छ, त्यो दान राजस भनी कहिएको छ ।।

---

१. खराब इच्छा । २. अथवा । ३. प्रत्युपकार न गर्ने । ४. दिनु कर्तव्य हो भन्ने । ५. केही फलको चाहना । ६. आफूले पहिले उसबाट पाएको ।

अदेशकाले यद्दानमपात्रेभ्यश्च दीयते ।।
असत्कृतमवज्ञातं तत्तामसमुदाहृतम् ।।२२।।

दश, काल नपारेर खूब हेलाँ गरीकन ।
अपात्रलाई दिइने, दान 'तामस' मा गन ।।

अयोग्य स्थानमा, अयोग्यकालमा, अपात्र मनुष्यलाई केही सत्कार नगरी अथवा अपहेलना पूर्वक (हेलाँ गरेर) जो दान दिइन्छ, त्यो तामस दान कहलाउँछ ।।

ॐ तत्सत् ब्रह्मनिर्देश-

ॐतत्सदिति निर्देशो ब्रह्मणस्त्रिविधः स्मृतः ।।
ब्राह्मणास्तेन वेदाश्च यज्ञाश्च विहिता पुराः ।।२३।।

[1]ब्रह्मनिर्देश 'ॐ-तत्-सत्' यै हो तीन प्रकारको ।
त्यैबाट भो [2]अघी सृष्टि वेद, ब्राह्मण, यज्ञको ।।

शास्त्रमा परब्रह्मको निर्देश 'ॐतत्-सत्' यो तीन प्रकारले गरिएको छ, त्यसै निर्देशबाट पहिले ब्राह्मण, वेद र यज्ञ पनि रचना गरिएका हुन् ।।

ॐतत्सत्का उपयोगी कर्म -

तस्मादोमित्युदाहृत्य यज्ञदानपःक्रियाः ।।
प्रवर्तन्ते विधानोक्ताः सततं ब्रह्मवादिनाम् ।।२४।।

[3]तस्मात् ॐकारका साथै यज्ञ दान-तपः [4]क्रिया ।
विधिमाफिक चल्दैछन् सर्वदा ब्रह्मवादिका ।।

जगत्को आरंभ ईश्वर यही संकल्पले भएको हुनाले ब्रह्मचारी

---

१. ईश्वरको देखावट । २. पहिले । ३. त्यसो हुनाले । ४. कर्महरू ।

ज्ञानीहरूका यज्ञ, दान, तप र त्यस्तै अरू शास्त्रोक्त कर्महरू सर्वदा ॐकारको उच्चारण साथसाथै हुन्छन् ।।

तदित्यनभिसन्धाय फलं यज्ञतपःक्रिया ।।
दान क्रियाश्च विविधाः क्रियन्ते मोक्षकांक्षिभिः ।।२५।।

'तत्'भनी फल छोडेर तप-यज्ञहरूकन ।
[1]मोक्षार्थी गर्दछन् फेरी दान-कर्म अनेकन ।।

तत् शब्दको उच्चारणले फलको आशा नराखेर, मोक्षार्थी पुरुषहरू यज्ञ, दान, तप आदि अनेक प्रकारका क्रिया (कर्म) गरिरहन्छन् ।।

सद्भावे साधुभावे च सदित्येतत्प्रयुज्यते ।।
प्रशस्ते कर्मणि तथा सच्छब्दः पार्थ! युज्यते ।।२६।।

[2]अस्तित्वको, भलाईको, अर्थमा सत् [3]प्रयुक्त छ ।।
बढिया काममा त्यस्तै सत् शब्द [4]उपयुक्त छ ।।

हे पार्थ ! अस्तित्व र साधुता अर्थात् भलाईको अर्थमा सत् शब्दको प्रयोग गरिएको छ, यस्तै प्रकारले असल कर्महरूका निमित्त पनि सत् शब्दको नै उद्योग भएको छ ।।

यज्ञे तपसि दाने च स्थितिः सदति चोच्यते ।।
कर्म चैव तदर्थीयं सदित्येवाभिधीयते ।।२७।।

यज्ञ दान तपस्यामा [5]स्थिरता सत् कहाउँछ ।
तिन्का[6] निमित्तको कर्म पनी सत् कहलाउँछ ।।

---

१. मोक्ष चाहना गर्नेहरू । २. ईश्वरविहिन कर्म हो गर्नुपर्ने कर्तव्ययसका। ३. प्रयोग गरिन्छ । ४. काम लगाइन्छ । ५. दृढविश्वास राख्नु । ६. यज्ञ दान तपस्याका निमित्तको ।

यज्ञ, तप र दानमा स्थिर भावना राख्नुलाई पनि सत् भन्ददन् त्यस्तै यिनका निमित्त जो कर्म गरिन्छ, त्यस कर्मको नाम पनि सत् नै हो ।।

असत् दुवै लोकमा निष्फल छ-

अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत् ।।
असदित्युच्यते पार्थ ! न च तत्प्रेत्य नो इह ।।२८।।

**होम, दान, तपः कर्म अश्रद्धाले भयो [1]जहाँ ।।**
**त्यो कहिन्छ [2]असत् पार्थ ! हित हुन्न यहाँ उहाँ ।।**

हे पार्थ ! अश्रद्धाले जो हवन गरिन्छ, जो दान दिइन्छ, जो तपस्या गरिन्छ, अथवा अरू जो कुछ कर्म गरिन्छ, त्यसलाई अर्थात् असत् भन्दछन् , त्यो कर्म न त मरेपछि परलोकमा, न त यस लोकमा पनि हितकारी हुन आउँदैन अर्थात् कहीं पनि हित गर्ने हुँदैन । (६२२)

इति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे
श्रीकृष्णार्जुनसंवादे 'श्रद्धात्रयविभागयोगो' नाम
सप्तदशोऽध्यायः ।।१७।।

इति नेपालीभाषामा कोमलगीता श्रद्धात्रयविभागयोगो' नाम
सप्तदशोऽध्याय समाप्त ।।१७।।



---

१. बेकाममा । २. यस र परत्रमा हितनहुने ।

ॐ

# श्रीमद्भगवद्गीता

## कोमलगीता

## मोक्षसंन्यास-योगः १८

### संन्यासर त्यागको कर्मयोगी व्याख्या-

अर्जुन उवाच-

संन्यासस्य महाबाहो ! तत्वमिच्छामि वेदितुम् ।।
त्यागस्य च हृषीकेश ! पृथक् केशिनिषूदन ! ।।१।।

**केशिघातीन्[१], हृषीकेश ! संन्यास, त्यागको सब ।**
**भिन्न-भिन्नै गरी तत्व जान्न चाहन्छु [२]माधव !**

अर्जुनले सोधे- हे महाबाहु, हृषीकेश, केशिदैत्यनाशक ! म संन्यासको तत्व र त्यागको तत्व पृथक् पृथक् जान्न चाहन्छु, बताउनुहोस् ।।

श्रीभगवानुवाच-

काम्यानां कर्मणां न्यासं संन्यासं कवयो विदुः ।।
सर्वकर्मफलत्यागं प्राहुस्त्यागं विचक्षणाः ।।२।।

**काम्यकर्महरू छोड्नु विद्वान 'संन्यास' भन्दछन् ।**
**सारा कर्म-फल त्याग्नु विद्वान्ले 'त्याग' मान्दछन् ।१**

---

१. केशिदैत्यलाई नाश गर्ने । २. लक्ष्मीका पति, हे कृष्ण ।

भगवान्ले वर्णन गर्नुभयो- जति काम्यकर्महरू छन्, तिनको न्यास अर्थात् छोड्नुलाई नै ज्ञानीहरु 'सन्यास' संज्ञन्छन् त्यस्तै संपूर्ण कर्मकाफलको त्यागलाई पण्डितहरू त्याग भनेर मान्दछन् ।

कर्म छोड्न र नछोड्नूको निर्णय-

त्याज्यं दोषवदित्येके कर्म प्राहुर्मनीषिणः ।।
यज्ञदानतपः कर्म न त्याज्यमिति चापरे ।।३।।

**कुनै विद्वानहरू भन्छन् दोषी[1] हो कर्म छोड्नु ।**
**कुनै भन्छन् -यज्ञ, दान, तप, कर्म नछोड्नू ।।**

कुनै पण्डितहरूको कथन छ कि, कर्म दोषयुक्त छ यस कारण त्यसलाई सर्वथा त्याग गर्नूपर्दछ, त्यस्तै अरू विद्वानहरू भन्दछन् कि, यज्ञ-दान-तप र कर्मलाई कहिल्यै पनि छोड्नु हुँदैन ।

निश्चयं शृणु मे तत्र त्यागे भरतसत्तम! ।।
त्यागो हि पुरुषव्याघ्रः ! त्रिविधः संप्रकीर्तितः ।।४।।

**अहिले सुन लौ मेरो त्यागमा जो छ निश्चय[2] ।**
**तीन प्रकारको हुन्छ यही [3]त्याग [4]धनञ्जय ! ।।**

अतएव सुन लौ भरतवंशमा उत्तम पुरुषश्रेष्ठ ! त्यागका विषयमा मेरो निर्णय सुन, यही त्याग तीन प्रकारको कहिएको छ।।

यज्ञदानतपः कर्म न त्याज्यं कार्यमेव तत् ।
यज्ञो दानं तपश्चैव पावनानि मनीषिणाम् ।।५।।

---

१.दोष भएको अर्थात् बन्धन गराउने । २. पक्का पक्का गरिएको कुरो । ३. छोड्नू । ४. हे अर्जुन ।

नछोडनू यज्ञ दानादि गर्नैपर्दछ अर्जुन !
हुन्छन् यज्ञ तपो, दान विद्वान्का[1] पनि पावन[2] ।

यज्ञ,दान तपर कर्मलाई त्याग गर्नु हुँदैन, यी कर्महरू गर्नै पर्दछ, किनभने यज्ञ, दान र तपहरू बुद्धिमान् ! ज्ञानयुक्त कानिमित्त पनि पवित्र अर्थात् चित्तशुद्धि गराउने हुन् ।।

एतान्यपि तु कर्माणि संङ्गं त्यक्त्वा फलानि च ।।
कर्तव्यानीति मे पार्थ ! निश्चितं मतमुत्तमम् ।।६।।

आसक्ति, फल छोडेर शुभकर्महरु यि त ।
गर्नैपर्दछ यो मेरो हो श्रेष्ठ मत निश्चित[3] ।।

हे पार्थ ! यस कारण, यी यज्ञ, दान,तप आदि पनि आसक्ति नराखी फलहरूलाई छोडिदिएर अरू निष्काम कर्महरूसरह लोकसंग्रहका निमित्तमा गर्दैरहनुपर्दछ । यही मेरो निश्चित मत छ, औ यही उत्तम पनि छ ।।

## कर्मत्यागका सात्विकादि तीनभेद-

नियतस्य तु संन्यासः कर्मणो नोपपद्यते ।।
मोहात्तस्य परित्यागस्तामसः परिकीतितः ।।७।।

जात माफिकको [4]कर्म छोड्नु हुन्न [5]कवै पनि ।
[6]मोहले उसको त्याग जान्नू तामस भो भनी ।।

जुन कर्म सवधर्मको अनुसार नियत अर्थात् स्थिर गरी दिएका छन् ,

---

१. ज्ञानी पुरुषका । २. चित्तसुद्धिकारक । ३. निश्चय गरिएको । ४. धर्म । ५. कस्तै परे पनि । ६. अज्ञानले ।

तिनको संन्यास अर्थात् त्याग गर्नु कसैलाई पनी उचित छैन, तिनको मोहले गरिएको त्याग तामस कहलाउँछ ।।

दुःखमित्येव यत्कर्म कायक्लेशभयात्त्यजेत् ।।
स कृत्वा राजसं त्यागं नै व त्यागफलं लभेत् ।।८।।

दुःख संझी डराएर कर्म छोडिदियो भने ।
'राजस' त्याग भो पार्थ ! हुन्न त्यो फल पाउने ।।

शरीरलाई कष्ट हुने डरले अर्थात् दुःखकारक हुनाले यदि कसैले कर्म छोड्दछ भने त्यसको त्यो त्याग राजस हुन्छ औ त्यागको फल त्यसले (त्यस पुरूषले) पाउँदैन ।।

कार्यमित्येव यत्कर्म नियतं कियतेऽर्जुन ! ।।
सङ्गं त्यक्त्वा फलं चैव स त्यागः सात्विको मतः ।।९।।

आसक्ति, फल छोडेर [१]स्वकर्तव्य भनीकन ।
जो कर्मगरियो त्यै हो 'सात्विक' त्याग अर्जुन ?

हे अर्जुन ! स्वधर्मानुसार तोकिएको कर्म, जब कार्य जा कर्तव्य संझेर आसक्ति र, फल छोडी गरिन्छ, तब त्यसलाई सात्विक त्याग भनेर बताउँदछन् ।।

कर्मफल त्यागी नै सात्त्विक त्यागी हो -

न द्वेष्ट्यकुशलं कर्म कुशले नानुषज्जते ।।
त्यागी सत्वसमाविष्टो मेधावी छिन्नसंशयः ।।१०।।

शुभमा न त आसक्त न विरक्त खराबमा ।
निःशंक, धीमान्, [२]सत्वस्थ, त्यै 'योगी[३] जान लोकमा ।।

---

१. मेरो कर्तव्य हो । २. सात्विक भावना भयेको । ३. संन्यासी ।

जो कुनै अकुशल कर्म अर्थात् अकल्याणकारक कर्मलाई द्वेष पनि गर्दैन, त्यस्तै कल्याणकारक अथवा हितकारी कर्ममा लागी पनि पर्दैन, त्यसलाई नै सत्वशील, बुद्धिमान् र सन्देहरहित त्यागी अर्थात् संन्यासी भन्नुपर्दछ ।।

न हि देहभृता शक्यं त्यक्तुं कर्माण्यशेषतः ।
यस्तु कर्मफलत्यागी स त्यागीत्यभिधीयते ।।११।।

[1]देहवान्‌ले सबै कर्म छोड्नलाई [2]अशक्य छ ।
कर्मका फलको त्यागी सच्चा 'त्यागी' ठहर्दछ ।।

जो देहधारी छ, त्यसबाट सारा कर्मको त्याग हुनु संभव नै छैन । यस कारण जसले कर्म नछोडेर केवल कर्मफलहरूलाई मात्र त्याग गरेको छ, त्यही पुरूष सच्चा त्यागी अर्थात् संन्यासी हो ।।

कर्म फलले त्यागी बाँधीदैंन -

अनिष्टमिष्टं मिश्रं च त्रिविधं कर्मणः फलम् ।।
भवत्यत्यागिनां प्रेत्य नतु संन्यासिनां क्वचित् ।।१२।।

तीनैथरी कर्म-फल [3]इष्टानिष्ट र [4]मिश्रित ।
परत्र भोग्छ [5]अत्यागी, त्यागी भोग्दैन निश्चित ।।

मरण भएपछि अत्यागी मनुष्यलाई अर्थात् फलाशा त्याग न गर्नेलाई तीन प्रकारका फल मिल्दछन्, अनिष्ट, इष्ट र यी दुवै मिलेको मिश्र-परन्तु संन्यासीलाई अर्थात् फलाशा छोडेर कर्म गर्ने पुरूषलाई यी फल मिल्दैनन् अर्थात् यिनले बाधा गर्न सक्दैनन् ।।

---

१. जीऊ धारण गर्ने प्राणीले । २. नसकिने । ३. चाहको र बेचाहको । ४. इष्ट र अनिष्ट मिलेको । ५. कर्मफलको इच्छा गर्नेले ।

कुनैकर्म हुँदा पनि पाँच कारण-

पञ्चैतानि महाबाहो ! कारणानि निबोध मे ।
सांख्ये कृतान्ते प्रोक्तानि सिद्धये सर्वकर्मणाम् ।।१३।।

कर्मका हेतु[1] छन् पांच [2]सांख्यमा सिद्धिखातिर ।
बताएका तिमि जान गर्छू म पनि विस्तर[3] ।।

हे महाबाहु ! कुनै पनि कर्म हुनाको निमित्तमा सांख्यहरूका सिद्धान्तमा पांच कारण हुन्छन् भनेर मानिएका छन् , तिनलाई म बताउँछु सुन ।।

अधिष्ठानं तथा कर्ता करणं च पृथग्विधम् ।
विविधाश्च पृथक्चेष्टा दैवं चैवात्र पञ्चमम् ।।१४।।

अधिष्ठान[4] तथा कर्ता[5] भिन्न-भिन्नै ति [6]साधन ।
[7]अनेक चेष्टा कर्ताका [8]दैव पाँचौ छ कारण ।।

अधिष्ठान (स्थान) कर्ता, भिन्न भिन्न साधन, कर्ताका अनेक प्रकारका पृथक पृथक चेष्टा अर्थात् व्यापार औ त्यसका साथसाथै पांचौ कारण दैव पनि छ ।।

शरीरवाङ्मनोभिर्यत्कर्म प्रारभते नरः ।।
न्याय्यं वा विपरीतं वा पंञ्चैते तस्य हेतवः ।।१५।।

---

१. शुरु हुनामा कारण । २. सांख्यमतका सिद्धान्तमा । ३. खुलासा गरेर । ४. काम गरिने ठाउँ । ५. काम गर्ने पुरुष। ६. काममा मदत गर्ने । ७. काम गर्नामा कर्ताका व्यापार । ८. कार्यसिद्धि या असिद्धि गराउनामा शक्ति राख्ने ईश्वर ।

न्याय्य अन्याय्यका कर्म वाक्मनो देहले जब ।
गर्छ मानिसले, हुन्छन् पाँच हेतु यिनै तब ।।

शरीरले, बोलीले अथवा मनले पनि मनुष्य जो जो कर्म गर्दछ, अनि त्यो कर्म चाहे न्याय्य होस् याविपरीत अर्थात् अन्याय्य होस त्यसका तिनै पूर्वोक्त पांच कारण हुन्छन् ।।

अहंकार छुटिकर्म गरे पनि निर्लेप-

तत्रैवं सति कर्तारमात्मानं केवलं तु यः ।।
पश्यत्कृतबुद्धित्वान्न स पश्यति दुर्मतिः ।।१६।।

यस्तो छँदाछँदै जस्ले नभई [1]बुद्धि-संस्कृति ।
मै हूँ कर्ता भनी ठान्छ, त्यो क्यै जान्दैन दुर्मति ।।

वास्तविक स्थिति यस्तो छँदाछँदै पनि, जो बुद्धि ठीक नहुनाले संझन्छ कि मै एउटा कर्ता हुँ, तब ठान्नुपर्दछ कि त्यो दुर्मति पुरुष केही पनि जान्दो रहेनछ ।।

यस्य नाहंकृतो भावो बुद्धिर्यस्य न लिप्यते ।।
हत्वापि स इमांल्लोकान्न हन्ति न निबध्यते ।।१७।।

जस्को [2]अहंपना छैन, बुद्धि जस्को अलिप्त छ ।
लोकै मारे पनि त्यस्ले न मार्दछ, न बन्ध छ ।।

जसलाई यो भावना (संझना) नै छैन कि म कर्ता हुँ, त्यस्तै जसको बुद्धि अलिप्त छ, त्यसले यदि सारा लोकलाई नै मारीस तापनि संझनु पर्दछ कि त्यसले कसैलाई पनि मारेको छैन औ त्यो कर्म त्यसलाई बन्धन गर्ने पनि हुँदैन ।

---

१. बुद्धिको संस्कार । २. मैं गर्ने हुँ भन्ने अहंकारीपना ।

कर्मचोदना र संग्रहका लक्षणभेद-

ज्ञानं ज्ञेयं परिज्ञाता त्रिविधा कर्मचोदना ।।
करणं कर्म कर्तेति त्रिविधः कर्मसंग्रहः ।।१८।।

'ज्ञान' 'ज्ञेय' तथा 'ज्ञाता'-तीन छन् [1]कर्मचोदना ।
[2]कर्मसंग्रह छन् उत्ती 'कर्त्ता', 'कर्म' र 'साधना' ।।

कर्मचोदना अर्थात् काम गर्नलाई प्रेरणा गर्ने 'ज्ञान, ज्ञेय, ज्ञाता'-को स्वरूपले तीन प्रकारको छ, त्यस्तै कर्मसंग्रह पनि 'करण, कर्म, कर्ता'- को स्वरूपले तीन प्रकारको नै छ ।।

ज्ञानं कर्म च कर्ता च त्रिधैव गुणभेदतः ।।
प्रोच्यते गुणसंख्याने यथावच्छृणु तान्यपि ।।१९।।

[3]गुणका भेदले ज्ञान, कर्म, कर्ता तिनै थरी
गनिन्छन् [4]सांख्यमा, भन्छू [5]ज्यौंका त्यौं, सुन बेसरी ।।

---

१. मानसिक पहिलो विचार । २. मानसिक क्रियाका जोडको बाहिरी क्रिया अर्थात इन्द्रियद्वारा जुनसुकै पनि काम हुनुभन्दा पहिले मनले त्यस कामको निश्चय गर्नुपर्दछ, यही मानसिक विचारलाई कर्म गर्नाको पहिलो विचार भन्दछन् यो स्वभावतः ज्ञान ज्ञेय, ज्ञाता को स्वरूपले तीन प्रकारको हुन्छ, जस्तै गाग्रो बनाउ भन्दा पहिले कुम्हाले । (ज्ञाता) आफ्ना मनमा विचार गर्दछ कि मलाई अमुक चीज (ज्ञेय) बनाउनु छ, त्यो यस रीतले (ज्ञान) होला यो कर्मचोदना भयो । यस प्रकार सँग निश्चय भएपछि त्यो कुम्हाले (कर्ता) माटो चक्र इत्यादि सामग्री (करण) जम्मा गरेर प्रत्यक्ष गाग्रो (कर्म) तैयार गर्दछ, यसलाई कर्मसंग्रह भन्दछन् , यो कर्मसंग्रह पनि तीन प्रकारको नै हुन्छ । ३. सत्व-रज तपका । ४. सांख्यशास्त्रमा । ५. जस्ताको तस्तो ।

कपिलसांख्यस्त्रमा कहिएको छ कि ज्ञान कर्म र कर्ता पनि प्रत्येक सत्व, रज, तम-यी तीन गुणका भेदले गर्दा तीनै प्रकारका हुन्छन् , तीन प्रकारका तिमीलाई जस्ताको तस्तो बताउँछु, सुन ।।

गुणभेदले ज्ञानका तीन भेद -

सर्वभूतेषु येनैकं भावमव्ययमोक्षते ।।
अविभक्तं विभक्तेषु तज्ज्ञानं विद्धि सात्विकम् ।।२०।।

भिन्नाभिन्नै पनी सारा प्राणीमा तत्व एक हो ।
भन्ने जस्बाट जानिन्छ सात्विक ज्ञान जान त्यो ।

जुन ज्ञानले 'विभक्त' अर्थात् भिन्न-भिन्न सब प्राणीमा अविभक्त र अव्ययभाव अथवा तत्व एउटै रहेको छ', भन्ने थाहा हुन्छ, त्यसलाई सात्विक ज्ञान जान ।।

पृथक्त्वेनतु यज्ज्ञानं नानाभावान्पृथग्विधान् ।।
वेत्ति सर्वेषु भूतेषु तज्ज्ञानं विद्धि राजसम् ।।२१।।

सारा भूतहरू माथी यी सबै भिन्न-भिन्न छन् ।
भन्ने भिन्नत्वको ज्ञानलाई 'राजस' भन्दछन् ।।

जुन ज्ञानले यस्तो भिन्नत्वको बोध हुन्छ कि संपूर्ण प्राणी मात्रमा भिन्न-भिन्न प्रकारका अनेक भाव छन् , त्यसलाई राजस ज्ञान भनेर जान ।।

यत्तु कृत्स्नवदेकस्मिन् कार्ये सक्तमहैतुकम् ।।
अतत्वार्थवदल्पं च तत्तामसमुदाहृतम् ।।२२।।

नपाई हेतु [1]तत्वार्थ, भै लिंडेढिपिको वश ।
सबै यै एक हो ठान्ने हो [2]अल्पज्ञान 'तामस' ।।

---

१. वास्तविक कुरो । २. नीचो ज्ञान ।

परन्तु जुन पुरुष बेकारण र वास्तविक तत्व नजानी (नबुझी) एकै बातमा यो संझेर आसक्त (लट्ठ) रहन्छ कि यही नै सब कुछ हो, त्यस्तो अल्प ज्ञानलाई तामस भनेर बताउँछन् ।।

## भावभेदले कर्मका तीन भेद-

नियतं संगरहितमरागद्वेषतः कृतम् ।।
अफलप्रेप्सुना कर्म यत्तत्सात्विकमुच्यते ।।२३।।

**आसक्ति, फल छोडेर, राग द्वेष नलीकन ।**
**कर्तव्य संझी गरिने, कर्म 'सात्विक' मा गन ।।**

फलप्राप्तिको इच्छा नलिने मानिसले मनमा प्रेम व द्वेष केही नराखेर आसक्ति नलिई स्वधर्मानुसार को नियुक्त गरिएको कर्म गर्दछ, त्यस कर्मलाई सात्विक भन्दछन् ।।

यत्तु कामेप्सुना कर्म साहंकारेण वा पुनः ।।
क्रियते बहुलायासं तद्राजसमुदाहृतम् ।।२४।।

**[1]फलाशा वा अहंकार लिई, दुःख अनेकन ।**
**गरिने कर्मलाई नै 'राजसी' जान अर्जुन !**

परन्तु काम अर्थात् फलाशाको आग्रह राख्ने अथवा अहंकार बुद्धिले युक्त भएको मनुष्यले ठूलो परिश्रम (वाहियाती मेहनत) गरी जो कर्म गर्दछ, त्यसलाई राजस भन्दछन् ।।

अनुबन्धं क्षयं हिंसामनवेक्ष्य च पौरूषम् ।।
मोहादारभ्यते कर्म यत्तत्तामसमुच्यते ।।२५।।

**नहेरी नाश, [2]हिंसा र [3]भविष्य अनिपौरूप[4]।**
**मोहले थालिने कर्म जोहो त्यो जान 'तामस'**

१. फल पाउने इच्छा । २. बिगार । ३. पछि । ४. आफ्नो पुरुषार्थ ।

'पछि के होला? आफ्नो सामर्थ्य कति छ? आखिरीमा नाश वा हिंसा (बिगार) होला कि होओइन?' यो कुरा विचार नगरी मोहैले शुरू गरिने कर्मलाई तामस कर्म भनेर बताउँदछन् ।।

काम अनुसार कर्ताका तीन भेद-

मुक्तसंगोऽनहंवादी धृत्युत्साहसमन्वितः ।।
सिद्ध्यासिद्ध्योर्निर्विकारः कर्ता सात्त्विक उच्यते ।।२६।।

भै सिद्धि-विघ्नमा तुल्य, छोडी [1]सङ्ग-अहंपन ।
धैर्य-उत्साह ली गर्ने, कर्ता 'सात्त्विक' मा गन ।।

जसलाई आसक्ति रहँदैन, जो 'म' 'मेरो' भन्ने अहंकार लिई बोल्दैन, कार्यको सिद्धि होस् वा नहोस् दुवै परिणामको बखतमा जो पुरुष मनमा विकार नलिएर धृति (धैर्य) र उत्साहका साथ कर्म गर्दछ, त्यसलाई 'सात्त्विक कर्ता' भन्दछन् ।।

रागी कर्मफलप्रेप्सुर्लुब्धो हिंसात्मकोऽशुचिः ।।
हर्षशोकान्वितः कर्ता राजसः परिकीर्तितः ।।२७।।

फलेच्छु, [2]रागवान्, लोभी, [3]हिंसात्मा र [4]अपावन ।
हर्ष-शोक लिने, कर्ता 'राजसी' जान अर्जुन ! ।।

विषयमा आसक्त, लोभी, सिद्धि भएको बखत हर्ष र असिद्धि भएको बखत शोकले युक्त, कर्मफल पाउनाको इच्छा राख्ने, हिंसात्मक र अपवित्र कर्ता 'राजस' भनेर कहलाउँछ ।।

अयुक्तः प्राकृतः स्तब्धः शठो नैष्कृतिकोऽलसः ।।
विषादी दीर्घसूत्री च कर्ता तामस उच्यते ।।२८।।

---

१. फलको आसक्ति । २. विषयमा आसक्त । ३. बिगार गर्ने ।४. अपवित्र

[१]असभ्य, चञ्चले, जुस्सो, घमंण्डी, ठग, [२]आलस ।
[३]घाती, दिक्क भई गर्ने, कर्ता हो जान 'तामस' ।।

चञ्चल बुद्धि भएको, असभ्य (बेसोमती), सेखीले मस्त भएको, ठग, अर्कालाई हानि गराउने, अल्सी, दिग्दार मन भएको, दीर्घसूत्री अर्थात् ढीलो या घड़ीभरको कामलाई महीनाभरमा गर्ने, यस्तो कर्ता तामस भनेर कहिन्छ ।।

बुद्धिका तीनभेद -

बुद्धेर्भेदं धृतश्चैव गुणतस्त्रिविधं शृणु ।।
प्रोच्यमानमशेषेण पृथक्त्वेन धनञ्जय ।।२९।।

गुणको भेदले गर्दा बुद्धिको [४]धृतिको पनि ।
तीनै भेद यहाँ हुन्छ, भन्छु, लेऊ सबै सुनी ।।

हे धनञ्जय बुद्धि र धृतिका पनि गुणहरूके अनुसार जो तीन प्रकारका भिन्न भिन्न भेद हुन्छन् , ती सब तिमीलाई बताउँछु, सुन ।।

प्रवृत्तिं च निवृत्तिं च कार्याकार्ये भयाभये ।।
बन्धं मोक्षं च यो वेत्ति बुद्धिः सा पार्थ ! सात्त्विकी ।।३०।।

[५]प्रवृत्ति- विनिवृत्ति र [६]कार्याकार्य, [७]भयाभय ।
[८]बन्धमोक्ष पनि जान्ने, बुद्धि हो 'सात्त्विकी' बुझ ।।

हे पार्थ ! जुन बुद्धिले प्रवृत्ति अर्थात् कुनै कर्म गर्नु र निवृत्ति अर्थात् कुनै कर्म नगर्नुलाई जान्दछ, फेरि कार्य (गर्नेयोग्य) के हो ?

---

१. सभामा नालायक जंगली । २. अल्सी । ३. अर्काको नोक्सान । ४. धैर्यको । ५. लागिपर्नु र हट्नु । ६. कर्तव्य र अकर्तव्य । ७. डर र न डर । ८. बन्धन र छुटकारा ।

अकार्य (गर्न अयोग्य) के हो ? केबाट डर लिनू अथवा नलिनू? के कुराले बन्धन हुन्छ? औ केले मोक्ष हुन्छ? यो पनि जान्दछ, त्यो बुद्धि सात्विक कहिन्छ ।।

यया धर्ममधर्मञ्च कार्यञ्चाकार्यमेव च ।।
अयथावत्प्रजानाति बुद्धिःसा पार्थ ? राजसी ।।३१।।

**अधर्म, धर्मको त्यस्तै कार्यको र अकार्यको।**
**ठेगान गर्न सक्दैन, बुद्धि राजस नामको ।।**

हे पार्थ ! जसबाट धर्म र अधर्मको अथवा कार्य र अकार्य को यथार्थसित निर्णय हुँदैन, त्यो बुद्धि राजस कहिन्छ ।।

अधर्म धर्ममिति या मन्यते तमसावृताः।।
सर्वार्थान्विपरीतांश्च बुद्धिः सा पार्थ ! तामसी ।।३२।।

**अधर्मलाई नै धर्म ठान्ने, [1]अज्ञान-गुंफित ।**
**सबै उल्टा समझने, बुद्धि 'तामस' भारत ? ।।**

हे पार्थ ! त्यो बुद्धि तामस हो, जो तम (अज्ञान) ले ढाकिएर अधर्मलाई धर्म संझन्छ र सब कुराभा विपरीत अर्थात् उल्टो मात्र विचार गराइदिन्छ।।

## धृतिका तीन भेद -

धृत्या यया धारयते मनः प्राणेन्द्रियक्रियाः ।।
योगेनाऽव्यभिचारिण्या धृतिः सा पार्थ ! सात्विकी ।।३३।।

**इन्द्रिय, प्राण, मनका कर्म, ली जो [2]स्थिरा [3]धृति ।**
**गरिन्छन् [4]योगकासाथ जान त्यो 'सात्विकी धृति' ।।**

---

१. आनले छोपीइरहेको । २. निश्चल । ३. धैर्य (मनको दृढनिश्चय)
४. निष्कामकर्मयोगले ।

हे पार्थ ! पुरूषले जुन अव्यभिचारिणी अर्थात् यता उति नलहसाउँने धृतिले मन, प्राणर इन्द्रियका व्यापारहरूलाई कर्मफल त्यागरूपी योगको द्वारा गर्दछ, त्यो धृति सात्त्विकी भनिन्छ ।।

यया तु धर्मकामार्थान्धृत्या धारयतेऽर्जुन ।।
प्रसङ्गेन फलाकङ्क्षी धृतिः सा पार्थ ! राजसी ।।३४।।

**[1]प्रसङ्गले [2]फलेच्छा ली, [3]धर्म-कामार्थ साधन ।**
**गर्छ जो धृतिले त्यै हो 'राजसी-धृति 'अर्जुन !**

हे अर्जुन ! प्रसंगानुसार फलको इच्छा राख्ने पुरूष जुन् धृतिले आफ्ना धर्म, कामना र अर्थ (पुरूषार्थ) लाई सिद्ध गर्दछ, त्यो धृति राजसी हो ।।

यया स्वप्नं भयंशोकं विषादं मदमेव च ।।
न विमुञ्चति दुर्मेधा धृतिः सा पार्थ ! तामसी ।।३५।।

**मूर्ख जो धृतिले शोक, मद, निद्रा तथा भय ।**
**विषाद लिन्छ, त्यै जान 'तामसी-धृति' निश्चय ।।**

हे पार्थ ! जुन धृतिले मनुष्य दुर्बुद्धि भएर निद्रा, भय, शोक, विषाद र मद (मत्तपना) छोड्दैन, त्यै धृतिलाई तामसी भनी बताउछन् ।।

## सुखका तीन भेद -

सुखं त्विदानीं त्रिविधं शृणु मे भरतर्षभ ।।
अभ्यासाद्रमते यत्र दुःखान्तञ्च निगच्छति ।।३६।।

---

१. मौकानुसार । २. फलको चाहना । ३. धर्मकामना पुरुषार्थ सिद्धि ।

सुख तीनैथरी हुन्छ, सुन त्यो अहिले यहाँ ।
[1]अभ्यासले जहाँ [2]रम्छ, दुःख छुट्छ सबै जहाँ ।।

अब हे भरतश्रेष्ठ ! म सुखका पनि तीन भेद बताउँछु, सुन । अभ्यास अर्थात् निरन्तर परिचय भइरहेको हुनाले मानिस जसमा दङ्ग पर्दछ र जहाँ दुःखको अन्त्य (नाश) पनि संझन्छ ।।

यत्तदग्रे विषमिव परिणामेऽमृतोपमम् ।
तत्सुखं सात्त्विकं प्रोक्तमात्मबुद्धिप्रसादजम् ।। ३७ ।।

पहिले विष जस्तो र पछाडी अमृत-सरी ।
[3]सुख 'सात्त्विक' हो, मिल्छ आफ्नै बुद्धि सफा गरी ।।

जो आरंभ (शुरू) मा त विष जस्तै लाग्दछ, परन्तु परिणाममा अमृतकै तुल्य छ, फेरि जो आत्मनिष्ट-बुद्धिको प्रसन्नताबाट प्राप्त हुन्छ, त्यस आध्यात्मिक सुखलाई सात्त्विक-सुख भन्दछन् ।।

विषयेन्द्रियसंयोगाद्यत्तदग्रेऽमृतोपमम् ।।
परिणामे विषमिव तत्सुखं राजसंस्मृतम् ।। ३८ ।।

[4]विषयेन्द्रिय मिल्नाले अगाडी [5]अमृतोपम ।
पछी विष-सरी लाग्ने सुख 'राजस' हो गम ।।

इन्द्रिय र तिनका विषयहरूको संयोगबाट उत्पन्न हुने अर्थात् आधिभौतिक (सांसारिक) सुखलाई राजस-सुख भन्दछन्, जो कि पहिले ता अमृतकै समान छ, परन्तु आखिरमा विष जस्तै बन्दछ ।।

---

१. लागी परीरहेको हुनाले । २. रमाउँदछ । ३. आत्मविषयक सुख । ४. रूपादि र चछुषा आदि । ५. अमृत जस्तो ।

यदग्रे चानुबन्धे च सुखं मोहनमात्मनः ।।
निद्रालस्यप्रमादोत्थं तत्तामसमुदाहृतम् ।।३९।।

**आलस्य, भूल निद्राले उब्जने सुख 'तामस' ।**
**[1]अघी पछी सदा जस्ले बेहोशै हुन्छ मानिस ।।**

जो आरंभमा र परिणाममा पनि मनुष्यलाई मोहमा फसाउँदछ, अनि जो निद्रा, आलस्य र प्रमाद अर्थात् कर्तव्यको भूलबाट उब्जन्छ, त्यसलाई तामससुख भन्दछन् ।।

गुणभेदलेसारा जगत्को तीनभेद -

न तदस्ति पृथिव्यां वा दिवि देवेषु वा पुनः ।।
सत्त्वं प्रकृतिजैर्मुक्तं यदेभिः स्यात्त्रिभिर्गुणैः ।।४०।।

**छैन त्यस्तो [2]कुनै भूमि-स्वर्ग-देव-विषे पनि ।**
**[3]गुणले जो प्रकृतिका छुटेको होस् पृथक् बनी ।।**

यस पृथिवीमा, आकाशमा वा देवताहरूमा अर्थात् देवलोकमा पनि यस्तो पदार्थ कुनै छैन, जो प्रकृतिका यिनै तीन गुणबाट मुक्त (छुटकारा पाएको) होस् ।।

गुणभेदले ब्राह्मणादि ४ जातका कर्म -

ब्राह्मणक्षत्रियविशां शूद्राणां च परन्तप ।।
कर्माणि प्रविभक्तानि स्वभावप्रभवैर्गुणैः ।।४१।।

**विप्र, क्षत्री तथा वैश्य, शूद्रका यी थरी-थरी ।**
**छुट्ट्याइन्छन् सबै कर्म स्वभाव[4]-गुणले गरी ।।**

---

१. आदि र अन्त्यमा । २. चीज । ३. सत्व-रज तमोगुणले ।
४. स्वभावैदेखि सिद्ध भएका गुणले ।

हे परन्तप ! ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रहरूका कर्म, उनका स्वभाव जन्य अर्थात् प्रकृतिसिद्ध गुणहरूको अनुसार पृथक्-पृथक् बाँडिएका छन् ।।

शमो दमस्तपः शौचं क्षान्तिरार्जवमेव च ।।
ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्म स्वभावजम् ।।४२।।

[1]स्वभावात् हो 'ब्रह्म[2]-कर्म,' शान्ति, शौच, तपस्, शम ।
ज्ञान, विज्ञान, दम र सोझ्याई, [3]आस्तिकी-पन ।।

ब्राह्मणको स्वभावजन्य कर्म (धर्म) शम, दम, तप, पवित्रता, शान्ति, शरलता, ज्ञान विज्ञान र आस्तिक्यबुद्धि यही हो ।।

शौर्य तेजो धृतिर्दाक्ष्यं युद्धे चाऽप्यपलायनम् ।।
दानमीश्वरभावश्च क्षात्रं कर्म स्वभावजम् ।।४३।।

स्वभावात् हो [4]'क्षत्र-कर्म' बठ्याँई, तेज, शूरिनू ।
नभाग्नू युद्धमा, हुक्म गर्नू, धैर्य लिनू, दिनू ।।

शून्याँई तेजिलोपना, धैर्य, बन्ध्याँई युद्धबाट नभाग्नु र प्रजामाथि हुकुम गर्नु-यही क्षत्रियहरूको स्वभाविक कर्म (कर्तव्य धर्म) हो ।

कृषिगौरक्ष्यवाणिज्यं वैश्यकर्म स्वभावजम् ।।
परिचर्यात्मकं कर्म शूद्रस्यापि स्वभावजम् ।।४४।।

खेती, व्यापार, [5]गोरक्षा, स्वभावात् 'वैश्य[6]-कर्म' हो ।
चाकरी-गरनू खाली स्वभावात् [7]'शूद्र-कर्म' हो ।।

---

१. प्रकृति स्वभावैले! २. ब्राह्मणको कर्म । ३. शास्त्रले भनेको कुरामा श्रद्धा। ४. क्षत्रियको कर्म । ५. गौशाला आदि खोलेर पशुपालना गर्नु । ६. वैश्यको कर्म । ७. शूद्रको कर्म ।

कृषि अर्थात् खेती, गोरक्षा अर्थात् पशुहरूलाई पाल्नाको उद्यम् , अनि वाणिज्य अर्थात्-व्यापार वैश्यहरूको स्वभावजन्य कर्म (धर्म) हो।। यस्तै चाकरी (सेवा) गर्नु शूद्रहरूको स्वाभाविक कर्म (धर्म) हो ।।

## स्वकर्माचरणबाट परमसिद्धि -

स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः ।।
स्वकर्मनिरतः सिद्धिं यथा विन्दति तच्छृणु ।।४५।।

आफ्ना आफ्ना गरी कर्म सिद्धि पाउँदछन् जन ।
स्वकर्म गर्दा जसरी सिद्धि मिल्दछ त्यो सुन ।।

आफ्ना आफ्ना स्वभावजन्य गुणको अनुसार प्राप्त भएको कर्ममा सर्वदा रत रहने पुरूषले त्यसैबाट परम सिद्धि पाउँदछ, आफ्ना कर्ममा तत्पर रहनाले कसरी सिद्धि मिल्ने हो? त्यो कुरा सुन ।।

यतः प्रवृत्तिर्भूतानां येन सर्वमिदं ततम् ।।
स्वकर्मणा तमभ्यर्च्य सिद्धिं विन्दति मानवः ।।४६।।

यो [1]भूत-जात [2]जसबाट निस्क्यो, [3]विस्तार भो सब ।
[4]स्वकर्मले त्यै पूजेर सिद्धि पाउँछ [5]मानव ।।

सारा प्राणीको जसबाट प्रवृत्ति भएको छ, अर्थात् उत्पन्न भएको छन् , जसले सबै जगत् व्याप्त छ (ढाकिएको छ) त्यस (परमात्मा) लाई स्वधर्मानुसार प्राप्त भएका कर्महरूको द्वारा (खालि स्तोत्र र फूलहरूले मात्र होइन) पूजा गर्नाले मनुष्यलाई सिद्धि प्राप्त हुन्छ ।।

---

१.प्राणीहरूको समुदाय । २. जुन परमात्माबाट । ३. फैलाईयो ढाकियो । ४. आफ्नो जात अनुसारको कर्मले । ५. मानिस ।

दोषी भयेपनी स्वधर्म अत्याज्यछ-

श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।।
स्वभावनियतं कर्म कुर्वन्नाप्नोति किल्बिषम् ।।४७।।

राम्रो [1]अरू धर्म भन्दा दोषी श्रेष्ठ छ आफनू ।
स्वजातको गरी कर्म पाप लाग्दैन बूझनू ।।

परधर्मको आचरण सजिलो होस् तापनि त्यो भन्दा आफ्नो धर्म अर्थात् चातुर्वर्ण्यविहित कर्म, विगुण अथवा दोषयुक्त भए‌मा पनि ज्यादा नै कल्याणकारी हुन्छ, स्वभावसिद्ध अर्थात् गुण स्वभावानुसार निर्माण गरिएको, चातुर्वर्ण्य व्यवस्थाद्वारा नियत भएको, आफ्नो कर्म गर्दा मनुष्यलाई केही पाप लाग्दैन ।।

सहजं कर्म कौन्तेय ! सदोषमपि न त्यजेत् ।।
सर्वारंभा हि दोषेण धूमेनाग्निरिवावृताः ।।४८।।

न छोडोस् आफना कर्म पार्थ ! दोषी पनी कबै ।
छन् [2]दोष-व्याप्त [3]उद्योग [4]धूमले अग्नि झैं सबै ।।

हे कौन्तेय ! जो कर्म सहज छ अर्थात् जन्मदेखी नै गुण कर्म विभागानुसार नियत भएको छ, दोषयुक्त होस् तापनि त्यसलाई कहिल्यै छोड्नु हुँदैन, किनभने संपूर्ण आरंभ अर्थात् उद्योगधन्दाहरू केही न केही दोषले त्यसरी नै व्याप्त गरिएका छन् , जस्तै कि धूवाँले आगो धेरिएको हुन्छ ।।

असक्तबुद्धिः सर्वत्र जितात्मा विगतस्पृहः ।।
नैष्कर्म्यसिद्धिं परमां संन्यासेनाधिगच्छति ।।४९।।

---

१. पराई को धर्म । २. दोषले ढाकिएका । ३. उद्यम-धन्दाहरू । ४. धुवाँले ।

**जो [१]सर्वत्र [२]अनासक्त, जितचित्त, [३]निरीह्छ ।**
**[४]नैष्कर्म्यसिद्धि त्यै [५]उच्चत्यागले गरि पाउँछ ।।**

यस कारण जसले कहीं पनि आसक्ति नराखेर, मनलाई वशमा गरी निष्काम बुद्धिले चलन बर्तन गर्दछ त्यसले कर्मफलको संन्यासद्वारा ठूलो नैष्कर्म्यसिद्धि (मोक्ष) पाउँदछ ।।

सारा कर्मगरी सिद्धिहुने निरूपण -

सिद्धिं प्राप्तो यथा ब्रह्म तथाऽप्नोति निबोध मे ।
समासेनैव कौन्तेय ! निष्ठा ज्ञानस्य या परा ।।५०।।

**सिद्धिले जसरी [६]ब्रह्म प्राप्त गर्छ, मबाट त्यो ।**
**सुन संक्षेपले, उच्च [७]ज्ञान-निष्ठा कहिन्छ जो ।।**

हे कौन्तेय ! यस प्रकार सिद्धि भएमा त्यस पुरूषलाई ज्ञानको परमनिष्ठारूप ब्रह्म जुन रीतले प्राप्त हुन्छ, त्यस्को म संक्षेपले वर्णन गर्दछु सुन ।।

बुद्ध्या विशुद्धया युक्तो धृत्यात्मानं नियम्य च ।।
शब्दादीन्विषयांस्त्यक्त्वरागद्वेषौ व्युदस्य च ।।५१।।

**धैर्यले मन बाँधेर, शुद्ध बुद्धि सदा धरी ।**
**छोडी शब्दादिविषय, प्रेम द्वेष परै गरी ।।**

शुद्ध बुद्धिले युक्त भई, धैर्यले आत्मसंयमन गरेर, इन्द्रिय (श्रोत्र आदि) का शब्द आदि विषयलाई छोडी, प्रेम र द्वेष (निन्दा हटाएर)

---

१. जेसुकैमा पनि । २. आसक्ति नराख्ने । ३. ईच्छाले रहित। ४. मुक्ति । ५. ईश्वरार्पणरूप कर्मत्यागले । ६. परमात्मा । ७. ज्ञानको स्थान ।

विविक्तसेवी लध्वाशी यतवाक्कायमानसः ।।
ध्यानयोगपरो नित्यं वैराग्यं समुपाश्रितः ।।५२।।

**एकान्तमा बसी, थोरै खाई, देह तथा मन ।**
**बोली [१]रूद्ध गरी, [२]ध्यान धरी, बैराग्य लीकन-**

एकान्तस्थलमा रहने, परिमित आहार गर्ने, शरीर वचन र मनलाई वशमा राख्ने, सदा ध्यानयुक्त र विरक्त हुने - ।।

अहंकारं बलं दर्पं कामं क्रोधं परिग्रहम् ।।
विमुच्य निर्ममः शान्तो ब्रह्मभूयाय कल्पते ।।५३।।

**काम, क्रोध, [३]अहन्तादि, बल, [४]दर्प, [५]परिग्रह ।**
**छोडी, शान्त हुने जो छ, हुन्छ त्यो ब्रह्ममा लय ।।**

अनि अहंकार, बल, घमण्ड, काम क्रोध र परिग्रह अर्थात् स्त्री पुत्र गृह संपत्ति इत्यादि पाश (बन्धन) लाई छोडेर, शान्त र ममताले रहित हुन, पुरूष ब्रह्मभुत (ब्रह्मकै स्वरूप) हुनमा समर्थ हुन्छ ।।

ब्रह्मभूतः प्रसन्नात्मा न शोचति न कांक्षति ।।
समः सर्वेषु भूतेषु मद्भक्तिं लभते पराम् ।।५४।।

**[६]ब्रह्मभूत, [७]विशुद्धात्मा शोक-चाह लिंदैन त्यो ।**
**सम भै सबमा, मेरो भक्ति पाउँछ [८]हद्दको ।।**

ब्रह्मस्वरूप बनेपछि, प्रसन्न चित्त भएर, त्यो पुरूष न केही

---

१. रोकिएको । २. परमात्माको चिन्तन । ३. मेरो हो भन्ने भावना । ४. घमण्ड । ५. स्त्री-पुत्र-गृह संपति आदि । ६. ब्रह्मरूप भएको पुरुष । ७. शान्तचित्त भएको पुरुष। ८. परमसीमाको ।

चाहन्छ न त केहीको द्वेष गर्दछ र सब प्राणीमा समभाव राखेर, मेरो परम भक्ति प्राप्त गरी लिन्छ ।।

भक्त्या मामभिजानाति यावान्यश्चास्मि तत्वतः ।।
ततो मां तत्वतो ज्ञात्वा विशते तदनन्तरम् ।।५५।।

भक्तिले त्यो म जस्तो छू, यो सब जान्दछ ।
मलाई तत्वले जानी मैमा त्यो मिल्न आउँछ ।।

भक्तिले त्यसलाई मेरो तत्व हुन्छ, अनि म कस्तो हु? कुन हुँ? यस प्रकारको मेरो तात्विक ज्ञान भएमा त्यो पुरूष ममा नै प्रवेश गर्दछ ।।

सर्वकर्माण्यपि सदा कुर्वाणो मद्व्यपाश्रयः ।।
मत्प्रसादादवाप्नोति शाश्वतं पदमव्ययम् ।।५६।।

मेरो आश्रय[१] ली, पार्थ ! जति कर्म गरे पनि ।
मेरै [२]प्रसादले पुग्छ त्यो [३]परंपदमा मुनि ।।

अनि मेरो नै आश्रय गरेर, सब कर्म गरीरहेमा पनि, त्यसलाई मेरो अनुग्रहले शाश्वत (सनातन) र अव्यय (कहित्यै ननासिने) स्थान प्राप्त हुन्छ ।।

चेतसा सर्वकर्माणि मयि संन्यस्य मत्परः ।।
बुद्धियोगमुपाश्रित्य मच्चित्तः सततं भव ।।५७।।

मनले कर्म ती सारा गरी मैमा [४]समर्पण ।
[५]बुद्धियोग लिई नित्य मैमा[६] मन्मय नै बन ।।

---

१. शरण । २. अनुग्रहले । ३. बैकुण्ठमा । ४. संन्यास । ५. साम्यबुद्धिरूप योग । ६. परमेश्वरमा ।

मैमा मनले सारा कर्म अर्पण गरेर, मत्परायण हुँदै, साम्यबुद्धि-योग-को आश्रय लिई, हर्दम चित्त राख्ने होऊ ।।

मच्चित्तः सर्वदुर्गाणि मत्प्रसादात्तरिष्यसि ।।
अथ चेत्त्वमहंकारान्न श्रोष्यसि विनङ्क्ष्यसि ।।५८।।

चित्त मैमा दिए [१]सारा दुःखको पार पाउला ।
यो अहंकारले पार्थ ! नसुने नष्ट होउला ।।

ममा चित्त राखेपछि, तिमी मेरो अनुग्रहले सारा संकटलाई अर्थात् कर्मका शुभाशुभ फलहरूलाई पार गरेर जानेछौ, परन्तु यदि अहंकारको वश भएर मेरो कुरा सुन्दैनौ भने अवश्यमेव नासिनेछौ ।।

अहंकारी न बन प्रकृति नै सब गर्छ -

यदहंकारमाश्रित्य न योत्स्य इति मन्यसे ।।
मिथ्यैष व्यवसायस्ते प्रकृतिस्त्वां नियोक्ष्यति ।।५९।।

व्यर्थै लिई अहंकार युद्धबाट हट्यौ भने ।
तिम्रो त्यो [२]हठ पुग्दैन, [३]स्वभावै छ लगाउने ।।

तिमी अहंकारले जो यो ठान्दै भन्दछौ कि 'म युद्ध गर्नेछैन' तिम्रो यो निश्चय व्यर्थ छ, किनभने प्रकृति अर्थात् स्वभावले तिमीबाट यो युद्ध गराइछोड्नेछ ।।

स्वभावजेन कौन्तेय ! निबद्धः स्वेन कर्मणा ।।
कर्तुं नेच्छसि यन्मोहात्करिष्यस्यवशोऽपि तत् ।।६०।।

---

१. कर्मका शुभाशुभरूपी । २. जिद्दी । ३. प्रकृतिले नै ।

**बेसरी [१]बद्ध छौ पार्थ ! आफ्ना [२]सहज-कर्मले ।**

**लाचार उहि गर्नेछौ, जो छोड्छौ व्यर्थ मोहले ।।**

हे कौन्तेय! आफ्नो स्वभावजन्य कर्मले बाँधिएका हुनाले मोहको वश भएर तिमि जेलाई नगर्नाको इच्छा गर्दछौ, तापनि पराधीन अर्थात् प्रकृतिको अधीनमा परेर तिमीले त्यही (काम) नगरी सुखै पाउँनछैनौ ।।

ईश्वरकै शरण पर शान्तिमिल्छ-

ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन ! तिष्ठति ।।

भ्रामयन्सर्वभूतानि यन्त्रारूढानि मायया ।।६१।।

**पार्थ! ईश्वर साराको स्वयं हृदय-भित्र छ !**

**[३]यन्त्रारूढ सबैलाई [४]मायाले त्यो घुमाउँछ ।।**

हे अर्जुन! ईश्वरले प्राणीका हृदयमा रहेर आफ्नो मायाले प्राणी यावत्लाई यसरी घुमाइरहेको छ कि सब कुनै यन्त्रमथि चढाएर राखिएका झैं भएर घुमिरहेछन् ।।

तमेव शरणं गच्छ सर्वभावेन भारत ! ।।

तत्प्रसादात्परं शान्ति स्थानं प्राप्सयसि शाश्वतम् ।।६२।।

**सबै तरहले जाउ उस्कै शरण भारत ! ।**

**उस्कै [५]प्रसादले मिल्ला शान्ति र स्थान [६]शाश्वत ।।**

यसनिमित्त हे भारत ? तिमि सर्व-भावले (हर तरहले) उही

---

१. बाँधिएका । २. सँगै जन्मेका । ३. पीङ इन्जिन इत्यादिमा चढेका । ४. ईश्वरीय योगमायाले । ५. अनुग्रहले ।६. कहिल्यै ननासिने ।

(परमात्माका) शरणामा जाऊ (पर) उसैका अनुग्रहले तिमिलाई परम शान्ति र नित्य स्थान (परमपद) प्राप्त हुनेछ ।।

यो रहस्य कुरासंझी जे गर्छौगर

इति ते ज्ञानमाख्यातं गुह्यात् गुह्यतरं मया ।।
विमृश्यैतदशेषेण यथेच्छसि तथा कुरु ।।६३।।

अत्यन्त गुप्त यो ज्ञान भन्नें मैले भएभर ।
यो संपूर्ण विचारेर जो चाहन्छौ उही गर ।।

यस प्रकारले यो गुह्य भन्दा पनि अति गुह्य ज्ञान मैने तिमिलाई बताएको छ, यसको पूर्ण विचार गरेर जस्तो तिम्रो इच्छा हुन्छ उस्तै गर अर्थात् जे मन लाग्छ उही गर ।।

ईश्वरकै शरणले पाप बाट छुट्कारा-

सर्वगुह्यतमं भूयः शृणु मे परमं वचः ।।
इष्टोऽसि मे दृढमिति ततो वक्ष्यामि ते हितम् ।।६४।।

फेरि [1]रहस्य सबको मुख्य बात सुनाउँछु ।
मेरो ज्यादै पियारा छौ, यसैले हित भन्दछू ।।

अब, आखिरीको एक कुरा जो कि सबभन्दा गुह्य (रहस्यपूर्ण) छ, तिमि मलाई ज्यादै प्यारो लाग्दछौ, त्यसै उसले म तिमिलाई हित गर्ने कुरा बताउँछु ।

मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु ।।
मामेवैष्यसि सत्यं ते प्रतिज्ञाने प्रियोऽसि मे ।।६५।।

---

१. बहुतै गुप्त ।

[1]ममा मन ममा भक्ति, मेरै [2]अर्चन-वन्धन ।
गर, मिल्छौ ममा, प्यारा छौ, साँचै भन्छु अर्जुन ! ।।

ममा आफ्नो मन राख अर्थात् सधैं मलाई नै संझ मेरो भक्त होउ, मेरो यजन (पूजन) गर, मलाई नै नमस्कार गर, म तिमिसंग सत्य प्रतिज्ञा गरेर भन्दछु कि यसो गर्नाले तिमि म (परमेश्वर) मा नै मिल्न आउनेछौ, किनभने तिमि मेरा प्यारा भक्त छौ ।।

सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज ।।
अहंत्वा सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः ।।६६।।

सारा धर्महरू छोडी, मेरै शरणमा पर ।
छुटाऊँला सबै पाप, शोक छोड[3], [4]धनुर्धर ।।

सब धर्मलाई छोडेर तिमि केवल मेरै शरणमा आऊ (पर) म तिमि लाई सारा पापबाट छुटाउनेछु, नडराऊ, शोक नगर ।।

कर्मयोगको परंपरा चलाउनाले श्रेयछ-

इदं ते नातपस्काय नाभक्ताय कदाचन ।।
न चाशुश्रूषवे वाच्यं न च मां योऽभ्यसूयति ।।६७।।

जो भक्ति, तप गर्दैन सुन्नमा दिन्न जो [5]मति ।
मेरो निन्दा पनी गर्छ, उस्मा यो नभने रती ।।

जो तप गर्दैन, भक्ति गर्दैन, औ सुन्नाको इच्छा पनि राख्दैन, अनि जो मेरो निन्दा पनि गर्दछ, त्यस मानिसलाई यो रहस्य कहिल्यै नवताउनू ।।

---

१. परमेश्वर । २. पूजा र नमस्कार । ३. नगर । ३. हे धनुर्धारी अर्जुन । ५. बुद्धि ।

य इमं परमं गुह्यं मद्भक्तेष्वभिधास्यति ।।
भक्तिं मयि परां कृत्वा मामेवैष्यत्यसंशयः ।।६८।।

जसले यो ज्ञानको तत्व भक्तमा नै बताउला ।
त्यसको ममा भक्ति बढ्ला, मैमा [1]निश्चय आउला ।।

जुन पुरुषले यो परम रहस्य मेरा भक्तहरूलाई बताउला, त्यसको म उपर उत्तम भक्ति बढ्नेछ र त्यो निस्सन्देह ममा नै आएर मिल्नेछ, अर्थात् मेरै स्वरूप हुनेछ ।।

न च तस्मान्मनुष्येषु कश्चिन्मे प्रियकृत्तमः ।।
भविता न च मे तस्मादन्यः प्रियतरो भुवि ।।६९।।

त्योभन्दा हुन्न लौ [2]अर्को मेरो प्रिय गरीलिने ।
हुनेछैन कुनै मेलो त्योभन्दा [3]प्रिय संझिने ।।

त्यो पुरुषभन्दा मलाई प्यारो गर्ने, सब मनुष्यमा दोस्रो औ कुनै हुनेछैन, पाइन्यैछैन ।।

गीतापाठको फल र महात्म्य-

अध्येष्यते च य इमं धर्म्यं संवादमावयोः ।।
ज्ञानयज्ञेन तेनाहमिष्टः स्यामिति मे मतिः ।।७०।।

[4]जो [5]हाम्रो धर्म-संवाद-पाठमा मन लाउला ।
[6]ज्ञानयज्ञ गरी त्यसले[7]पुजिए भनि ठानुँला ।।

---

१. अवश्यमेव । २. अरू कुनै मानिस । ३. प्यारो । ४. जुन पुरुष। ५. धर्मयुक्त संवाद (गीता) पाठ गर्नामा । ६. निष्कामकर्मयोगरूप ज्ञानयज्ञले । ७. पूजा गरिएँ ।

जो हामी दुइ जनाको यो धर्म-संवाद (गीता) पाठ गर्ला, त्यस पुरुषले ज्ञानयज्ञकै द्वारा मेरो पूजा गर्‍यो भनी म संझनेछु ।

श्रद्धावाननसूयश्च शृणुयादपि यो नरः ।।
सोऽपि मुक्तः शुभांल्लोकान्प्राप्नुयात्पुण्यकर्मणाम् ।।७१।।

[1]दोष छोडी लिई श्रद्धा, जस्ले यो सब सुन्दछ ।
[2]पुण्यवान्का [3]लोकमा त्यो [4]मुक्त भै पुग्न पाउँछ ।।

यसनिमित्त, दोष नखोजेर, श्रद्धासाथ जो कोही यसलाई सुन्ला त्यो मनुष्य पनि पापहरूबाट मुक्त भएर, तिनै शुभलोकमा पुग्न जानेछ, जो कि पुण्यकर्म गर्नेहरूलाई मात्र प्राप्त हुन्छन् ।।

अर्जुनलाई कर्तव्यगर्नामा चेतावनी-

कच्चिदेतच्छ्रुतं पार्थ ! त्वयैकाग्रेण चेतसा ।।
कच्चिदज्ञानसंमोहः प्रणष्टस्ते धनञ्जय ।।७२।।

सुन्यौ कि तिमिले सारा भई एकाग्र पाण्डव ! ।
अज्ञानरूपी त्यो [5]मोह[6]नासियो कि सबै अब? ।।

हे पार्थ ! तिमिले यो सब कुरा एकाग्र मन गरेर सुन्यौ कि सुनैनौ? अनि हे धनञ्जय तिम्रो अज्ञानरूपी मोह, अब सब तरहबाट नाश भयो वा भएन ? ।।

कर्तव्यसंझेर अर्जुनको तैयारी-

अर्जुन उवाच-

नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाच्युत ।।
स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तव ।।७३।।

---

१. कुबुद्धे । २. धर्मात्माहरूका । ३. स्वर्गादि लोकमा । ४. कर्म बन्धनबाट छुटकारा पाई । ५. मनको धमिलोपन । ६. छुट्यो ।

करुणाले छुट्यो मोह, [1]संझना भो, जनार्दन! ।
निसन्देह भएँ, गर्छू प्रभुको [2]वाक्य-पालन ।।

अर्जुनले बिन्ती गरे- हे अच्युत ! हजूरका अनुग्रहले मेरो मोह नष्ट भयो, मलाई कर्तव्यधर्मको संझना भएको छ, म अब निस्सन्देह बनेको छु, हजूरको उपदेशानुसार युद्ध गर्नेछु ।

गीता को संजयकृत उपसंहार-

सञ्जय उवाच

इत्यहं वासुदेवस्य पार्थस्य च महात्मनः ।।
संवादमिममश्रौषमद्भुतं रोमहर्षणम् ।।७४।।

मैले श्रीकृष्णको त्यस्तै महात्मा पार्थको पनि ।
[3]रोमाञ्चकारी संवाद[4]अद्भुतै यो लिएँ सुनी ।।

सञ्जयले बिन्ती चढाए-महाराज ! यस प्रकारशरीरलाई रोमाञ्चित गर्ने भएको, वासुदेव र महात्मा अर्जुनको यो अद्भुत संवाद (बातचीत रुप का गीता) मैले सुनें ।

व्यासप्रदाच्छ्रुतवानेतद्गुह्यमहं परम् ।।
योगं योगेश्वरात्कृष्णात्साक्षात्कथयतः स्वयम् ।।७५।।

[5]व्यासानुग्रहले मैले [6]गुह्य यो [7]योग उत्तम ।
[8]प्रत्यक्षवक्ता, [9]योगेश, कृष्णबाट सुनें सब ।।

व्यासजी को अनुग्रह हुँन्दा, मैले यो परमगुह्य योग अर्थात् कर्मयोग साक्षात् योगेश्वर कृष्णजीके सुनेको हूँ ।

---

१. स्वकर्तव्य-स्मरण । २. आज्ञापालन (युक्त) । ३. शरीरमा काँढा उमार्ने । ४. परस्परको बातचीत । ५. व्यासको कृपाले । ६. रहस्य। ७. कर्मयोग मार्ग । ८. साक्षात् कहने । ९. योगेश्वर ।

